# सुम्निमा

## किरात देशको एउटा कथा

विश्वेश्वरप्रसाद कोइराला



**TU Central Library of Nepal Cataloguing-in-Publication Data**

कोइराला, विश्वेश्वरप्रसाद

सुम्निमा : किरात देशको एउटा कथा /विश्वेश्वरप्रसाद कोइराला. - आठौं संस्क.- ललितपुर : साझा प्रकाशन, २०६६ वि.

६, ९४ पृ.

ISBN 978-99933-2-812-4

१. नेपाली उपन्यास I. आख्या.

N891.4953
Ko475s – dc 22 20090969

प्रकाशक : साझा प्रकाशन

संस्करण : पहिलो, २०२७, दोस्रो, २०४३ (प्रशान्त प्रकाशन)
तेस्रो २०५०, चौथो २०५१, पाँचौं २०५४, छैठौं २०५७
सातौं, २०६१
आठौं, २०६६ (साझा प्रकाशनबाट छैठौं पटक, ५१०० प्रति)

मूल्य : रु. ७५।–

मुद्रक : साझा प्रकाशनको छापाखाना, पुलचोक, ललितपुर
फोन : ५५२१०२३, फ्याक्स : ५५४४२३६

# अघिल्लो संस्करणको प्रकाशकीय

नेपाली भाषा-साहित्यको विकासमा वाराणसीको धेरै ठूलो महत्त्व रहेको कुरा सर्वविदित छ । आदिकालदेखि नै नेपालको सम्बन्ध वाराणसीसँग घनिष्ठ रहिआएको थियो । आज पनि उत्तिकै रहेको छ । नेपाली भाषा-साहित्यका ग्रन्थको प्रकाशन मोतीराम भट्टकै समयदेखि वनारसमा हुन थालेको हो । यो क्रम टुटेको छैन ।

मलाई आज अति खुशी लागेको छ– स्व. विश्वेश्वरप्रसाद कोइरालाको कृति सुम्निमा छाप्ने सुअवसर प्राप्त भयो । यसअघि पनि स्व. तारिणीप्रसाद कोइरालाका कृतिहरू हाम्रो प्रकाशनबाट छापिएका छन् । स्व. वी.पी. को जीवनकालमा नै मैले यस्तो अवसर पाएको थिएँ । कतिपय कठिनाइले इच्छा पूर्ण हुन सकेन । अहिले श्री सुशील कोइरालाको सद्भावनाले गर्दा स्व. वी.पी. का कृतिहरू छाप्ने सुअवसर प्राप्त भयो । हामी आफ्नो यस प्रकाशनबाट निरन्तर नेपाली भाषा-साहित्यको प्रकाशन गरिरहनेछौं । केही त्रुटि भएमा क्षमाप्रार्थी छौं ।

**मदनमोहन धवन**
प्रशान्त प्रकाशन, वाराणसी

# प्रकाशकीय

बहुआयामिक व्यक्तित्वका धनी विश्वेश्वरप्रसाद कोइरालाको नेपाली साहित्यजगत्मा शीर्षस्थान छ । विशिष्ट राजनेता भएर पनि साहित्यसाधनामा उत्तिकै योगदान पुऱ्याउन सक्नु श्री कोइरालाको विशेषता रहेको छ ।

नेपाली साहित्यमा विशेषतः कथा र उपन्यासद्वारा मनोविश्लेषण, यौनमनोविश्लेषण-परम्परा विकसित पार्नमा श्री कोइरालाको महत्त्वपूर्ण योगदान रहेको छ ।

साहित्यलाई राजनीतिभन्दा माथि उच्चतम विषय मान्नुहुने श्री कोइरालाको लेखनशैली, भाषिक प्रयोग, वाक्यगठन एवं रचनाशिल्प समकालीनहरूको तुलनामा धेरै पृथक् छ । "समाजइच्छाभन्दा व्यक्तिइच्छा ठूलो हो । त्यसकारण व्यक्तिका दमित इच्छा, भावना एवं मनोद्वेगहरूलाई स्वतन्त्र आत्मनिर्णय गर्न दिनुपर्छ ।" –साहित्यकार कोइरालाको मूलसन्देश ।

नेपाली वाङ्मयका चर्चित व्यक्तित्व श्री विश्वेश्वरप्रसाद कोइरालाका कृतिहरूमध्ये 'सुम्निमा' कृतिको आफ्नै महत्त्व छ । मूल्याङ्कन गर्ने काम पाठकहरूको हो । उहाँको प्रस्तुत 'सुम्निमा' कृति प्रकाशन गर्न पाएकोमा साझा प्रकाशन गौरव अनुभव गर्दछ ।

**साझा प्रकाशन**

# उपकथा

धेरै-धेरै पहिलेको कथा हो यो, अतीतको यति धमिलो गर्भबाट आएको कि वर्तमानमा हाम्रो कानमा यो पुराणजस्तो ध्वनित हुन्छ। प्राचीन वृत्तान्तहरूलाई आजकालका हामी आफ्नो वैयक्तिक अनुभवद्वारा ग्रहण गर्न सक्दैनौं; ती हाम्रा जीवनका जीवित अनुभूति हुन सक्दैनन्। न आफ्नो प्रेमको न्यानोले हाम्रो हृदयलाई तताउन सक्छन्, न आफ्नो दुःखले हाम्रो आँखालाई रसाउन नै सक्छन्। हाम्रो जीवनको अनुभवसँग असम्बद्ध ती पुराना घटनाहरूले सत्य र असत्यको मापबाट आफूलाई एकदम मुक्त पारिसकेका हुन्छन्। हामी यो अनुसन्धान गर्दैनौं कि कहाँसम्म त्यसका वर्णन सत्य छन् या असत्य। यदि तिनले हामीमा चाख उत्पन्न गराउन सक्दछन् भने केवल यस कारणले कि ती कथाहरूमा हामी स्थान-कालोत्तरका केही सङ्केत पाउँछौं केही प्रतीकात्मक प्राप्ति तिनमा रहेकाले। दश हजार वर्ष बाँच्ने ऋषि वैज्ञानिक सत्य होइन, न चित्रकारले कागतमा रँगेको रातो सूर्य नै वैज्ञानिक सत्य हो। ती प्रतीक हुन्। अनुभवभन्दा बाहिर पाउन सक्ने चाख प्रतीकात्मक हुन्छ, सङ्केतजनित। त्यसैले यो कथा सत्य र असत्यको तराजुमा नजोखिने एउटा वृत्तान्त हो। यसको महत्त्व पौराणिक छ, सङ्केतमय, प्रतीकात्मक।

हिमालयका पर्वतहरूका कुना-काप्चाभित्र नागबेली बनाउँदै कौशिकी नदी पहाडहरूको काखको बन्धनबाट फुत्केर एउटी वयप्राप्त रमणी आफ्नो उन्मुक्ततामा मातृगृह त्यागी उम्केजस्ती वराहक्षेत्रको चतरानामक समथल प्रदेशमा आफ्नो सम्पूर्ण प्रवेग र शक्तिका साथ हठात् सहस्र कण्ठले सीत्कार गर्दै निस्कन्छिन्। त्यो प्रान्त अनेक किसिमका वृक्ष, गुल्म, लता र भ्याङको बाक्लो वन-जङ्गलले यसरी आविष्ट थियो मानौं त्यो एउटा भूखण्ड नभएर गाढा हरियो रङको सघन कालिमामय दैवी टाटो हो– पृथ्वीउपर जमोठ भएर त्यसै अडिरहेको। वायुमा पनि सजल हरितिमा व्याप्त रहन्थ्यो। त्यो हरियोपनको महासागरले पृथ्वीको यावत् लक्षणलाई गर्भस्थ गरेको थियो, यहाँसम्म कि पश्चिमतिरको शैवालिक पर्वतसमेत त्यसमा डुबेर अस्तित्वहीन हुन गएको थियो। उत्तरमा केही टाढासम्म त्यो हरियो साम्राज्यको सीमा थियो, र त्यसको पारि माथि आकाशको हाराहारीमा हिमालयका पर्वत-शिखरहरू त्यो आक्रान्तबाट उम्केर आफ्नो टाउको खडा गरिरहेका थिए। त्यो सघन हरितिमाको मध्यलाई कुनै धारिलो वक्र

खड्गले छिन्न गर्दै, आकाशलाई आफ्नो वक्षमा टल्काउँदै कोशी नदी नीलो फलामे धारको प्रखर ओजमा प्रवाहित हुन्थिन्। तिनताका अनुश्रुति थियो कि त्यहीं गाधिपुत्र महर्षि विश्वामित्रले आफ्नो आश्रम स्थापित गरेका थिए। नदीतटको एउटा सानो अधित्यकालाई देखाएर मानिसहरू भन्ने गर्थे–'विश्वामित्रको आश्रम त्यही स्थलमा स्थापित थियो ।' युगल किशोर राम र लक्ष्मणका गुरु भएपछि आफ्ना ती मेधावी शिष्यहरूलाई एकपटक आफ्नो आश्रमको दर्शन गराऊँ भन्ने उनको इच्छा हुँदो हो, तर यात्रा खण्डित भयो जनकपुरसम्म पुगेर, जहाँ रामले आफ्नो कौशल र पराक्रम सिद्ध गर्ने प्रयत्नमा जनककुमारी सीतालाई पत्नीको रूपमा प्राप्त गरे। रामको बिहा भएपछि स्थिति नै अर्को भयो। उनीहरू आफ्नो राजधानी अयोध्या फर्के सीतालाई लिएर। यसले गर्दा विश्वामित्रको आश्रमसम्म राम र लक्ष्मणको यात्रा हुन सकेन। यो महान् गौरवबाट चतराको भूमि सदाका लागि वञ्चित रहन गयो।

जुन कालको यो वृत्तान्त हो त्यस बेला विश्वामित्र एउटा पौराणिक ऋषिका रूपमा मात्र स्मरणीय थिए। विश्वामित्रको शेषपछि त्यो स्थलको यज्ञवेदी निरग्नि भयो र यज्ञधूमले आकाश शून्य। सहस्र कण्ठबाट ध्वनित हुने वेदपाठ थामियो। आश्रमका पर्णकुटीहरू केही कालसम्म शून्यमा चियाएर उभिरहे, फेरि एक-एक गरी भूमिसात् हुँदै लोप हुन गए। समीप नै पर्खिरहेको वनले बिस्तार-बिस्तार त्यो स्थललाई आफ्नो मातृ-अङ्कमा पुनः टाँसेर लोप गरिदियो। एउटा उच्चा स्थलको चिह्नको प्रमाणबाहेक अरू केही नरहेकोले अनुश्रुतिको ऐतिहासिकतालाई बल प्राप्त हुन सकेन। उत्तर पहाड-भेगपट्टि किरातीहरू आफ्नो पुरानो स्थितिमा रहे। तिनका लागि विश्वामित्र, उनको आगमन र क्रियाकलाप सपनामा देखेको दृश्यजस्तो एकछिन प्रकट भई बिलाएर गयो। त्यस्तै भयो दक्षिण-पूर्वपट्टिका भिल्लहरूलाई पनि। जङ्गलभित्र रहेका उनीहरूका साना-साना बस्ती आफ्ना पुराना चालमा चलेका चलेकै रहे। किराती र भिल्लहरूको स्मृतिबाट विश्वामित्र र उनको आश्रमको चहलपहल पूर्णतया लोप भयो– केही पनि चिह्न नछाडेर। जसरी पृथ्वीले उनको चिह्नलाई पुछेर मेटाइदिएको थियो त्यसरी नै यी जातिहरूले पनि मेटाइदिए।

## १

कालान्तरमा त्यही थलोलाई रोजेर तापसी ब्राह्मणदम्पतीले आफ्नो आश्रम बनाए। स्थान रमणीय थियो; वन-जङ्गलका कन्दमूल र फलफूलले भरिएको र नजिकै तल शीतल जलवाहिनी नदी कौशिकी थिइन्। ठाउँ केही उच्चा भएकोले स्वस्थकर पनि थियो।

गार्हस्थ्य जीवनलाई छाडेर उनीहरू आफ्नो एउटा पुत्रका साथ अरण्यवासका लागि यहाँ पुगेका थिए। उनीहरूले यो पनि सोचेका थिए कि वानप्रस्थमा प्रवेश गरेर कालयापन गर्दा आफ्नो पुत्रलाई पनि ब्राह्मणोचित सद्धर्म र उच्च जीवनको शिक्षा दिन सुलभ हुन्छ। गाउँमा उसलाई छाडेर आउँदा उसको शिक्षाको राम्रो व्यवस्था हुन सक्दैन भन्ने उनीहरूले देखेका थिए। पुत्रलाई किशोर अवस्थामा, कठोर अनुशासित जीवनमा राखेर शिक्षा दियो भने ऊ आदिकालका ऋषिहरूको समकक्षी हुन सक्छ भन्ने उनीहरूलाई पूर्ण विश्वास थियो। उनीहरूलाई आफ्नो पुत्रबाट ठूलो आशा थियो। पुत्र पनि मेधावी थियो। सानै उमेरमा उसमा ठूल्ठूला लक्षण प्रकट भएका थिए। उसको स्मरणशक्ति अद्‌भुत थियो– एकपटक सुनेको श्लोक उसलाई कण्ठस्थ हुन्थ्यो। उसको कुशाग्रबुद्धिको ठूला-ठूला पण्डितहरूले पनि जनपदमा प्रशंसा गरेका थिए। त्यसकारण उनले पुत्रलाई अरण्यमा आफैँसँग राख्ने विचार गरेका थिए। उसको नाम थियो– सोमदत्त।

सोमदत्तकै हितलाई ध्यानमा राखेर अरण्यवासी हुनुभन्दा पूर्व नै पुत्रको यज्ञोपवीत संस्कार सम्पन्न हुनुपर्छ भन्ने मातापिताले विचार गरे। पिता सूर्यदत्तले भने,– "अन्यथा वनमा त्यसको व्यवस्था सुलभ हुन सक्दैन।"

माताले पनि समर्थन गर्दै भनिन्,– "सौभाग्यले एक जना विद्वान् महापण्डित पनि आजकल गाउँमा नै छन्, अहिले उनलाई पुरोहित नियुक्त गर्ने सुअवसर पनि हामीलाई प्राप्त छ।" यही निर्णयअनुसार सोमदत्तको द्विजधर्मानुकूल व्रतबन्ध सम्पन्न भयो। जुन निष्ठा र निपुणताका साथ त्यस बालकले यज्ञोपवीत संस्कारसम्बन्धी यज्ञादि क्रिया सम्पन्न गर्‍यो त्यसलाई लक्ष्य गरेर ऋत्विज् एवं ब्राह्मणसमुदायले धन्य-धन्य गरे। उसको संस्कारपूर्ण वेदपाठ र शुद्ध मन्त्रोच्चारणले उपस्थित मण्डली मुग्ध भयो, र जब ऊ मुन्जको लँगौटी र कौपीन धारण गरी राङ्कवखण्डलाई बायाँ काँधमा राख्दै पलासदण्ड टेकेर भिक्षा माग्न थाल्यो–'भवतु भवतु भिक्षां मे देहि....' उसको मुण्डित शिरका उपर हल्लिएको गोखुरपरिमाणको शिखा र कृश बालमुखमा चम्किएका युगल चक्षुलाई देखेर सबैले भने,– "यो बालक एउटा श्रेष्ठ ब्राह्मण हुनेछ। महात्माका सबै विशिष्ट लक्षण यस बालकमा विद्यमान छन्।"

पिता सूर्यदत्तले समागत विद्वद्मण्डलीका प्रशंसा सुनेर हर्षित हुँदै मनमनै सङ्कल्प गरे, –'यो मेरो वंशमा ऋषि जन्मेको छ। यसको समुचित शिक्षादीक्षामा म अभाव रहन दिनेछैनँ।'

पुत्रको यज्ञोपवीत संस्कार सम्पन्न गरेपछि तत्काले उनीहरू वनतर्फ प्रस्थान गरे। उनीहरूलाई विदा गर्न सबै गाउँवासी गाउँको सुदूर सीमासम्म आए र मङ्गल-कामनाका साथ सबैले विदा दिए। सोमदत्तले एउटा सानो कौपीन लगाएको थियो र हातमा उसले पाठ गर्ने गरेको पुस्तक लिएको थियो। उपनयनका दिन जुन पलासको दण्ड टेक्दै उसले भिक्षा मागेको थियो त्यसैलाई टेकेर ऊ विदाइको दृश्य हेरिरहेको थियो। उसका समवयस्कहरू पनि आएका थिए। कसैपट्टि पनि उसको ध्यान थिएन। केवल मातापितालाई बीचबीचमा आग्रह गर्‍यो,– "अब कहिले जाने पिता ? कहिले प्रस्थान गर्ने माता ?"

उसको बालहृदय कुनै नयाँ अनुभवको रमाइलो सम्भावनाले उकासिएको हुँदो हो, तर ग्रामवासीहरूका लागि उसको यो आग्रह भविष्यमा ऊ निश्चय नै एक सिद्ध पुरुष हुनेछ भन्ने कुराको थप प्रमाण हुन गयो।

उत्तर दिशातर्फ प्रस्थान गरेको त्यो ब्राह्मणपरिवारलाई ग्रामवासीले धेरैबेरसम्म हेरिरहे। बटुक सोमदत्त लट्ठी टेकेर, पुस्तकको सानो पोको सम्हाल्दै आफ्नो सानो डेगले छिट्छिटो हिँडिरहेको थियो– अगाडि-अगाडि। एक-दुईपटक आमाबाबुले गाउँतिर फर्केर हेरे पनि, तर उत्तराभिमुखी सोमदत्तले फर्केर हेर्दा पनि हेरेन, एकसुरले अगाडि हिँडि नै रह्यो।

ग्रामवासीले यस्तो विलक्षण बालक देखेकै थिएनन्। गद्गद भएर हेर्दाहेर्दै उनीहरूका आँखामा धर्मभाव र ममताको आँसु टलपलायो। आँखा पुछ्दै उनीहरू आआफ्ना घर फर्के। सबैको चर्चाको विषय एउटै थियो,– "सोमदत्तले प्राचीन ऋषिहरूको मर्यादा थाम्नेछ, यसमा कुनै सन्देह छैन।"

त्यस रात गाउँका बालकहरूले आफ्ना मातापिताका मुखबाट पुराणादिमा वर्णित त्यस्ता महान् ऋषिमुनिहरूका कथा सुने जो बाल्यकालदेखि नै धर्मप्रवीण थिए। श्रोता-बालकहरूलाई पनि त्यस दिन बडो अभिमान-बोध भएको थियो।

चतरा आश्रममा आएर बालक सोमदत्तको आरण्यकी जीवनको व्रत प्रारम्भ भयो। गाउँमा उसले सुगम जीवन जानेको थिएन। सानै उमेरमा उसलाई पितामाताहरूले दृढ आदेश, कठोर नियम-बन्धन र मुक्त प्रशंसाद्वारा सुगम जीवनबाट विरत गराइदिएका थिए। त्यस कारण ग्रामीण बालकहरूका साथ कौतुकक्रीडा गर्ने समयमा सोमदत्त विद्याभ्यासमा लाग्दथ्यो। तसर्थ आरण्यकी जीवनसँग आफूलाई अवस्थानुकूल पार्न उसलाई कठिन परेन।

एकाबिहानै ब्राह्ममुहूर्तमा, चराचरजगत् निद्रामग्न नै भएको बेला, बालक सोमदत्त पितासँगसँगै शय्या- त्याग गर्‍यो र एउटा जलपात्र, शुचिवस्त्र तथा कुशासन लिंदै

कोशीतटमा पुग्थ्यो। ब्राह्ममुहूर्तमा कोशीतट असांसारिक स्तब्धताले व्याप्त रहन्थ्यो। वन-जङ्गलको हरितिमा रात्रिको अन्धकारसँग अझै असम्पृक्त भैसकेको हुँदैनथ्यो। आकाशमा उषाको अरुणिमा त्यस समय निस्तेज रहन्थ्यो। प्रात:कालीन पक्षीहरूको सुरिलो बोली, त्यो प्रगाढ शान्तिलाई सियोको टुप्पाले घोचेजस्तो लाग्थ्यो। विश्राम गर्न नजानेकी कोशी नदी गर्जन गर्दै एकनासले प्रवाहित भैरहन्थिन्।

आफ्ना मातापिताका साथ सोमदत्त पनि स्नानादि कार्यबाट निवृत्त हुन कौशिकीतटमा नित्य पुग्ने गर्थ्यो। सोमदत्तको नियम थियो, ब्राह्ममुहूर्तमा उठेर नदीमा स्नानादि सम्पूर्ण दैनिक कार्य सम्पादन नगरी मुखबाट वाणी उच्चारण नगर्ने, मौनव्रत धारण गर्ने। स्नानोपरान्त गङ्गास्तवनपछि मस्तकमा त्रिपुण्ड्र र देहमा विभूत धारण गरी नदीको स्वच्छ बालुवातटमा कुशासनउपर पूर्वाभिमुख भएर पद्मासनमा बसी शान्त मुद्रामा ऊ धेरैबेरसम्म गायत्री जाप गर्थ्यो। कम्मरमा बेरेको सानो कौपीन र मुञ्जको लँगौटीबाहेक उसको शरीर निर्वस्त्र हुन्थ्यो। त्यस बेलासम्म पनि उसको मोटो शिर-शिखा चिसै रहन्थ्यो। गायत्री जापपछि दीक्षा-मन्त्रोच्चारण गरेर ऊ भगवतीको उपासना गर्थ्यो, त्यसपछि प्राणायामको लामो क्रिया। तबसम्म सूर्यका प्रथम किरणहरूले सुनको जलपजस्तो पातलो छायाले वनका टुप्पाटुप्पालाई छुन लागेका हुन्थे। अनि ऊ कुशासनमा खडा भएर सूर्यमन्त्रको पाठ गर्दै रविवन्दना गर्थ्यो।

आश्रम फर्केपछि उनीहरू अरणिद्वारा अग्निमन्थन गरेर यज्ञवेदीमा आहवनीय स्थापित गर्थे; अनि उच्च कण्ठस्वरले मन्त्रोच्चारण गर्दै चामल, घिउ, जौ र तिल मिसाएको चरुको हवन गर्थे। सुकेको समिधामा प्रकट भएको अग्नि चटचट शब्दका साथ धूममय जिव्हाद्वारा व्यपाकलाई ग्रसित गर्दै माथि-माथि पुगेर आकाशमा व्याप्त हुन्थ्यो। एक प्रकारको मीठो अन्नघृतमय सुगन्धले वातावरण रँगमगिएको हुन्थ्यो। पितापुत्रको सम्मिलित कण्ठले उच्चरित वेदका ऋचाहरू वायुमण्डलमा तरङ्गित हुन्थे। यस प्रकार बिहानको अधिकांश भाग देव र पितृको उपासनामा बिताएर देवप्रसादको रूपमा पञ्चामृतको आचमनद्वारा मुख शुद्ध गरी सोमदत्त एउटा पात्रभरी धारोष्ण दूध पिउँथ्यो। त्यसपछि स्वाध्यायको नियम थियो– कौमुदी पाठ। पिता शिक्षक हुन्थे र पुत्र हुन्थ्यो सतीर्थी शिष्य। पिता भन्थे,– "मित्रे चार्थौ......।" पुत्र एकाग्र भएर घोक्थ्यो,–"मित्रे चार्थौ.......।"

दिउँसो गाई लिएर सोमदत्त कोशीतटमा पुग्थ्यो। गाई चराउँदाको त्यही केही घडी मात्र नियमले बाँधिएका हुँदैनथे। नदीको किनारमा हरियो घाँस खोज्दै चर्दै हिँडिरहेकी गाईको पछिपछि ऊ रमाइलो मान्दै हिंड्थ्यो; र कहिलेकाहीं थाकेको छ भने त्यहींको एउटा शमीको विशाल वृक्षमुनि पाखुराको सिरान बनाएर कुकुक्क परी निदाउँथ्यो। उसको लट्टा पनि भूईंमा उसैको नजिक तेर्सिएको हुन्थ्यो। त्यसकै वरिपरि स्वेच्छाले गाई चरिरहन्थी। कोशीको अनवरत गर्जन कहिले पनि थामिन्नथ्यो।

अरण्यवासको प्रारम्भमा केही दिनभित्रै एक दिन कोशीतटमा गाई चराइरहेका समय सोमदत्तको एउटी बालिकासँग भेट भएको थियो। शमीको शीतल छायामुनि

एउटा अपरिचित बालकलाई त्यस्तो अप्ठ्यारोसँग निद्रामग्न अवस्थामा देखेर बालिका चकित भएर उभिरही। उसको जटामय शिखा, विभूतवेष्टित शरीर, त्रिपुण्ड्रशोभित ललाट तथा कटिमा कौपीन र लंगौटी पहिरिएको देखेर ऊ झन् कौतुकताले विस्मित भई। चरेर पेट भरिसकेकी गाईले तृप्तिको ध्वनि झिकी,– 'अव्वाँ ऽऽऽ।' सोमदत्तको निद्रा भङ्ग भयो। देख्छ त उसका सामु गुभा जस्तो पहेंलो शरीर भएकी एउटी सर्वाङ्गनग्न बालिका चकित भएर उभिरहेकी छे।

एकछिनपछि सोमदत्तले प्रश्न गऱ्यो,– "हे कनकवदनी बालिके! तिमी को हौ?"

बालिकाले निश्छल उत्तर दिई,– "म किराती छोरी हुँ– सुम्निमा। तिमी को हौ नि ए दुब्ला केटा?"

सोमदत्तले भन्यो,– "म आर्यवंशी ब्राह्मण सूर्यदत्तको पुत्र सोमदत्त हुँ।"

उसले यो पनि बतायो कि ऊ यहीं नजिकको आश्रममा मातापिताका साथ निवास गर्दछ। र सुम्निमाले चाहिं उत्तरतिरको एउटा पहाडको हरियो स्थललाई औंलाले देखाएर भनी,–"उः त्यहाँ छ हाम्रो गाउँ। तर सोमदत्त! तिमीले आफ्नो नाउँ बताउँदा बाबुको नाउँ किन कह्यौ?"

सोमदत्तले उत्तर दियो,– "पुत्र पिताबाट जीवनदान ग्रहण गर्छ, तसर्थ त्यो उदात्त दानमय सम्बन्धको विस्मृतिको पाप हामीबाट कदापि हुन सक्दैन। यो कृतज्ञता ज्ञापन हो, बालिके!"

सुम्निमा अझ बढी उत्सुक भई। उसले भनी,– "ल झन् तिम्रै भनाइले पनि त आमाले जन्माएको हुँदा आमाको मान गर्नुपर्थ्यो, हैन र? त्यसैले हामी किराती पैले आमालाई चिन्छौं, र उनले देखाएको मानिस हाम्रो बा हुन्छ।"

सोमदत्तले भन्यो,– "हामीहरू आर्यका सन्तति हौं, सुसंस्कृत छौं। तिमीहरू संस्कृतिविहीन बर्बर जातिका किरात हौ। त्यस कारण हाम्रा विचार तिम्रा विचारभन्दा पृथक छन्। माता क्षेत्र हो, अबोध बाले! क्षेत्रपति त पिता हो। तिमीलाई यसको ज्ञान छैन।"

बालक-बालिकामा पनि एक प्रकारको हठ हुन्छ। त्यसैबाट प्रेरित भएर सुम्निमाले भनी,– "ए बाहुनका छोरा! आमाले पो आफ्ना छोरालाई तेरो बाबु यो हो भनेर चिन्हाइदिन्छे। बाबु त आमाले देखाएको लोग्नेमानिस पो हो त।"

त्यसै बेला सोमदत्तले आश्रमको छेउबाट माताको पुकार सुन्यो। माथि उत्तरतिरबाट पनि एउटा नारीकण्ठको अस्पष्ट वाणी सुनियो,– "सुम्निमा! ए छोरी! के गरिराछेस्?"

सुम्निमाले भनी,– "आमाले बोलाउनुभयो मलाई। जाऊँ है?"

सोमदत्तले पनि भन्यो,– "माताको आह्वान मलाई पनि भयो।"

सुम्निमाले जाँदाजादै भनी,– "भोलि यहीं भेटौंला, हे बाहुन! ऐले जान्छु।"

अनि आटव्य जङ्गलमा ऊ लोप भई। सोमदत्त गाई लिंदै आश्रम फर्क्यो।

पुत्रको व्यग्र प्रश्नको उत्तरमा पिता सूर्यदत्तले उसलाई सम्झाए,– "माताबाट परिचित हुने प्रणाली पाशविक हो । पशुहरूमा सतीत्व एवं पातिव्रत्य धर्मको शून्यताले सन्तानको परिचय माताबाट हुन्छ । तर पुत्र सोमदत्त ! यस्तो विकारयुक्त प्रश्न तिम्रो मस्तिष्कमा किन उत्पन्न भयो ?" – पिताले किञ्चित् शङ्कामा यो प्रश्न गरे ।

सोमदत्तले किरातबालिकासँग हुन गएको विवादको वर्णन पितालाई अवगत गरायो । पिताले भने,– "पुत्र ! यो अनार्य देश हो । तिमीले अत्यन्त सतर्कतापूर्वक रहनुपर्दछ । अनार्यहरू पशुधर्मावलम्बी हुन्, हामी हौं देवधर्मी ।"

अर्को दिन गाई चराउन कोशीको तटमा आउँदा सोमदत्तको फेरि सुम्निमासँग भेट भयो । सुम्निमा साह्रै उत्ताउली, चटपटे र निश्छल केटी थी । सोमदत्तचाहिं अत्यन्त शान्त प्रकृतिको गम्भीर बालक । भेट हुनेबित्तिकै सुम्निमाले सोधी,–"हँ सोमदत्त ! तिमीले आमालाई माता किन भन्यौ हिजो ?"

सोमदत्तले शान्त भएर उत्तर दियो,–"यो देवभाषा हो ।"

"त्यसोभए मान्छे भएर मान्छेको बोलीमा किन बोल्दैनौ तिमी ? चौंताको चलन गर्नु हुँदैन मानिस भएर ! मानिस भएपछि मानिसकै चलन गर्नुपर्छ, सोमदत्त !"

"सुम्निमा ! ए अबोधबालिके ! हामी ब्राह्मण हौं, तपको बलबाट देवत्व प्राप्त गर्न सक्दछौं । हाम्रो यज्ञ, धर्म-कर्म, नियम-साधना, यो सबै मानवताबाट मुक्ति पाउने प्रयास हो, बुझ्यौ ?"

"म तिम्रा कुनै कुरा पनि बुझ्दिनँ, सोमदत्त ! तर मलाई लाग्छ, मान्छे भएर चौंता हुन खोज्नु असल हैन । मान्छेको धर्म हैन त्यो । मान्छेको बेहोर रहँदैन, त्यसले बानी बिगार्छ । चौंता भएर बस्न खोज्दा मान्छे नै हुँदैन । म तिमीलाई राम्ररी सम्झाउन त सक्तिनँ,– बुद्धि छैन नि, त्यसैले । तर हेर न सोमदत्त ! सजिलोसँग 'आमा' भन्ने साटो 'माता' भनेर तिमीले आमाजस्ती प्यारी मान्छेलाई कति टाढा पारिदियौ । हुन त 'आमा' को ठाउँमा 'माता' मात्रै भन्यौ तिमीले तर 'माता' भन्दिएर आमाको त्यो न्यानो र प्यारो काखलाई पर पन्छाएनौ र ?" अनि अचानक दिक्क मानेर भनी,– "हत्तेरी ! हेर न म कुरा सम्झाउनै सक्तिनँ ।"

तर सोमदत्तले सुम्निमाको भनाइको तात्पर्य राम्ररी बुझेको थियो । उसले भन्यो,– "माता देवीतुल्य हुन् । आदर, सम्मान र कृतज्ञताले हामी मातालाई उच्च आसनमा स्थापित गर्छौं । सम्मान र कृतज्ञता ज्ञापनको त्यो महान् भावलाई 'माता' शब्दले मात्र केही अंशमा सम्बन्ध व्यक्त गर्न सक्दछ । 'आमा' त दैनिक जीवनको कौटुम्बिकताको सूचक शब्द मात्र हो ।"

बालिकाले फेरि हठ गरी,– "घरका जहान-परिवारभित्रैकी त हुन् नि आमा पनि । कुटुम्बको नाताबाहेक अरू के हुन् त आमा ? मनमा बिनसिति खेलाइराखेका लहडी कुराले त्यस्तो न्यानो र प्यारो नातालाई बित्थामा टर्रो हुन नदेऊ, बाहुन !"

सोमदत्तले भन्यो,– "हामी मातालाई दैहिक सम्बन्धबाट मुक्त गरेर उच्च मर्यादासम्पन्न पार्छौं। त्यही हो संस्कृति।"

सुम्निमाको चित्त बुझेन। उसले भनी,– "तिमीहरू जेलाई पनि लुगा लगाइदिन्छौ, लुकाइदिन्छौ। जप, तप र यज्ञ गरेर, व्रत बसेर तिमीहरू सद्दे मानिसलाई मुकुण्डो भिराइदिन्छौ, नानाओली पहिरनले भएको जीउलाई ढाकिदिन्छौ, र त्यस्तै नानाथरीका ठूल्ठूला कुरा र नबुझ्ने भाखाले बोलेर त्यतिविघ्न माया गर्ने आमालाई टाढा-टाढाको को-को उनाउजस्तो पारिदिन्छौ। तिम्री आमाले आफ्नो आउलाई रातदिन त्यस्तो लामो-लामो लुगैलुगाले ढाकेर राखेको हुँदा उनलाई स्वास्नीमानिसबाट देवी-धौता बनाउन तिमीलाई सजिलो पर्दो हो, नत्र भने लुगाभित्तिर सबै स्वास्नीमानिसहरूमा जे-जे कुरा हुन्छन् तिम्री आमाको पनि त त्यै-त्यै कुरा छन् नि। हामी लुगा नै लाउँदैनौं, यसउसले हाम्री नाङ्गी आमालाई हामी 'माता' र 'देवी' जस्तो देख्न सक्दैनौं। नाङ्गी आमालाई कल्ले देवी भन्छ?"

अत्यन्त आहत भएर किञ्चित् कठोर शब्दमा सोमदत्तले भन्यो,–"हे असंस्कृता बालिके! देवीतुल्य माताका सम्बन्धमा तिमीले यो के अनर्गलप्रलाप गरेकी? भो, भो; तिम्रो यो पापमय प्रलाप अब बन्द गर।"

सोमदत्त रिसाएको देखेर सुम्निमालाई दिक्क लाग्यो। उसले भनी,– "तिमी रिसायौ? मसँग नरिसाऊ, सोमदत्त!"

"माताका सम्बन्धमा म यस्तो अपशब्द सुन्न चाहन्नँ।"– उस्तै आवेशमा सोमदत्तले भन्यो।

सुम्निमा दुःखित भई। उसले भनी,–"मैले बिराएँ, सोमदत्त! मलाई क्षमा गर। अपशब्द भनेको नराम्रो कुरा हो क्यार, तर मैले त्यस्तो नराम्रो कुरा कहाँ भनें र? मैले त यति मात्रै भनेको कि मनमा उब्जिने धेरै थरीका कुरा, जसलाई तिमी 'भावना' भन्छौ क्यार, त्यसलाई हामी बस्ने संसारको माटोसँग मेल नखाने अमिल्दो नबनाऊ। भावना भनेको पखेटा लागेको चरोजस्तो हो। त्यो चरो छेउ र टुप्पो नभएको यो ठूलो आकाशको फुस्सामा प्वाँख हालेर मनपर्दी उड्न सक्छ; जति माथि जाऊँ भन्यो उति नै माथि पुग्न सक्छ। हामीले त धरतीसँग पो नाता राख्नुपर्छ। मान्छे भएपछि मान्छेके चालचलनमा बाँधिएर बस्नुपर्छ, यो भनेकी पो त मैले, सोमदत्त! र म तिमीजस्तो पढे-गुनेकी पनि त छैन नि। तिमी, हेर, कति कुरा जान्दछौ, कति सिपालु छौ।"

सोमदत्तको चित्त शान्त भयो। तर त्यस दिन उनीहरूका बीच अरू विशेष केही कुरा भएन। सुम्निमा खल्लो मन लिएर घर फर्की र रातभरि उसले निधो गरी कि भोलिपल्टै ऊ सोमदत्तलाई खुशी पार्ने कोशिश गर्नेछ।

त्यस दिन पुत्र सोमदत्तबाट विवादको वर्णन सुनेर पिता सूर्यदत्त अत्यन्त प्रसन्न भए र "साधु साधु" भने।

भोलिपल्ट सोमदत्त र सुम्निमाको भेट भएन किनभने सोमदत्त सधैंको जस्तो गाई लिएर नदीतटतर्फ जान सकेन। सुम्निमा धेरैबेरसम्म शमीको वृक्षमुनि त्यो

ब्राह्मणबालकको प्रतीक्षा गर्दै बसिरही। घरबाट तल झर्दा उसले अँजुलीभरी पहाडी फूल टिपेर ल्याएकी थी। वेलुकीपख निराश भएर त्यही शमीवृक्षमुन्तिर सोमदत्त बस्ने गरेको ठाउँमा सबै फूल छरेर घर फर्की।

दिउँसोको गाई चराउने नियममा सोमदत्तलाई बाधा पर्न गएको थियो एउटा राजकुमारको आगमनले, जो मृगयाका लागि ससैन्य अटवीमा आएका थिए। जब उनले थाहा पाए कि त्यहाँ एक पुण्यात्मा तपस्वी ब्राह्मणको कुटी पनि छ– आफूसँग आएका सैन्य, अङ्गरक्षक तथा रथलाई तपोभूमिको शान्ति भङ्ग नहोस् भन्ने हेतुले टाढै छाडेर उनी दर्शनार्थ त्यो आश्रममा आए। उनले भने,–"महाभाग द्विजश्रेष्ठ! म राजकुमार मृगया गर्न यहाँ आएको हुँ, मेरो सादर अभिनन्दन स्वीकार होओस् तथा मबाट राजपुत्रानुकूल सेवा ग्रहण गर्ने कृपा रहोस्।"

नतशिर गरी उभिएका राजकुमारलाई सूर्यदत्त र उनकी पत्नीले आशीर्वाद दिँदै दुवै हात उठाए।

राजकुमारले फेरि सोधे,–"हे पुण्यात्मा! के तपाईंहरूको यज्ञादि निर्विघ्नपूर्वक भइरहेको छ? यहाँका अनार्य जातिबाट कुनै विघ्न-बाधा त परेको छैन?"

ब्राह्मणले वरिपरिका अनार्यबाट हुने गोवध तथा हिंसाको चर्चा गर्दा राजकुमारले अत्यन्त शौर्ययुक्त वाणीमा आफ्नो सेनालाई सम्बोधन गर्दै भने,–"नजिकका गाउँ-गाउँमा गएर किरात र भिल्ल जातिका प्रमुख व्यक्तिहरूलाई राजाज्ञा सुनाउँदै यहाँ बोलाएर ल्याओ।"

यति भनी ब्राह्मणदम्पतीलाई विनम्र सम्बोधन गर्दै भने,–"ब्राह्मणदेव! क्षत्रियको धर्म हो ब्राह्मणको सेवा गर्नु; त्यसको प्रतिपालन अवश्य हुनेछ।"

केही समयपछि एकएक गर्दै अरण्यनिवासी भिल्ल तथा किरात जातिका प्रमुख व्यक्तिहरू आश्रमको प्राङ्गणमा एकत्रित हुन थाले। तिनीहरू प्रायः सर्वाङ्गनग्न थिए। भिल्लहरूको चिल्लो कालो शरीर र किरातीहरूको पहेंलो शरीर, यी दुवै आफ्ना-आफ्ना जाति-समूह बनाएर आश्रमको दुई पार्श्वमा बस्दै गए। भिल्लहरूको लामो कपालमा मयूरपङ्ख मुकुट शोभित थिए, र छाती र कम्मरमा कौडीका झुप्पाहरू। किरातीहरूले चाहिं त्यति श्रृङ्गारको परिधान पनि पहिरिएका थिएनन्। उनीहरूजस्तै उनका स्त्रीहरू पनि निर्वस्त्र नै थिए। उनीहरूमध्ये धेरैजसोले कपालमा रक्तगुराँसका चहकिला फूल घुसारेका थिए। कसैले आफ्ना स्तनपेयी सन्तानलाई छातीमा टाँस्दै आफूसँगै ल्याएका थिए। ती जङ्गलनिवासीका साना-साना केटाकेटीहरू पनि बूढाहरूको हल्लीखल्लीमा सामेल भएका थिए र आफ्ना-आफ्ना अभिभावकहरूसँग टाँस्सिएर विस्मित भई यताउति हेर्थे। सुम्निमाचाहिं त्यहाँ थिइन। ऊ विहानै घर छोडेर कोशीतट गएकी थी– सोमदत्तलाई पर्खिन। त्यसैले आश्रमको यो विराट् सभाको उसलाई पत्तो नै भएन। ऊ त एक्लै नदीको बगरमा सोमदत्त आउँछ कि भनी दिनभरि पर्खेर बसिरहेकी थी।

प्रधानकुटीको द्वारसामु उभिएर राजपुत्रले समवेत किराती-भिल्लमण्डलीलाई ओजस्विलो स्वरमा सम्बोधन गरे। गोबर र कोशीको लेसिलो माटोले लिपेको स्निग्ध प्राङ्गणका मध्यमा निर्मित स्थायी यज्ञवेदीसमीप कुशासनमा सूर्यदत्तको परिवार बसेको थियो। प्राङ्गणपरतिर किरात-भिल्लहरूको हूल तपोभूमिका वृक्षको छहारीमुनि एकत्रित थियो। मध्यआकाश पार गरेर सूर्य पश्चिमतर्फ ढल्किन लागेको थियो। राजकुमारले भने,–"उपस्थित भिल्ल-किरातहरूहो ! हिमालयसम्मको भूभाग हाम्रा पुर्खाहरूबाट विजित भएर हाम्रो संरक्षणमा छ। युद्धमा परास्त भएर तिमीहरूले हाम्रो विजयलाई स्वीकार गरेका छौ। यहाँ आश्रम स्थापना गरेर निवास गरिरहेको यो ब्राह्मणपरिवार हामीबाट पूज्य छ। अतः यो परिवारलाई प्रत्येक साधनद्वारा संरक्षण र सुविधा प्रदान गर्ने हाम्रो परम उद्देश्य हो।"

त्यहाँ उपस्थित किरात-भिल्लमण्डलीमा एउटा सानो हलचल भयो। उनीहरूमा गाईंगुईं कुरा हुन थाल्यो। अनि एउटाले उभिएर राजकुमारलाई सम्बोधन गर्दै भन्यो,–"ब्राह्मणपरिवार हाम्रो यो थलोमा आएदेखि हामीले जो सकेको मद्दत र हेरविचार गर्ने गरेका छौं। आश्रम खडा गर्न हामीले उहाँलाई मद्दत गरेका हौं; वन फाँडेर ठाउँलाई सम्म पार्‍यौं। आश्रमको कुटीलाई चाहिने सरसामान जोरिदियौं र हामीले आफ्नो जनबल लगाएर यी सबै कुटीहरू खडा गरेका हौं। गाउँभरिमा सबैभन्दा बढी दूध दिने भरखर बियाएकी बाच्छोसमेतकी काली गाई हामीले नै उहाँलाई चढाएका हौं। र, हरवखत चाहिरहने अरू सरसामानको चाँजो पनि मिलाइदिने नै गरेका छौं, होइन त सूर्यदत्त ब्राह्मण ?"

सूर्यदत्तले केही उत्तर दिनुभन्दा पूर्व नै राजपुत्रले त्यो किरातवक्तालाई किञ्चित् आधिकारिक वाणीमा प्रश्न गरे,–"तिमी को हौ ?"

उसले भन्यो,–"म उः त्यो माथिको किरातगाउँको साहिँलो बिजुवा हुँ। यहाँ भेला भएका किरातीहरू मेरा बातुङ भाइ हुन्।"

राजपुत्रसँगै उभिएको एउटा अङ्गरक्षक सेना अधिकारीले राजपुत्रलाई सम्झाउँदै भन्यो,– "स्वामीको कीर्ति अमर रहोस् ! बिजुवा भनेको एक प्रकारको धामी हो; हाम्रो पुरोहितसरह हो। ऐले बोल्ने यो मानिस किरातहरूको प्रमुख हो।"

राजपुत्रले फेरि भने,– "बिजुवा ! तर तिमीहरूले गोवध र हिंसा गरेर यो तपोभूमिको पवित्रतालाई बारबार नष्ट गर्ने गरेका छौ। त्यसो हुँदा ब्राह्मणपरिवारको तपस्यामा विघ्न परेको छ। आजदेखि तिमीहरू सबैलाई यो राजाज्ञाद्वारा यस क्षेत्रमा गोवध निषेध गर्ने आदेश दिइन्छ। यो तपोभूमिको सान्निध्यमा कुनै प्रकारको हिंसा पनि राजाज्ञाद्वारा आजदेखि वर्जित भयो।"

भिल्ल र किरातहरूको समूहमा फेरि खलबल भयो। उनीहरू आपसमा कुरा गर्न लागे। केही चर्काचर्की पनि भयो। बिजुवा फेरि उभियो। उसले भन्यो,– "राजपुत्र ! हुन त हामी पराजित भएका हौं। भिल्लहरू पनि पराजित भएर आफ्नो प्रान्तको देशलाई

छाडेर हिमालयका कुनाकाप्चा खोज्दै हाम्रो थलोनजिक जङ्गल-पर्वततिर आई बस्न थालेका हुन्। तर अहिलेको यो राजाज्ञा पराजितका निम्ति पनि कठोर ठहरिन्छ। राजपुत्र ! यसलाई स्वीकार गर्दा हाम्रो रीतिथितिमा ठूलो विघ्न पर्छ।"

भिल्लसमूहबाट पनि एउटा भिल्ल उभ्भियो। उसले भन्यो,– "त्यो माथिको सानो पहाडी थुम्कोमा हामी दुवै जातिको पूजा हुन्छ। त्यहाँ हामीले हाम्रो पूजाको नियमानुसार सुँगुरपाठा चढाउने गरेका छौं। त्यो चढाउन पाएनौं भने अन्धेर हुन्छ, राजपुत्र !"

राजकुमारले कुनै वाधा स्वीकार गरेनन्। उनले घोषणा गरे कि राजाज्ञा अटल छ। दृढताको भावनाले उनको क्षत्रिय मुहार दीप्त थियो। वरु सूर्यदत्तले किराती-भिल्लहरूलाई सम्झाउँदै भने,– "ल भयो, तिमीहरूलाई त्यो ठाउँ पूजानिमित्त चाहिएको छ भने भयो, तिमीहरूकै रहोस् त्यो स्थान। तर त्यहाँ सुँगुरको हिंसा नगर्नू। त्यो ठाउँ आजदेखि वराहक्षेत्र कहलाइनेछ; र हाम्रा पुराणमा वर्णित वराहअवतारको द्योतक त्यो स्थल हुनेछ।"

राजपुत्रले सभा विसर्जन गरे। त्यहाँ एकत्रित नरनारीहरू हृदयमा भविष्यका प्रति आशङ्का गर्दै आफ्ना-आफ्ना घर फर्किन लागे। वन-मार्गमा उत्तेजित विवाद हुन लाग्यो। तर साँझ पर्न लागेकाले उनीहरू छिटोछिटो पयर चाल्दै थिए। एउटा भिल्लले किराती बिजुवालाई भन्यो,– "बिजुवाबा ! म तिम्रो घर आउँछु सल्लाह गर्न।" साँझतिर खिन्न मन लिएर सुम्निमा जव घर फर्की, घर शून्य थियो। व्यग्र भएर उसले कराउँदै आमालाई वोलाई। उसको रुदनकम्पित चीत्कारको प्रतिध्वनि मात्र आयो। गाउँघरमा पनि कोही थिएनन्। "कहीं कतै एक जना पनि छैन। किन यस्तो ? यस्तो त कहिल्यै भएको थिएन। .....ए आमा ! बा !" रहीरही ऊ चिच्च्याउँछे। उसलाई अचानक संसारमा एक्लै भएको अनुभव भयो। क्ता-कता 'डर' लागेजस्तो पनि भयो उसलाई। उसले सोमदत्तलाई सम्झी। ऊसँग पनि भेट भएन आज। ऊ पनि आफ्नो आश्रममा एक्लै पो पर्न गएको छ कि ? सुम्निमालाई उसको पनि चिन्ता भयो। उसले कराएर डाकी,– "आमा...! बा......!" उसको मसिनो वालिका-स्वर घना हुँदै गएको वनपर्वत प्रान्तमा सेलायो। उसले फेरि आग्रहकण्ठले वोलाई,– "सोमदत्त...... !"

कतैबाट केही उत्तर नआएकोले अत्यन्त विकल भएर घरको पिंढीमा वसेर रुन लागी। यसरी धेरैबेर रोएपछि गाउँ फर्किरहेका मानिसको हूलको कल्याङमल्याङ स्वर सुनियो। त्यो स्वरमा वालकहरूको कण्ठस्वर पनि मिसिएको थियो। सुम्निमाले आँसु लतपतिएको मुख उठाएर अन्धकारमा चारैतिर फर्किएर मानिसको आकार खोज्न थाली। त्यही वखत उसका आमाबाले घरको आँगनमा प्रवेश गरे। आतुर र व्यग्रताका साथ उनीहरूसँग टाँस्सिंदै उसले भनी,– "किन मलाई एक्लै छोडेको ? सोमदत्तलाई के भो, हँ वा ? हँ आमा..... ?"

आमाले भनी,– "के भो मेरी छोरीलाई आज ? किन यसरी रोएकी ? तँलाई अचेल के भैरेछ, हँ छोरी ? को सोमदत्त भनेको ?"

सुम्निमाले धुँक्क-धुँक्क रुँदै भनी,– "आश्रमको बाहुनको छोरा सोमदत्त ।"

बाले यसको उत्तर दियो,– "सुम्निमा ! तेरो सोमदत्तहरू आनन्दसाथ छन्, बरु हामी पो त उनीहरूले गर्दा गाउँमा टिक्न नसक्ने हुन थाल्यौं ।"

सुम्निमा आश्वस्त भएर लाडे भई । उसले बासँग टाँस्सिएर भनी,– "सोमदत्त बिचरोले के गऱ्यो र, बा ?"

बाले यसको उत्तर दिएन, आँगनतर्फ फर्किएर भन्यो,– "खोइ, भिल्लयुवक ! कता लाग्यो त्यो ?"

अन्धकारबाट एउटा कालो मूर्ति प्रकट भएझैं भिल्लयुवक नजिकै आयो । उसले भन्यो,– "बिजुवाबा ! म यहीं त छु नि ! तपाईंहरूले खुशीसाथ नबोलाउन्जेल कसरी पस्थें म तपाईंको घरमा ?"

बिजुवाले भन्यो,– "हेर न, हाम्री छोरी सुम्निमाको चाला । यसैले गर्दा तिमीलाई बोलाउन पनि बिर्सें भिल्लयुवक !"

यति भनेपछि दुवै जना पिंढीमा बसे । दुवैका बीच सल्लाह, परामर्श हुन लाग्यो । सुम्निमाकी आमाचाहिं कोठामा गएर आगो सल्काउन लागी– भोजन तैयार पार्ने तरखरमा । सुम्निमा पिंढीमै आफ्नो बाबुको पिठ्यूँमा ढेप्पिएर उनीहरूको कुरा सुन्न लागी । भिल्लको भनाइ थियो, जङ्गलभित्र हामीले आफ्नो रीतिथिति छाड्न हुन्न, आश्रमलाई ध्वस्त पारेर ब्राह्मणपरिवारलाई लर्गारिदिनुपर्छ । सुम्निमाले नाकेस्वरमा बिस्तारै सोधी,– "अनि सोमदत्तको के हुन्छ नि बा ?"

भिल्ल आफ्नो योजनाको वर्णनको प्रवाहमा भन्दै गयो,– "उनीहरू जहाँ जान मन लाग्छ जान्छन्, र यदि क्षत्रियहरू उनीहरूलाई फेरि यहाँ जमाउन आए भने युद्ध घोषणा गर्नुपर्छ–समर रचाइदिनुपर्छ ।"

बिजुवाको अर्ती थियो शान्तिको पक्षमा । उसको भनाइ थियो,– "युद्धमा हामी धेरैपटक परास्त भइसकेका छौं । त्यसो हुँदा हाम्रो जाति मासिँदै-पातलिँदै गएको छ । हामीले त्यो हालैको अन्तिम र ठूलो युद्धलाई पनि बिर्सन हुन्न । त्यो युद्धमा तिमी भिल्ल र हामी किरातीहरूको दोहोरो शक्तिउपर आर्यहरूको शस्त्रास्त्रले भारी विजय पाएको थियो, र हामी दुवै जातिका स्त्रीपुरुष सखाप भएर प्रायः निर्मूल भइसकेका थियौं । अहिले भरखरै फेरि पलाउन थालेका छौं बोटबिरुवाजस्तो । त्यसो हुँदा युद्धको सल्लाह सर्वनाशको सल्लाह हो ।"

भिल्लचाहिं तातातो बोलीमा बिजुवाको तर्कको खण्डन गऱ्यो र बराबर भन्थ्यो,– "बिजुवाबा ! बरु यो अन्याय सहनुभन्दा मरेर सखाप हुनु नै बेस हो ।"

बिजुवाले शान्त स्वरमा उत्तर दियो,– "भिल्लयुवक ! तिमी रिसको तातो भोक भिकिरहेका छौ । बाँचेका मानिसलाई पो न्याय-अन्यायको खोजी हुन्छ, मरेर सखाप नै हुने हो भने त्यसको के तात्पर्य रहन जान्छ र !"

सुम्निमाले उनीहरूका कुनै कुरा पनि राम्ररी बुझ्न सकेकी थिइन, तर उसले यति त बुझेकी थी कि बा न मार्ने, न मर्ने पक्षमा छन्। ऊ आफू पनि मर्न चाहन्नथी, त्यसैले बाबुको भनाइ उसलाई मन परिरहेको थियो।

भिल्ल आवेगमै थियो। उसले झोक्किएर भन्यो,– "मरे पनि के त, धर्म नै हुन्छ, पुण्य नै हुन्छ।"

विजुवाले सम्झायो,– "भिल्लयुवक ! तिमी ता आर्यहरूकै जस्तो कुरा गरिरहेका छौ– मरेपछि पाइने धर्म र पुण्यका कुरा। बाँच्नलाई पो युद्ध गर्ने सल्लाह मान्न सकिएला, तर मरेर पाइने धर्मका लागि युद्ध गर्ने कुरा किमार्थ पनि मान्न सकिन्न। उनीहरूले एउटा ठूलो महाभारत धर्मको नाउँमा गरे। के पाए, लासैलासको पर्वतबाहेक ? अहँ, म तिम्रो 'युद्ध गर्नुपर्छ' भन्ने सल्लाह मान्दिनँ। उनीहरूसँग मिलेर बस्नमा सबैको भलो छ। उनीहरूको साँधभित्र गाई काट्न दिँदैनन् भने गाई काट्न पाएनौं भनेर हामी आफैं काटिन खोज्नु बेस होइन। उनीहरूको साँधभन्दा अलिक माथ्तिर हाम्रो गाई काट्ने थलो सारिदिऊँ, त्यहाँबाट यो बन्देज लाग्न सक्दैन। र यदि हामी फेरि बसाइँ जान चाहन्नौं भने गोवध पनि बन्द गरिदिऊँ।"

भिल्लले भन्यो– "सुँगुरपाठा चढाउन पनि त रोकियो नि त्यो थानमा ?"

विजुवा,– "त्यसले के भयो र ? म विजुवा हुँ, अर्को त्यस्तै थलो तोकिदिन सक्छु।"

तैपनि भिल्लले मानेन। उसले भन्यो,– "तपाईंका बातुङ भाइहरूलाई बोलाउनुस्।"

रातभरि विजुवाको घरमा किरातीहरूको सभा भयो। उनीहरूले एउटा गाई काटेर भोज खाए, र खूब जाँड पिएर लट्ठ भए। सुम्निमा र उसकी आमा अतिथिहरूको सेवामा व्यस्त थिए। विहानीपख सभामा उपस्थित सबैले विजुवाको समर्थन गर्दै भने,– "विजुवाबाले भनेको कुरा ठीक हो। हामी सबै उनैले भनेको मान्छौं।"

भिल्लयुवक तल दक्षिणतिरको समथल भूमिको जङ्गलको गाउँतर्फ फर्क्यो।

रातभरि नसुतेकी सुम्निमा विहानपख त्यहीं पिंढीमा निदाई। ऊ रातिको निर्णयले प्रसन्न थी। विहानको भात खान आमाले उठाउँदा ऊ खुशी हुँदै फुर्तीसाथ उठी। उठ्नासाथ सबैभन्दा पहिले उसलाई सोमदत्तको सम्झना आयो। आमाले दिएको रात्रिभोजका निम्ति पोलेको मासुको एक टुक्रा र एक गाँस भात टिपेर मुख पुछ्दै ऊ तल कोशीको तटतिर दुगुर्दै ओर्ली; राति सभामा बाले गरेको निर्णय सोमदत्तलाई सुनाउने उसलाई हतार थियो।

गाई लिएर सोमदत्त पहिलेदेखि नै त्यहाँ पुगिसकेको थियो। ऊ पनि सुम्निमालाई हिजोको आश्रमको घटना सुनाउन चाहन्थ्यो। स्वाँस्वाँ र फ्याँफ्याँ गर्दै, नाक पुछ्दै सुम्निमाले भनी,– "सोमदत्त !"

कोशी नदीतर्फ झर्न लागेका वखत कुद्दाकुद्दै उसले रत्तगुराँसको एक थुंगा फूल टिपेर कपालमा घुसारेकी थी।

सोमदत्तले शान्त स्वरमा भन्यो,– "सुम्निमा ! हिजो दिउँसो आश्रममा एउटा प्रतापी राजकुमार आएका थिए ....... ।"

सुम्निमा पनि हतारिएर भन्न लागी,– "भिल्लको कुरा हामीले मानेनौं सोमदत्त ! अब लडाइँ नहुने भो...।"

सोमदत्त आफ्नो कुरा भन्दै गयो,– "क्षत्रिय राजकुमारले अब यो तपोभूमिको क्षेत्रलाई कसैले अपवित्र गर्न पाउँदैन भन्ने राजाज्ञा दिए ।"

सुम्निमा पनि भन्दैथी,– "गाई मार्ने कुरामा अड्डी लिएर मानिसले नै सखाप हुनु हुन्न भनेर बाले भन्नुभयो; हेर सोमदत्त..... !"

सोमदत्तले सुम्निमाका कुरातर्फ ध्यानै नदिएर भन्यो,– "क्षात्रशस्त्रास्त्रले यो तपोभूमिलाई अब आफ्नो संरक्षणमा लियो । अब धर्मको निर्बाध गति प्रवाहित हुन्छ यो अरण्यभूमिमा ..... ।"

सुम्निमाले भनी,– "बुझ्यौ सोमदत्त ! बाले भन्नुभो, धर्मलाई मानिसभन्दा माथि राख्नु हुन्न, धर्मको नाउँमा मान्छेकै नाश हुनु असल कुरो होइन रे .......!"

सोमदत्तले आफ्नो अचल दृष्टि सोझै अगाडि स्थिर राखेर भन्यो,– "गोमाता अब सुरक्षित हुने भइन्; पशुपक्षी निशङ्क भए ....... ।"

सुम्निमालाई सबै कुरा सुनाइसक्ने हतार थियो । उसले भनी,– "अनि बाले भन्नुभयो, मानिस मारिएर सखाप नहुन् भन्नको निम्ति पशु मार्न पनि बन्द गर्नुपर्छ; नत्र बुझ्यौ सोमदत्त ! भिल्ल केटो धर्मको नाउँमा हाम्रा किरात दाजुभाइहरूलाई लडाइँ गर्नुपर्छ भनी उकास्दै थियो .....।"

सोमदत्तले आफ्नो कुरा टुङ्ग्याउँदै भन्यो,– "सुम्निमा ! आज अपूर्व शुभ दिन हो । म अत्यन्त प्रसन्न छु । आकाशमा देवी-देवताहरू पनि परम सन्तोषमा होलान् । आज अधर्मको उपर धर्मको विजय भएको छ, आर्यध्वजा यो तपोभूमिमा गाडिएको छ ।"

सुम्निमाले भनी,– "म पनि असाध्य खुशी छु । त्यसैले यो खुशी कुरा सुनाउन म दुगुर्दै आएकी । बडो रमाइलो दिन हुने भो हाम्रो । तिमीलाई केही हुँदैन, हामीहरू कसैलाई केही हुँदैन ।"

गुराँसको रातो फूलले सिंगारिएको कपालको छायामुनि झलमलाइरहेको उज्यालो अनुहारमा सुम्निमाका चञ्चल आँखा आनन्दले चम्किरहेका थिए ।

उसले भनी,– "मेरो बा बिजुवा हुनुहुन्छ । उहाँले भोलि अर्को ठाउँ देखाउने हुनुभएको छ– सुँगुरपाठा चढाउने ठाउँ ।"

सोमदत्तले शान्त वाणीमा भन्यो,– "के सुँगुरपाठा चढाएर देवता प्रसन्न हुन्छन्, सुम्निमा ?"

सुम्निमा छक्क परी । उसले सोधी,– "नत्र कसरी हुन्छन् त ?"

"यज्ञदानादिले, सुम्निमा !"

सुम्निमाको चित्त बुझेन,– "उनीहरू पनि हामीजस्तै हुन् नि ! चौताहरू रिसाए भने सुँगुरपाठा पाएर खुशी हुन्छन्। त्यसैले त सुँगुरपाठा दिएर रिझाइन्छ नि तिनीहरूलाई। उनीहरूले पनि आफ्नो भाग पाएपछि सन्तोष गर्नुपर्छ। अनि हामीलाई कुनै किसिमको दुःख हुँदैन। त्योभन्दा बढ्ता हामीले अरू केही गर्नु पर्दैन उनलाई; र उनीहरूले पनि त्योभन्दा बढ्ता खोज्न हुँदैन। त्यत्ति हो तिनीहरूको भाग।"

सोमदत्तले वेद, उपनिषत् र धर्मग्रन्थहरूको राम्रो अध्ययन गरेको थियो। उसले सुम्निमाको अज्ञानता बुझेर सम्झाउँदै भन्यो,– "देवताका सम्बन्धमा तिमीहरू अज्ञानताको गहन अन्धकारमा छौ। देवताको सत्य रूप त हाम्रो हृदयभित्र निवास गर्छ। त्यो हृदयको देवता र ब्रह्माण्डमा व्याप्त देवता एउटै हो– आत्मा र परमात्मा। यज्ञ-दानादिले स्वर्गलोक, प्रेतलोक आदि अनेकानेक लोकका देवी-देवताहरूलाई तृप्त पार्दै आफ्नो आत्मामा रहेको परब्रह्म रूप परमेश्वरको पनि आराधना हुन्छ।"

उठेको दाहिने हातको हत्केलालाई सुम्निमातर्फ पारेर सोमदत्तले प्रवचन गर्दै भन्यो,– "बुझ्यौ, सुम्निमा ?"

सुम्निमाले पटक्कै बुझिन। अन्यौलमा परेर उसले यति मात्रै भनी,– "मानिसभित्र त मनुवा पो बस्छ, बाले भनेको। चौताहरू त आफ्ना-आफ्ना ठाउँमा बस्छन्– कोही पहाडको चुचुरामा, कोही खोलामा, कोही भीरको ढुङ्गामा, कोही वनमा, कोही खेतबारीमा। हामीभित्र त मनुवा बस्छ। बा भन्नुहुन्छ, यी दुई एउटै खालका हैनन् रे; यिनीहरूलाई छ्यासमिस गर्न हुन्न रे। यिनीहरूको भिन्नाभिन्नै थान्को छ, यिनीहरू भिन्नाभिन्नै बाँच्छन्, भिन्नाभिन्नै काम गर्छन्।"

सोमदत्तले यही बुझ्यो कि किरातबाला एकदम अपठित छ, ज्ञानशून्य छ र घोर अज्ञानान्धकारमा छ। उसमा दयाको भाव जाग्रत् भयो; भन्यो,– "अबोधबालिके ! तिमीहरू ठूलो भ्रमजालमा फसेका छौ। सांसारिकताको मछुवाले तिमीहरूलाई शारीरिक जालमा माछा फसाएजस्तै फसाएर राखेको छ। अहिंसाभन्दा ठूलो धर्म केही छैन– 'अहिंसा परमो धर्म' र धर्म सर्वोपरि छ, मानवोपरि पनि।"

समय-समयमा उनीहरूका बीच यस्तै कुरा हुन्थे। स्पष्ट स्नेहको भावना लिएर सुम्निमा त्यहाँ पुग्थी, सोमदत्त पनि कोशीतटमा ऊसँग कुरा गर्दा र उसलाई सम्झाउन पाउँदा रमाइलो मान्थ्यो। सुम्निमा सजिलैसँग आफ्नो अज्ञानता स्वीकार गर्थी र भन्थी,– "तिमी असाध्य बुद्धि भएका छौ, पढेका छौ, कत्तिका कुरा जान्दछौ।"

सोमदत्त खुशी हुन्थ्यो।

कहिलेकाहीं भने सुम्निमा ढिपी समातेर बहस गर्न लाग्थी। त्यस्तै एक दिन मध्याह्न गर्मीमा कोशीतटको बालुवा तातेर रन्किएको थियो। वन-जङ्गलका पक्षीहरू रूखका झ्याम्म परेका हाँगाभित्र उफ्री-उफ्री खेल्दै थिए। शमीको झ्याम्म परेको बोटको टुप्पाका झिना-मसिना हाँगामा रङ्गविरङ्गका चराहरू उफ्रँदै रमाइलो गर्दै थिए।

सधैंको जस्तो वृक्षका छह्वारीमुनि बसेर सोमदत्त र सुम्निमा कुरा गरिरहेका थिए। सुम्निमा भन्दैथी,– "गर्मीको याम बडो अल्छीलाग्दो हुन्छ। मनमा के-के कुरा आइरहन्छन्, बालुवामा उठिरहेको त्यो तातो बाफजस्तो। तिमीलाई त्यस्तो हुन्न सोमदत्त ?"

सोमदत्तले यसको उत्तर दिएन। सुम्निमाले फेरि भनी,– "के सोचिरा'छौ सोमदत्त ?"

तैपनि सोमदत्तले केही बोलेन। सुम्निमाले आङ तानी। सोमदत्तले देख्यो, उसको शरीरमा कुमारीत्वको लक्षण स्पष्टतर हुँदै आएको छ। एक पलका निम्ति उसलाई लाग्यो, सुम्निमालाई शरीर ढाक्न भनूँ। तर ऊ केही बोलेन। त्यसै बखत आफ्नो सँगीबाट छुट्टिएको एउटा सेतो परेवा घामले थाकेर शमीको सिँहाल खोज्दै, पङ्ख बजारेर एउटा हाँगामा बस्न खोज्यो। हठात् आलस्य त्यागेर सुम्निमाले भनी,– "हेर, हेर सोमदत्त ! कस्तो राम्रो परेवा। यसको खुट्टा रातो छ, र आँखा पनि रातो छ।"

परेवातर्फ सोमदत्तको दृष्टि पुग्नुभन्दा पहिले नै आकाशको शून्यबाट त्यसै प्रकट भएजस्तो गरी एउटा बाजले महावेगका साथ शमीको हाँगामा राम्ररी बस्न पनि नपाएको परेवामाथि झम्टिँदै आक्रमण गर्‍यो। तर सोमदत्तको तत्कालैको 'हाहा' को चीत्कारले बाजको एकाग्रतालाई भङ्ग गरेछ। त्रासले मूर्छित भएको परेवा वृक्षबाट उनीहरूनजिकै खस्यो। बाज उडेर गयो।

परेवालाई टिपेर मायाले सोमदत्तले सुमसुम्याउन लाग्यो। सुम्निमाले भनी,– "कति राम्रो सेतो परेवा, हगि ? कस्ता राम्रा खुट्टा– कलकलाउँदा।"

सोमदत्तको ध्यान परेवाको सुन्दरतापट्टि थिएन। उसले भन्यो,– "आह ! यसको प्राणरक्षा भयो।"

सुम्निमाको भरखरैको आलस्य एकदम लोप भइसकेको थियो। शरीरले एक प्रकारको स्फूर्ति पाएजस्तो लाग्यो, सोमदत्तले परेवालाई त्यसरी सुमसुम्याएको देखेर। उसले आङ बङ्ग्याएर कर्के आँखाले सोमदत्तलाई हेरी अनि कौतुक चाञ्चल्यका साथ भनी,– "तर कठै ! बाजको प्राणरच्छे हुने भएन !"

त्यही सानो निहुँमा उनीहरूको बहस प्रारम्भ भयो। सुम्निमाले पनि किन हो, आज आफ्नो हठ छाडिन। बहसको प्रारम्भमा त ऊ केही ठट्टा नै गरिरहेकी थी; तर सोमदत्तले उच्च भावावेगमा अर्हीको कुरा गर्दागर्दै जब बराबर, 'तिमी केही पनि बुझ्दिनौ' भन्न लाग्यो अनि भने सुम्निमा आवेशमा आई। उसले भनी,– "तिमी पनि बुझ्दैनौ, केही पनि बुझ्दैनौ।"

आफ्नो आवेग देखेर ऊ स्वयं पनि एकछिन चकित भई, तर हठ छाडिन। भन्न लागी,– "ल भो सुनें तिम्रो शिवि राजाको कथा। के भो त त्यसले ? तिमीले जुन अहिंसालाई त्यति ठूलो भनी भन्यौ, खै त त्यो राजाको कथामा मेल खाएको ? म त तिम्रो कुरै बुझ्दिनँ, तिम्रो कुराको अर्थ लाउने सक्दिनँ। शिविले तिमीभन्दा बढ्ता यति मात्रै बुझेको रेछ कि बाजलाई आहार चाहिन्छ र त्यसको आहार खोसेपछि अर्को कुनै

आहारको बन्दोबस्त पनि त्यसलाई गरिदिनुपर्छ। तिनले परेवाको मासुजत्तिकै आफ्नो शरीरको मासु काटेर बाजलाई दिए। तिमीले त त्यति पनि गरेनौ सोमदत्त ! तर त्यति गरेकै भए पनि के हुन्थ्यो र ! एउटा बाजको एक छाकको भोजन तिमी दिन्थ्यौ। त्यही होइन ? के त्यत्तिले बाजलाई सधैंभरि चाहिने आहारको बन्दोबस्त हुन्थ्यो त ...... ? कति मासु दिन सक्छौ आफ्नो जीउबाट तिमी ? र कतिवटा बाजलाई कति दिनसम्म ? पर्किर्तिले मिलाएको ग्याउठघाउलाई कहाँ-कहाँका धर्मका अमिल्दा कुरा ल्याएर बित्थामा किन भत्काउन खोज्छौ ?"

सोमदत्त पनि सुम्निमाको आजको आवेश देखेर चकित भयो। सुम्निमाले यस्तो दृढताका साथ कहिले पनि उसका कुरा काटेकी थिइन। उसले आफूलाई संयत राखेर भन्यो,– "त्यसो भए के तिम्रो दृष्टिमा धर्म-अधर्म केही छैन ?"

सुम्निमाले गुत्थ परेर भनी,– "मलाई थाह छैन धर्म-अधर्मका कुरा ! तिमी पण्डित छौ, तिमी नै त्यसको अर्थ लाउन सक्छौ। तर पर्किर्तिको बनोटलाई भत्काउन खोज्नु आफ्नै बिगार गर्नु हो।"

"त्यसो भए तिमी हिंसा-अहिंसामा पनि कुनै पार्थक्य पाउन्नौ ?"

"बाज हिंसा गर्दैन; हामीले गाई काटेको पनि हिंसा होइन। तर तिम्रा राजकुमारहरूले शिकार खेल्नुचाहिं साँच्चैको हिंसा हो; तिम्रा धर्मका पोस्तक-पुराणहरूले ठीक ठहराएको महाभारतचाहिं साँच्चैको हिंसा हो। तिम्रो धर्मले पर्किर्तिको बनोटलाई खलबल्याएको छ, त्यसैले हिंसा हुनसक्ने भएको छ, जगत्मा।"

सोमदत्तले आफूलाई पुनः सम्हाल्दै शान्त स्वरमा भन्यो,– "अबोध किरातबाले ! यो तिम्रो कुसंस्कारको परिणाम हो कि तिमी हिंसा-अहिंसामा भेद जान्दिनौ। त्यसैले तिमी धर्मस्वीकृत हिंस्रक मर्म नबुझेर त्यसको निन्दा गर्छ्यौ र पाशविक वृत्तिले प्रेरित भएको हिंस्रक पशुको व्यवहारलाई निन्दनीय ठहराउन्नौ। त्यसैले तिमी गोवधलाई मान्य भन्छ्यौ।"

उनीहरूकै नजिक वृक्षको छायामुनि पेट भरेर विश्राम गर्दै उग्राइरहेकी गाईले एकपल्ट 'वाँऽऽ' गरी। सोमदत्तले स्नेहको स्वरमा भन्यो– "कपिला माता !"

गाई जुरुक्क उठी, मानों घर जान प्रस्तुत भएकी छ। आश्रम जान उद्यत भएको सोमदत्तले पनि आफ्नो लौरो टिप्यो। यो देखेर सुम्निमा अत्यन्त दुःखित भई। उसलाई लाग्यो, आजको कुराले सोमदत्तको चित्त दुखेछ। उसले मनमनै आफूलाई बेस्करी धिक्कारी। एकछिनपछि भनी– "सोमदत्त ! तिमीले दिक्क मान्यौ। मसँग रिसायौ तिमी। म पनि आज बित्थामा जान्ने भएर तिमीसँग मुख लागें। मैले बिराएँ, छेमा गर्यौ सोमदत्त !"

भोलिपल्ट भेट हुनासाथ सुम्निमाले भनी,– "सोमदत्त ! आज रातभरि मलाई दिक्क लागिरह्यो, तिमी रिसायौ भनेर। आमाले मलाई भन्नुभयो, मेरो उमेरमा त्यस्तै हुन्छ रे स्वाम्नीमानिसहरूलाई। मध्याह्नको गर्मीमा रन्किन्छ रे आड र सुही पनि हराउँछ

रे कहिलेकहिले। त्यस्तै भएको थियो क्यार हिजो मलाई .....चौध-पन्ध्रकी पनि त भएँ ति म।"

यति घतलाग्दो स्वरमा सुम्निमाले आफ्नो कुरा भनेकी थी कि सोमदत्तको चित्त शान्त भयो। उनीहरू सहज वातावरणमा कुरा गर्न लागे। सोमदत्तको नजिकै कपिला चरिरहेकी थी। मध्याह्नको घाम वृक्षमुनि पुग्न सकेको थिएन। सोमदत्त वृक्षको फेदमा अडेस लाएर बसेको थियो– गोडामाथि गोडा उपरखुट्टी लगाएर। उसको गोडैनिर घोप्टो परेर कुहुनाको भरमा शरीरको अग्रभाग उचाली सुम्निमा पल्टिरहेकी थी। कुरैकुरामा उसले भनी,–"आमा भन्नुहुन्थ्यो, म औधी राम्री छु रे, मेरो जीउ भरिलो छ रे, पेट सुलुक्क पऱ्या' स्तन पनि ठिक्क ठाउँमा छन् रे...... होइन त सोमदत्त ?"

सोमदत्तले भन्यो,– "यस्ता कुरा गर्न हुन्न तिमीले, सुम्निमा ! यी पापवचन हुन्।"

सोमदत्तको अझ नजिक घस्रिएर सुम्निमाले चकित हुँदै सोधी,– "कस्तो पाप ?"

सोमदत्तले भन्यो,–"शरीर पापको खाडल हो, र त्यसैको तिमी प्रशंसा गर्छ्यौ सुम्निमा !"

सुम्निमाले निःश्वास फालेर भनी,–"तिमी त जेमा पनि पाप मात्रै देख्छौ– हिंसामा, गाईको मासुमा, एकाबिहानै ननुहाउनुमा, जप नगर्दामा अनि राम्रो जीउ हुनमा...... । यसरी पापैपापले चारैतिरबाट घेरिएर बस्नुपर्दा तिमीलाई कस्तो सास्ती हुँदो हो; कठै !"

सुम्निमाको स्वर साह्रै मायालु थियो। एकछिनसम्म चुप्प रहेपछि सोमदत्तले भन्यो,– "सुम्निमा ! तिमी आफ्नो शरीरलाई ढाक्ने गर।"

सुम्निमा उठेर बसी। उसको पेट र तिघ्रामा धूलो र मसिना खरपात टाँसिएका थिए। लाज मानेजस्तो गरी मुन्टो फर्काएर उसले भनी,– "नाईं; मलाई लाज लाग्छ लुगाले जीउ ढाक्दा, अप्ठ्यारो लाग्छ, साँच्चै !"

सोमदत्तले भन्यो,– "नाङ्गो हुँदा पो त लाज हुन्छ।"

सुम्निमाले टाउको हल्लाई। भनी,– "अहँ, मलाई त सिंगारेको जस्तो लाग्छ; त्यसैले त लाज लाग्छ नि !"

शिरमा पहिरिएको रातो गुराँसको फूललाई हत्केलाले ऊ अनायास नै छोप्न पुगी, मानौं कुनै लज्जाको स्थल बन्न गएको छ।

यसको के उत्तर देओस् सोमदत्त। मानौं आफैंलाई भनेझैं गरी मसिनो स्वरमा भन्यो,– "अज्ञानताको अन्धकार हो यो।"

यस प्रकार सोमदत्तको जीवन बितिरहेको थियो। वयःक्रमानुसार ऊ युवा भयो र सुम्निमा युवती। सूर्यदत्तले वयःप्राप्त पुत्रको तदनुसार उच्चतर शिक्षाको व्यवस्था गरिदिए। वेद, उपनिषत्, वेदान्त, दर्शन आदिको कठोर अध्ययनतर्फ सोमदत्त निर्लिप्त भयो। यज्ञ, जपादिका नियम र समयमा पनि विस्तार गराइयो। पिताले भने,– "वत्स ! अब तिमी यस्तो कठिन आयुमा प्रवेश गरिरहेका छौ जसमा बाह्य शरीरजनित मोहले ज्ञानलाई व्याप्त गरी तथा सर्वशक्तिसम्पन्नताका साथ मनुष्यको आत्माउपर आक्रमण

गर्दछ। यौवनको यो कठोरतम परीक्षाबाट उत्तीर्ण हुन सक्यौ भने परमपदप्राप्तिका तिम्रा मार्ग सुगम हुनेछन्; नत्र अहिलेसम्मको तिम्रो प्रयत्न विफल हुनेछ, तिम्रो तपस्या नष्ट हुनेछ, व्रत खण्डित हुनेछ।"

तर सोमदत्तलाई स्वयं पनि यसको ज्ञान थियो कि यौवन अत्यन्त कठिन अवस्था हो। अरू किसिमका सम्पूर्ण मायामोहका उपर विजय प्राप्त गर्न सकेका ऋषिमुनिहरू पनि यौवनका वशमा परेर ब्रह्मपदच्युत भएका वृत्तान्त उसले ग्रन्थहरूमा पढेको थियो। उसलाई थाह थियो कामवासनाउपर विजय प्राप्त गर्नु नै महान् विजय हो। अतः शरीरको आग्रहलाई निर्मूल पारेर मात्र त्यो विरतस्थितिमा मानिस पुग्न सक्दछ जहाँ आत्मा-परमात्माको भेद शून्य भएर अभेदपद प्राप्त हुन्छ।

पिताले सम्झाए,– "पुत्र ! अत्यन्त सावधान हुनुपर्छ तिमीले। ब्रह्मचर्यको कठोर कण्टकाकीर्ण मार्गको यात्रा अब तिमी प्रारम्भ गर्छौ। जब-जब तिमीलाई दैवी परीक्षाको सामना गर्नुपर्नेछ तब-तब केवल यही एउटा कुरा स्मरण गर्नू कि विषयवासना निकृष्ट तत्त्व हो, शरीरको आनन्द विष हो, अतः घोर तपस्याबाट प्राप्त महासागरभन्दा पनि महान् आत्मोपलब्धिलाई यसको सूक्ष्म बूँदले विषाक्त बनाइदिन्छ।"

सोमदत्तलाई धर्मग्रन्थादिको पूर्ण अध्ययन थियो। उसले प्राचीन ऋषिमुनिहरूको चरित्रको अध्ययन गर्ने गरेको थियो। त्यसो हुँदा पिताको वचनको सत्यताको प्रमाण उसले आफूले अध्ययन गर्ने गरेका ग्रन्थहरूमा ठाउँ-ठाउँ पाइरहने गरेको थियो। अध्ययनले मात्र के भयो र; उसको दिन-प्रतिदिनको स्वयं अनुभवले पनि अत्यन्त तीव्रताका साथ उसलाई स्पष्ट गर्दै थियो कि यौवनको प्रचण्ड उन्मादको दमन गर्नु यथार्थमा अति कठिन तपस्या हो। समुद्रको ज्वारलाई मानिसले कदाचित् आफ्नो हत्केलाले थाम्ने सके पनि सहस्र सिन्धुको सम्मिलित वेगभन्दा पनि अत्यधिक शक्तिशाली यौवनको वेगवान् ज्वारलाई शरीरको समस्त शक्ति लाएर पनि के दमन गर्न सकिएला र मनोबल र तपस्याबाट अर्जित ब्रह्मतेजको अभावमा ? यी सबै कुरा सोमदत्तलाई थाहा थियो, र त्यसैले बृहत् आयोजनाका साथ यम, नियम, निदिध्यासन आदि योगका अष्टमार्गका अभ्यासमा ऊ संलग्न हुन लाग्यो। यो शरीररूपी रथमा जोतिएका इन्द्रियरूपी पाँच सवेग अश्वलाई मनरूपी सारथीले वशमा राख्न सक्नुपर्छ, नत्र यसको परिणाम सर्वनाश हो। तसर्थ मनको सारथ्य-साधनको माहात्म्य धर्मग्रन्थहरूमा वर्णित छ,– "दुष्टाश्वयुक्तमिववाहमेनं विद्वान् मनोधारयताप्रमत्तः।" त्यसैले यौवनको तपस्या उसका लागि चित्तवृत्तिनिरोधको योग भएको थियो।

सोमदत्तले सुम्निमाबाहेक अरू कुनै वयःप्राप्त युवतीलाई नजिकैबाट देख्न पाएको थिएन। त्यसो हुनाले यौवनको विनाशरूपमा केवल सुम्निमा मात्र उसका सामु उपस्थित भइरहन्थी। सानै उमेरमा गाउँ छाडेर आश्रमवासी हुन यहाँ आएको थियो। गाउँमा पनि उसले मातापिताबाहेक अरू कसैको सहवास पाएको थिएन। धेरै वर्षपहिले अरण्यवासी किरात-भिल्लहरूको सभामा उपस्थित भएका नारीहरूको पृथक्-पृथक् अनुहार उसको

स्मृतिमा अड्न सकेको थिएन; नारीत्वको समूहमा प्रत्येकको व्यक्तिगत मुखडा एकाकार भएर लिपिएको थियो। त्यसैले यौवनको मदप्लावित चाञ्चल्यका साथ सदासर्वदा सुम्निमाको चित्र नै उसको मनमा उदय हुन्थ्यो। ऊ कहिले सोच्थ्यो पनि,– 'कहीं सुम्निमा नै कुनै ईर्ष्यावान् देवताले उसको परीक्षार्थ पठाएको मोहरूप त होइन ?'

जतिजति उसको मन सुम्निमातिर आकृष्ट हुन्थ्यो उतिउति ऊ आफ्नो तपस्याको समयावधि र कठोरता पनि बढाउँदै लग्थ्यो। दिउँसो कौशिकीतटमा उनीहरूको भेटघाट त हुन्थ्यो, तर पहिलेको जस्तो कुराकानी भने हुने गर्दैनथ्यो। सोमदत्त आफ्नो तपस्याको प्रयोग गर्दै ध्यानलाई बाह्य जगत्बाट खिंच्दै आत्मान्तरमा बाँधेर राख्ने प्रयत्न गर्थ्यो; त्यसैले धेरैजसो ऊ टोलाएको हुन्थ्यो। सुम्निमा मनमनै भन्थी,– 'के भएको हो आजकाल सोमदत्तलाई ?' तर उसलाई लाग्थ्यो, ऊ आफैं पनि पहिलेकी जस्ती चञ्चल र वाचाल छैन। ऊ स्वयं पनि त कुरा गर्ने प्रयोजन देख्दिनथी। उसलाई लाग्थ्यो, मन भरिपूर्ण भएपछि शब्द निरर्थक हुँदो रहेछ। ऊ पनि टोलाएर बस्थी। कहिलेकाहीं कुरा भइहाल्थ्यो नै भने पनि त्यसमा पहिलेको जस्तो बहसको उत्तेजना हुँदैनथ्यो। दुवै आफ्ना-आफ्ना कुरा भन्थे, तर एउटाले अर्कोलाई मनाउने ढिपी लिंदैनथे। त्यसो त पहिले पनि सोमदत्त ढिपी गर्दैनथ्यो; धेरैजसो सुम्निमाकै ढिपी हुन्थ्यो। तर अचेल उसले पनि ढिपी गर्न छाडिदिएकी थी।

एक दिन सोमदत्तलाई ध्यानमग्न भएजस्तो देखेर, अनि आफूलाई पनि धेरैबेरसम्म टोलाएर बसिरहेको पाएर सुम्निमाले सोधी,– "सोमदत्त ! आजकाल किन हामी पहिले-पहिलेको जस्तो कुरा गर्दैनौं, किन ? यस्तो लाग्छ कि तिम्रो र मेरो बीचमा एउटा ठूलो पहाड धुमधुमती उभ्भेको छ; किन ?"

सोमदत्तले भन्यो,–"शान्ति सत्यको स्वर हो।" यति मात्र भनेर ऊ चुप्प लाग्यो।

सुम्निमाले सोधी,–"सत्य के हो नि ?"

"आत्मा !"

सुम्निमाको अन्तर्हृदयमा आनन्दको सानो लहर त्यसैत्यसै नाच्न, उफ्रिन लाग्यो। कोमल स्वरमा उसले भनी,– "त्यसो भए तिम्रो आजकालको शान्ति पनि मेरै जस्तै आत्माको स्वर हो त ?"

एकछिनसम्म दुवै मौन रहे। सुम्निमाले गद्गद हुँदै आफैंलाई सोधेजस्तो गरेर परितृप्तिका दीर्घ उच्छ्वाससँगसँगै भनी,– "त्यसो भए मेरो पनि आत्मा रे होइन त सोमदत्त ? तिमी मलाई पहिले-पहिले जुन आत्मा भनेर सम्भ्फाउने गर्थ्यौ मेरो पनि त्यस्तै आत्मा रेछ योभित्र !"

यति भन्दै उसले नाङ्गो छातीमा दुवै हात राखी र लामो सास फाली।

सोमदत्तले उत्तर दिएन। एकछिनपछि लाठो टिपेर ऊ उठ्यो, अनि भन्यो,– "अब म आश्रम फर्किन्छु।"

"यति चाँडै ?"– आहत आग्रहमा सुम्निमाले प्रश्नको रूपमा एउटा निःश्वास छाडी।

सोमदत्त असगयमै आश्रम फर्क्यो, गाईको तात्कालिक सेवा समाप्त गरी आश्रमको केही पूर्वको उपवनमा गयो र एउटा विशाल शालवृक्षमुनि पद्मासन बाँधेर समाधिस्थ भयो। अचेल समय-समयमा यसरी नै ऊ समाधिमा लीन हुने गर्थ्यो। दुवै अन्तर्चक्षुलाई निम्नललाटको मध्यविन्दुमा केन्द्रित गरेर निश्चल भावमा ऊ धेरै समयसम्म वसिरहन्थ्यो। त्यसो गर्नाले चक्षुजनित विकारको मोचन हुन्थ्यो र इन्द्रियको चञ्चलताको शमन।

वृद्ध सूर्यदत्त र उनकी वृद्धा पत्नी पुत्रको यो प्रयोग देखेर अत्यन्त सन्तोष मान्दथे।

तर सोमदत्तले आफूलाई जतिसुकै योगक्रियामा संलग्न राखे पनि यौवनको चञ्चलताको दमन केवल क्षणिक मात्र हुन्थ्यो। आसनबाट उठ्नासाथ उसको मानसपटमा सुम्निमा उपस्थित हुन्थी। कहिले-कहिले परास्त भएर अत्यन्त दीन स्वरमा सोमदत्त पुकारा गर्थ्यो– "हे प्रभु ! यो दासानुदासउपर किन कृपादृष्टि नराखेको ? कामरूपी ग्राहले यो भक्त ग्रसित छ, हे गजमोचक विष्णो ...... !"

यस प्रकार भक्तिको आवेगमा हुन गएका परिप्लावित नेत्र र करुणार्द्र वाणीमा ऊ वन्दना गर्थ्यो। उसलाई भक्तिमार्गको पनि पर्याप्त अध्ययन थियो। भन्थ्यो,– "हे परम प्रभो ! किन अझै देवप्रसाद मेरा लागि अदेय छ ? के मेरो भक्तिमा अझै न्यूनता नै छ ?"

एउटा कुराको भने उसलाई सन्तोष थियो। सुम्निमासँग साक्षात्कार हुँदा उसको विकारयुक्त मन अनायास नै परिस्कृत र संयममा रहन्थ्यो। ऊसँग साक्षात्कार हुँदा सोमदत्तलाई कहिले पनि त्यस्तो अन्तर्पीडाको वोध हुँदैनथ्यो जस्तो उसको परोक्षमा उसलाई हुने गर्थ्यो। मानौं शरीरको सामीप्यको सूक्ष्म सन्तोषले नै पनि उसको मन स्थिर हुन गएको छ। आफ्नो दृष्टिबाट ओझेल हुँदा उसको मन असंयत हुन्थ्यो, मानौं मनभित्र सुम्निमाको छापाबाहेक अरू केही पनि निवास गर्दैन। के सोमदत्त यो सोचेर सन्तोष गर्न सक्ला कि मन असंयमी भए पनि इन्द्रियहरूलाई त उसले संयममा राख्न सकेको रहेछ ? ब्रम्हचर्य इन्द्रियदमन त अवश्य नै हो तर साथै यो कामवासनाको निर्मूलन पनि हो। घोडा वशमा त आए तर सारथी नि ?

यो सानो सन्तोष पनि एउटा सोमदत्तको खोसियो एक द्विप्रहरमा। ऊ सधैंजस्तो आश्रमवाट कपिला गाईलाई लिएर कोशीतटमा आएको थियो। सुम्निमा पहिलेदेखि नै उसलाई पर्खिरहेकी थी। धेरै दिनपछि उसमा पहिले-पहिलेकै जस्तो चञ्चलताको आभास थियो। उसका आँखा क्रीडाको कौतुकमा अस्थिर थिए। त्यतातिर सोमदत्तको ध्यान थिएन। आजकाल उसलाई शरीर र मनको पार्थक्य र त्यसबाट उत्पन्न हुने भिन्न प्रकारका विकारको रूपको विश्लेषण, निरूपण तथा तिनलाई दमन गर्नेतर्फ मात्र ध्यान रहन्थ्यो, यस प्रकारको चिन्तनले उसको वाणीमा तदनुरूप गम्भीरता आएको थियो। सुम्निमा भने त्यस दिन पहाडी निर्झरिणीसदृश लहराइरहेकी थी। हृदयभित्र अट्न नसकेको चपल वङ्किमताका साथ नर्तन गर्दै ध्वनिमय आनन्दमा उल्लसित हुँदै थर्किरहेकी थी। कहिले दुगुर्दै वालुवामा पुग्थी र त्यहींबाट केही कम्पित स्वरले बोलाउँथी,–

"सोमदत्त ! आऊ न, सोम !" र कहिलेचाहिं दुगुर्दै सोमदत्तकै छेउमा आएर कानमा साउती गरेको झैं कलिलो स्वरमा भन्थी,–"सोमदत्त ! सोमदत्त !!"

उसको कपालको गन्ध सोमदत्तको कानमा पुग्थ्यो र शिर हल्लाएर त्यो गन्धलाई झार्न खोज्थ्यो,–"यो के क्रीडा गरेकी सुम्निमा ?"

भूइँमा कुर्कुच्चा गाडेर त्यसैको धूरीमा सुम्निमा फनन्न घुमी। अनि भनी,– "आज म आफूभित्र आफैं नअटाएकी छु, सोमदत्त ! मेरो यो जीउले अब आनन्दको बोझ खप्न सक्दैन; त्यसैले त यो काँपेको छ, सिरिङ्गसिरिङ्ग गर्छ मेरो जीउ। किन-किन आज यो जीउले ठूलो सुक्ख पाएजस्तो लागेको छ मलाई, त्यसैले मलाई यस्तो भएको आज।"

सोमदत्तले एकदम शान्त मुद्रामा भन्यो,– "आनन्दको सन्धान शरीरभन्दा बाहिरको खोजी हो।"

सुम्निमाले भनी,–"अहँ, यी सबै कुरा नगर आज।"

यति भनेर श्वेतहँसिनीको नर्तन चालले ऊ नदीकिनारामा पुगी र पानीभित्र पसेर जलक्रीडा गर्न लागी।

वृक्षमुनि बसेर सोमदत्त यो दृश्य हेरिरहेको थियो। मध्याह्नको सूर्यको आँखा तिर्मिराउने ज्योति नदीतटको बालुवामा परेर विकीर्ण हुँदै सारा जगत्लाई उद्भासित गर्दै थियो। सघन जङ्गलभित्रसमेत त्यो आसमान रूप प्रवेश गरेर त्यहाँको सघन हरितिलाई पातलो तरलतामा परिणत गरिरहेको थियो; लाग्थ्यो, हरियो तिरस्करिणीभित्र एउटा अर्कै प्रकाशमान लोक जीवित रहेको छ। कोशी नदी पनि आफ्नो अशान्त वक्षमा त्यो आसमान लोकलाई धारण गर्दै बगिरहेकी थिइन्। जलको प्रवाहको आघात नदीभित्र दृढताका साथ अडेका विशाल शिलाखण्डहरूमा पछारिएर लक्ष्य खण्ड हुँदै चूर्ण भएका ज्योतिमुक्ता आकाशमा छरिन्थे। नदीको कलकल ध्वनिले रहस्यको संवादलाई अनन्तको कानमा पोखिरहेको थियो। अरू चराचर तन्द्रामग्न, स्तब्ध र शान्त थियो। वृक्षका पातमा उफ्रिरहेका फिस्टाको चपलता पनि निष्प्रयोजनीय लाग्दैनथ्यो– मध्याह्नको त्यो रहस्यमय स्तब्धतामा।

सोमदत्तको ध्यान वृक्षमा क्रीडा गरिरहेका फिस्टामा गयो। अङ्गुष्ठपरिमाणका चराहरू चपलतामय भइरहेका थिए। उसले सोच्यो,– 'यिनीहरू लोप नै भए पनि के यो विराटतामा शून्यता आउँदैन र ? यो ब्रम्हाण्डसँग यी सूक्ष्म फिस्टाहरूको के र कस्तो सम्बन्ध ? के यस्तै तत्त्वहरूको विवेचना उपनिषदादिमा भएको होइन र ?'

उसको ध्यान बराबर हरियो पातको सिँहालमा कलिला हाँगाउपर फुत्तफुत्त झर्दै–उफ्रँदै रमाइलो गरिरहेका एक जोडी फिस्टामा गइरहेको थियो। र साथै सुम्निमातिर पनि बारम्बार उसको ध्यान आकृष्ट भइरहेको थियो; ऊ तटनजिकै जलभित्र आनन्दको तरङ्गित लोकको सृष्टि गरिरहेकी थी। वनको मध्यबाट कुनै एउटा अदृश्य चराको तीखो कूजन ध्वनित भयो,– "कूऊ-कूऊ............"

सोमदत्तको विचारशृङ्खला हठात् भङ्ग भयो। उसलाई लाग्यो, स्तब्धता तरङ्गित भएको छ चारैतिर। जसलाई उसले विराट् शून्यता भनेको थियो त्यो आन्दोलित

समुद्रजस्तो तरङ्गित हुँदै चञ्चल भएर उठ्यो केवल एउटा नगण्य पक्षीको कूजनले । त्यो ध्वनितरङ्गले सोमदत्तलाई पनि स्पर्श गर्‍यो । उसको शरीर अचानक काँप्यो । उसको तपकृश गात्रमा सिहरन भयो र विस्तार-विस्तार विराटताको लोक उसका सामुन्ने नै विलाउँदै सेलायो; अनुभवको मुट्ठीमा केवल उसको दुर्बल शरीरको सिहरन मात्र रहन गयो । के यो मोह त हैन ? आँखामा लाग्न लागेको यो जालो के निद्रामग्न चराको आँखामा लागेको जस्तो होइन ?

यो को हो उसका सम्मुख उभिएको ? के यो उसको मनोलोकको चित्र त होइन जो अहिले उसको आँखाअगाडि उपस्थित भइरहेछ, तन्द्राको छलमा ? यो के ध्वनि हो, उसलाई सम्बोधन गर्दै उसको कानमा परिरहेको छ ? शायद ऊ निदाएछ । उसको असंयमी मनले यहाँ पनि कौतुक प्रारम्भ गर्‍यो होला ।

त्यही बेला उसले टड्कारो स्वर सुन्यो सुम्निमाको,– "सोमदत्त ! कहाँ पुगेका छौ तिमी ? देख्दैनौ मलाई ? म यहीं त छु नि !"

निस्सन्देह सुम्निमा उसका सामु नै उभिएकी थी । सोमदत्तले सुम्निमालाई हठात् पहिलो पटक देखेजस्तो चकित दृष्टिले हेर्‍यो । ऊ सहस्रसूर्यको प्रखरताका साथ उसका सम्मुख उभिएकी थी, यौवनको चरमावस्थामा केही कालका लागि शरीरले पाउने प्रखरताका साथ । सोमदत्तले देख्यो, मनको रचना मात्र होइन यो, छलद्वारा उसको पटलमा विकारको भाफबाट निर्मित हुन गएको फुस्साको चित्र पनि होइन यो । यो त स्थूल पार्थिवताका साथ उसको आँखाअगाडि खडा छ, र टाढा नै उभिएको भए पनि उसको शरीरलाई यसले वेगका साथ हल्लाइरहेको छ, आँधीले वृक्षलाई लछार्दै हल्लाएजस्तो । इन्द्रियका पाँचै वेगवान् अश्व असंयमी भएर हिनहिनाइरहेका थिए, नाथ्रो फुलाएर, टापलाई भूइँमा बजार्दै; मनको सारथी तपसाधनाको रासलाई आफ्नो सम्पूर्ण शक्तिका साथ खिंचिरहेको थियो, दाँत पिन्दै, परिश्रमले रातो मुख पार्दै, ललाटमा स्वेदबिन्दु टल्काउँदै ।

सोमदत्तको यस्तो अवस्था देखेर सुम्निमा घबडाई । चिन्ताविह्वल स्वरमा उसले सोधी,– "सोमदत्त ! के भो तिमीलाई ? किन यसरी अनुहार बिगारेको ?"

सोमदत्तले श्वास साध्दै उत्तर दियो,– "इन्द्रियका अनियन्त्रित पाँच अश्व छन्,– असंयमी, असंस्कृत, दुर्दान्त, पाशविक । साधनाको लक्ष्य नै तिनलाई निपुण अश्वारोहीले गरेजस्तो नियन्त्रणमा राख्नु हो ।"

स्वयं सोमदत्तलाई नै लाग्यो सुम्निमाको प्रश्नको उत्तर होइन यो । सुम्निमाले भनी,– "तिम्रा अनौठा कुरा हुन् यी, र आज त झन् तिम्रा सबै कुरा अनौठा खालका भइरहेछन् ।"

हो, आज सोमदत्तले अनुभव गर्‍यो, उसको शरीरसम्म पनि आफ्नो नियन्त्रणमा रहेनछ, सुम्निमाको नग्न, सुन्दर शरीरको आकर्षणलाई सहन नसक्ने रहेछ । यो कृशदेहमा कत्रो शक्तिसम्पन्नता कि विश्वका महान् तत्त्वका उपर उसका ज्ञानविज्ञान र

तपसाधनाका उपर त्यो अझै अधिष्ठित हुन खोज्दछ– सर्वोपरि भएर। उसलाई ब्रह्मचारी शुकदेवको स्मरण भयो जसलाई एकपल्ट अवश्य नै यस्तै भएको हुँदो हो प्राचीन कालमा। के सुम्निमा पहिलेकी देवसभाकी शोभामयी रूपराशि त होइन ?

के यो कौशिकीतटमा शरीर र आत्माको सनातन नाटकको अभिनय हुन लागेको त होइन आफ्‌आफ्नो पक्षका पात्र सोमदत्त र सुम्निमाका रूपमा ? प्रकृतिको अनन्त आँखाले हेरिने नाटक हुन लागेको त होइन आज ?

सोमदत्तले दृढताका साथ मुट्ठी बाँध्यो र मनमनै सङ्कल्प गऱ्यो,– 'म आफ्ना लक्ष्यलाई शिथिल हुन दिन्नँ।'

यस सङ्कल्पका साथ उसमा किञ्चित् संयमको सञ्चार भयो, उसले संयत भएर भन्यो,– "जाऊ, जाऊ, सुम्निमा ! तिमी मेरो आँखाअगाडि नपर, –जाऊ, तिमी अदृश्य होऊ मेरो दृष्टिबाट।"

सुम्निमा एकदम वाल्ल परी,– "किन ? मैले के बिराएँ, सोमदत्त ?"

"तिम्रो शरीर मेरो आत्माको विकासमा बाधक छ।"

उसले कुरा बुझी। ओठलाई वक्र पारेर कर्के आँखाले हेर्दै नखराका साथ अचम्म मानेझैं गरी भनी,– "तर यदि तिम्रो आत्मा नै शरीरका विकासका लागि छेकबार हुन गएको छ भने नि ?"

"आत्मा नित्य छ, शरीर क्षणभङ्गुर; त्यसैले नित्यको सेवन गर्नुपर्छ र अनित्यको त्याग।"

"कुन्नि, मैले तिम्रो कुरा बुझें कि बुझिनं थाहा छैन। तर म तिम्रो भाखामा भन्छु; नरिसाऊ नि सोमदत्त ! तिमीले भनेको यही होइन– आत्मा कहिल्यै मर्दैन, जुगजुगान्तरसम्म, यो आकाश छउञ्जेलसम्म रहिरहने कुरा हो। तर यो शरीरचाहिं मर्छ, केहीछिन मात्र रहन्छ। त्यसैले तिमी के भन्छौ भने, एकछिन मात्रै रहने शरीरले भनेका कुरा मान्नु हुन्न, सधैंभरि रहिरहने हामीभित्रको आत्मालाई सफासुग्घर राख्नुपर्छ। यही होइन तिमीले भन्या' ? अब म भन्छु, यो शरीर चाँडै नै मर्ने हुनाले, यसलाई चाँडै नै छाड्नुपर्ने हुनाले यसको झन् बढ्ता हेरचाह गर्नुपर्ने होइन र ? जुगजुगान्तरसम्म, सधैंभरि रहिरहने कुरोलाई जोगाएर राख्नका लागि के काम हेरचाह गरिरहनुपऱ्यो र ! त्यो त सधैंभरि रहँदैछ नि ! रच्छे नहुनेलाई पो रच्छे गर्नुपर्छ। त्यसैले मेरो कुरा मान सोम ! तिमी जसलाई अनित्ते भन्छौ त्यसैको रच्छे गर, नित्ते भन्ने त आफैं जोगिएको छ।"

"आत्मा हिमालयजस्तो अटल छ, सदा स्थायी।"

"शरीर फूलजस्तो राम्रो छ, एकछिन बास छरेर झर्ने।"

"आत्माको आनन्द टुङ्गिन्छ।"

"त्यसैले अनन्त आनन्दको प्राप्ति जीवनको लक्ष्य हो।"

"त्यसैले सकिने आनन्दलाई भोगिहाल्नुपर्छ।"

"अनन्त आनन्दलाई छोडेर को मूढ व्यक्ति क्षणिक सुखको पछि लाग्ला र ?"

"जुगजुगसम्म भइरहने आनन्द असाध्य ठूलो सास्ती हो। त्यसबाट कवै उम्किन सकिन्न। एकछिन रहने सुख नै ठूलो आनन्द हो; त्यो एकछिनमा नै सकिन्छ, त्यसैले।"

"आत्मा कहिल्यै ननिभ्ने सहस्र सूर्य हो।"

"शरीरचाहिं अँध्यारोमा निभि-निभिरहने दियो हो।"

"ननिभ्ने सहस्र सूर्यको आलोक आत्मसेवन हो।"

"सधैं टल्किरहने सूर्यको उज्यालोमा आँखा उघारिरहनुपर्ने सास्तीले अँध्यारोमा निभ्ने दियोको मधुरो उज्यालोलाई कता हो कता ठूलो ठाउँमा राखेको छ।"

प्राचीन कालमा शुकदेव र रम्भाको पनि यस्तै संवाद भएको हुँदो हो। फरक यति मात्रै थियो कि सुम्निमा अज्ञानताको अन्धकारले द्वन्द्वहीन भएर विश्वासको वाणी झिकिरहेकी थी भने प्राचीन कालकी रम्भालाई यस्तो भएको थिएन होला, किनभने ऊ अरूबाट खटिएर आएकी एउटी अप्सरा थी जसलाई निश्चय नै अज्ञानताको आत्मविश्वास थिएन होला। र सोमदत्तलाई पनि अहिलेको अनुभवबाट उसको आफ्नो आस्था त्यस्तै द्वन्द्वमय भइरहेको थियो, जुन अवस्था शुकदेवमुनिलाई पर्न गएको थिएन होला। सोमदत्तलाई बीचबीचमा लाग्थ्यो, ऊ अनुभवले समर्थन नगरेको तर्कलाई केवल कोरा बुद्धिको बलमा सुम्निमासामु प्रस्तुत गरिरहेको छ। त्यसैले उसको मन विचलित हुन्थ्यो। उसलाई आफ्नो आस्थाको द्वन्द्व आफ्नै अपूर्ण तपस्याको परिणाम हो भन्ने लाग्थ्यो। अज्ञानले व्याप्त नारी भने दृढतापूर्वक स्थापित गरिरहेकी थी आफूलाई, र ऊचाहिं ज्ञानबाट व्याप्त हुन सकेको रहेनछ।

यस प्रकारको संवाद कुन्नि कतिबेर चलिरह्यो। सोमदत्तलाई बीचबीचमा अन्धकारले छोपेजस्तो हुन्थ्यो; गहिरो अन्धकारमा उसको शरीर एकाएक डुबे-डुबेजस्तो लाग्थ्यो; मानों कुनै गहिरो शीतल-तललाई स्पर्श गरेर उपलब्धिमा केवल कम्पन मात्र प्राप्त भएझैं उसको शरीर बराबर काँपिरहन्थ्यो। सुम्निमाचाहिं त्यही दुर्बल क्षणमा उसका उपर आघातमाथि आघात गर्दै जान्थी,– "सोमदत्त ! हेर मलाई; यो प्रकृतिको सुन्दरताको माझमा उभिएकी हेर।" अनि फेरि कुर्कुच्चाको धुरीमा ऊ फन्न-फनन्न घुम्थी। सुम्निमाको पूरा शरीर सोमदत्तको अन्तर्हृदयमा एक पलका निम्ति झलमलाएर नाच्यो, र उसलाई लाग्यो कि त्यो किराती युवतीको शरीर पूर्ण मादकताले भरिएर रिंडिरहेको छ।

तत्कालै पुनः संयममा आएर उसले भन्यो,– "यो पापमय दृश्यलाई हटाऊ मेरो दृष्टिबाट।"

सुम्निमा आज अत्यन्त कौतुकमयी भएकी थी, त्यसैले परिहास गर्दै, शरीरलाई बङ्किम पार्दै, आँखालाई एकपल्ट चारैतिर केही खोजेको नक्कल गरेको भान गर्दै, उसले भनी– "कहाँ छ पाप ? खोइ त केही देख्दिनँ।"

तर, फेरि उत्तिखेरै सोमदत्तको अनुहारको विकृतिलाई लक्ष्य गरेर भनी,– "सोमदत्त ! तिमीलाई ज्वरो आएको छ ?"

सोमदत्तले अकारण नै दृढताका साथ चार-पाँचपटक शिर हल्लायो र भन्यो,– "छैनं म बिरामी, म स्वस्थ छु।"

र, अलिक स्वर चढ्का गरेर फेरि थप्यो,– "सुम्निमा ! म भन्दैछु, यो तिम्रो शरीर पापरूप हो, विष हो, फोहर हो। हटाऊ मेरो अगाडिबाट यो नर्कलाई।"

सुम्निमाको मानले ठूलो आघात पायो। उसलाई आफ्नो शरीरको ठूलो अभिमान थियो र त्यो शरीर आज विशेषरूपले उल्लसित भइरहेको थियो। सुम्निमाको अर्ध-चेतनामा आमाहरूका प्रशंसाका शब्द गुँजिरहेका थिए,– 'सुम्निमाले असाध्य राम्रो जीउ पाएकी छ।' तर अहिले यही गर्वको विषयलाई हेला गर्दै सोमदत्त भन्दै थियो,– "नर्क हो तिम्रो शरीर।"

उसले आवेशमा भनी,–"तिमीमा नै कतै नर्कले वास गरेको छ, त्यसैले तिम्रा आँखावाट त्यही नर्क जहिले पनि च्याइ-च्याइरहन्छ। तिमी पर्किर्तिको बनोटलाई बिगारेर आफूसित डरलाग्दो रित्तो खाडल बनाउँदछौ, र त्यही पर्किर्तिलाई धपाएर निकालिदिएपछि बन्न गएको रित्तो खाल्डोमा तिम्रो पाप जन्मिरहन्छ। पर्किर्तिलाई हेला गरेर तिमी भन्छौ, धर्म मौलाउँछ। यो तिम्रो भूटो सोचाइ हो।"

सोमदत्तले सुम्निमाको कुरावाट पुनः केही तेज प्राप्त गरेर उत्तर दियो,– "धर्म प्रकृति या स्वभाववाट उँचा उठ्ने प्रयासको संज्ञा हो। तिमी जसलाई प्रकृतिवाट शून्य भएको चेष्टा भन्छयौ, त्यो प्रकृतिभन्दा माथि उठेको लक्षण हो। मानिस स्वभाव र प्रकृतिमा सीमित रहन चाहँदैन। ऊ, त्यो सांसारिक बन्धनवाट मुक्त भएर गगनविहारी हुन चाहन्छ।"

सुम्निमाले आवेगमै भनी मर्माहत भएर,– "तिमी शरीरलाई त्यागेर भूटोलाई अँगालिरहेका छौ, धर्म भूटाको शून्य आकाशमा भूट पखेटा फड्फडाइरहेको एउटा भूटो चरो हो।"

सुम्निमा कुन्नि अरू के-के भन्दै थी कि उसको दृष्टि आँखा चिम्लिदै मुट्ठी कसेर रातो मुख लगाएको त्यस्तो निरीह सोमदत्तका उपर पर्‍यो जो सिंहको अगाडि संज्ञाशून्य भई निश्चल भएर आत्मसमर्पण गरिरहेको कातर पशुजस्तो देखिएको थियो।

सुम्निमाले भनी,– "सोमदत्त ! सोमदत्त.......!!"

सोमदत्तले उत्तर दिएन। ऊ एकदम निश्चल थियो। उसको दुब्लो अनुहारमा स्वेदकण टल्किन लाग्यो, र गलामा नशा पुष्ट भएर तन्किए। सुम्निमाले व्यग्र भएर उसलाई सहारा दिँदै उसको शिर आफ्नो वक्षमा राखी र कपाल सुमसुम्याउन लागी।

सोमदत्तले मसिनो स्वरमा भन्यो,– "मलाई स्पर्श नगर।"

सुम्निमा पुनः मर्माहत भई। उसले बिस्तारै सोमदत्तको शिरलाई आफ्नो छातीबाट हटाई, र ठिङ्ग उभिई। सोमदत्तले आँखा उघार्‍यो। सुम्निमा अगाडि नै थी, उसको शरीर किञ्चित् वपुमान। सोमदत्तले मसिनो स्वरमा आग्रह गर्‍यो,– "सुम्निमा ! मेरो समीप नआऊ।"

सुम्निमाले विकलताको ठूलो चोटमा नारीत्वको तमाम अभिमानलाई बटुलेर भनी,–"हुन्छ सोमदत्त ! म तिम्रो नजिक कहिले पनि आउने छैनँ।"

यति भनेर बहुतै दृढताका साथ ऊ फनक्क फर्की र उत्तरतिर लागी। सोमदत्तले केहीबेरसम्म उसको शरीरको पृष्ठभाग थाम्नि लागेको पिडुजस्तो हल्लिँदै नदीको तटमा लोप हुँदै गइरहेको देख्यो। उसको पुष्ट काञ्चन-स्कन्धप्रदेशमा कालो केशराशि लहर उछाल्दै थियो।

त्यो काञ्चन-प्रभा-किरातबाला– देख्दादेख्दै वनमा लोप भई।

थाकेजस्तो भई बिस्तारै सोमदत्तले लाठो टिप्यो, अनि क्षीण स्वरमा बोलायो,– "कपिला माता ! हिंड, अब आश्रम फर्कौं।"

अत्यन्त शिथिल भएर ऊ आश्रम पुग्यो, मानौं अकस्मात् ऊ एउटा जीर्ण रोगी हुन गएको छ। देहमा शक्ति किञ्चित् मात्र पनि थिएन। पुत्रलाई त्यस्तो दीन अवस्थामा शिथिल पग बढाउँदै बिस्तार-बिस्तार आइरहेको देखेर सोमदत्तकी माताले चिन्ताको स्वरमा भनिन्,– "के भो सोमदत्तलाई ? वन-जङ्गलको कुनै हिंस्रक जन्तुले त आहत गरेन पुत्रलाई ?"

सूर्यदत्त पनि कुटीबाट निस्के। पुत्रको अवस्था देखेर उनले व्यग्रातुर भई सोधे,– "के भो पुत्र ! तिमीलाई ? वन-पर्वतको कुनै अज्ञात गर्तमा त परेनौ तिमी, असावधानीले विचरण गर्दा ? शरीर हत-आहत त छैन ?"

मातापिताका समीप पुगेर दीन वाणीमा सोमदत्तले भन्यो,– "मेरो तपस्या अझै अपूर्ण छ। म यही क्षण यस आश्रमलाई त्यागेर कठोरतर व्रतमा लाग्छु। पितामातासँग आशीर्वाद र बिदा लिनका लागि मात्र अहिले म यहाँ उपस्थित भएको हुँ।"

यति भनी उसले झुकेर दुवैको चरण स्पर्श गर्‍यो, र सन्ध्याको अन्धकारमा वनप्रान्तको बाटो प्रस्थान गर्‍यो, अश्रुमय मातापितालाई विमूढ अवस्थामा उभिएकै छाडेर।

साँझतिर सुम्निमा पनि आफ्नो गाउँमा पुगी। उसकी आमाले छोरीको अनुहार देखेर चिन्ताले सोधी,– "के भो सुम्निमा ! तँलाई ?"

अहिलेसम्म नारीको मानले कुनै उपायद्वारा संयममा राखेको आँसुको बाँध आमाको वचनले एक्कासि टुट्न गयो। सुम्निमा रुन लागी।

बिजुवा घरबाट आँगनमा निस्कियो, र छोरीले रोएको देखेर विस्मित हुँदै सोध्यो,– "किन यसो गरेकी सुम्निमा ? कसले के गर्‍यो, तँलाई ?"

आमाले भनी,– "तेरो यो उमेरमा वन-जङ्गल त्यसै एक्लै चहार्दा वायुदेउ लाग्छ भनेर त तँलाई भन्दै थिएँ म। झन् कोशीको किनारतिर त एक्लै जानै हुन्न तरुनीले।"

बाले भन्यो,– "सुम्निमाको उमेर पुग्यो, अहिलेसम्म त उसले दुलहा खोज्नुपर्ने !"

आमाले सोधी,– "सुम्निमा ! तेरा कोई तरुना साथी छैनन् यो गाउँमा ? किन नखोजेकी ?"

सुम्निमाले रुन्चे स्वरमा भनी,– "मैले गाउँको कुनै तरुनो केटोलाई चिनेकी छैनँ, आश्रमको सोमदत्तबाहेक ।"

आमाले मायाको हातले युवती छोरीको शिर सुमसुम्याई । सुम्निमा बलिन्द्र आँसु झार्दै घुँक्क-घुँक्क रुन लागी ।

"धन्धा नमान् सुम्निमा !"– आमाले आश्वासनको स्वरमा भनी,– "कोई पनि किराती केटो तँलाई पाएर भाग्यमानी ठान्नेछ। तैंले हुन्छ मात्र भन्नुपर्छ। हेर्, यो तेरो कलकलाउँदो शरीर !"

आमाले सुम्निमाको शरीरलाई मायाको हातले सुमसुम्याउन लागी ।

x x x

२

यस प्रकार एक दिन साँझ पराजयको तीव्र तोडमा सोमदत्त आश्रमको लघुकृत जीवनबाट पनि निस्केर हिंड्यो। आश्रमले पनि उसको तपस्यामा बाधा पुऱ्याएको थियो। गाउँ, बन्धु-बान्धव, स्वजन-परिजन सबैबाट आफूलाई शून्य गराएर ऊ यो अरण्यमा आश्रमवासी हुन आएको थियो। अब आश्रमको जीवनलाई पनि उसले शून्य गर्नुपर्ने भयो। सांसारिकताको कतिसम्म न्यूनीकरण सम्भव हुँदो रहेछ ? आकाश उसको छादन, वायु उसको पहिरन, कन्दमूल उसको स्वल्प भोजन हुन गए। शरीरले यदि एउटा महान् पराजयको तीतो स्वाद उसको जिह्वामा छाड्यो भने, अब शरीरलाई अन्तिम रूपबाट पराजित नगरी छाड्दैन सोमदत्त। यही अठोट गरेर ऊ गृहत्यागी, आज आश्रमत्यागी भएको थियो। उसको यात्रा एउटा महाभिनिष्क्रमण थियो, उद्योग पर्वको यात्रा, दैवी शस्त्रास्त्रको सङ्ग्रहका लागि वशिष्ठद्वारा प्रतिपादित ब्रह्मतेजको आर्जनका लागि, आध्यात्मिक शक्तिको सङ्गठनका लागि।

जुन निष्ठाले प्रेरित सोमदत्तले आश्रमको जीवनसम्मलाई पनि त्याग्न बेर मानेन त्यो निष्ठा कसरी असत्य हुन सक्ला र ? कुन अज्ञात शक्तिबाट चालित सोमदत्त पिता-माताको चरण स्पर्श गरेर एकक्षण पनि द्विविधामा नपरी घरबाट निस्कियो ? समाज र परिवारको सुरक्षामा जसलाई घरको ओतले घाम र पानीबाट जोगाएर राखेको छ र सुनिश्चित आयस्ताद्वारा पेट पालेर जीवित रहिआएको छ त्यस्तो सामान्य मानिसले सोमदत्तको प्रेरणाको मर्म कसरी बुझ्ने ? जुन वस्तुलाई सांसारिक मानिस बहुमूल्य ठानेर सदा-सर्वदा हृदयमै टाँसेर राख्दछ त्यसलाई मूल्यहीन माटोको डल्लो सम्झेर लत्त्याउँदै, केको प्राप्तिका निम्ति सोमदत्त हिंड्यो, कसले बुझ्ने ? धेरै जोगी, भिक्षार्थीहरू शरीरभरि खरानी घसेर हिंडेका हामीले देखेका छौं; त्यसै हुनाले बानी परेर यो त्यागको रूपलाई अकौतुक दृष्टिले हेर्छौं त्यसका प्रति कुनै उत्सुकता नलिएर। जुन मार्गका उपर अविचलित आस्था राख्दै अद्यावधिसम्म पनि गृहत्यागीहरू विभिन्न स्थानमा घुम्दै फेरो लगाइ नै रहेका छन्, त्यस्तो त्यागको रूप किन देखिने गर्छ यो संसारमा ? किन यसको परम्परा नै स्थापित हुन गयो वर्तमान कालसम्म पनि ? सन्ध्याको लोप हुन लागेको प्रकाशमा समाजतिर पिठ्यूँ फर्काएर निस्किदिने प्रवृत्ति किन आयो ?

यो त निश्चय नै हो कि सोमदत्त किरातबालासँग पराजित भएर मर्माहत भएको थियो। उसको महान् आस्थामा एउटी ज्ञानहीन अनार्य बालाले यति ठूलो आघात पुऱ्याएकी थी कि सोमदत्त रन्थनिएको थियो। उसको अहिलेसम्मको ज्ञान र संयमको तपस्या त्यस्तो शुष्क तृणजस्तो अकिञ्चन रहेछ कि सुम्निमाको अग्निस्पर्शले धप्प बलेर खरानी भयो। के यो पराजयलाई ऊ सजिलैसँग बिर्सियोस् ? त्यसो भए के ब्राह्मणदर्प-

कुण्ठित भएर प्रतिकारको उपाय गर्दछ त ? के ब्राह्मणत्त्व केवल तीक्ष्णतम अहं मात्र हो त ?' तिखारिएको अहङ्कार भाव मात्र ?

तर, के तपस्यालाई अहङ्कारको आर्जन रीति मात्र भन्ने ? के यो सबैका शिरका उपर उद्दीप्त भएर उठेको दण्डजस्तो अहंको जागृति मात्र हो जो यसका प्रति समुचित विनीतताका साथ नझुकेको शिरलाई श्राप दिएर दग्ध पार्दछ ? तपस्याले ऋषिहरूलाई सुरिएको अहं र त्यस अहंको रक्षार्थ ब्रह्मतेजवाहेक अरू के दियो र ?

त्यस्तो हो भने त्याग-तपस्या इत्यादि के मिथ्याको वरण मात्र हो ? के यसमा कल्याणभावना छँदै छैन र ? यदि यसमा गर्वको प्रेरणावाहेक अरू केही छैन भने मानिसले आफ्नो मानव-स्तरभन्दा उँचा उठ्ने यसको लक्ष्य होइन भनी स्वीकार गर्ने त ? त्यसो भए मानव-प्रगतिको आधार नै के हो त यदि त्याग र तपस्या होइन भने ?

सोमदत्तले अहं कुण्ठित भएको वोध गरेन। उसले पराजित भएको त अवश्य नै अनुभव गऱ्यो, र ऊ विक्षुब्ध पनि निश्चय नै भयो; तर उसले यसबाट यो पनि जान्यो कि उसको तपस्या अझै कति अपर्याप्त नै रहेछ। उसलाई आफ्नो अध्ययन र ब्राह्मणपरम्पराले वताएको थियो कि यथार्थ सुख शरीरमा निवास गर्ने तत्त्व होइन; त्यो त त्यस्ता भावनामा निवास गर्छ जुन भावना कर्तव्यपालन गर्दा मानिसमा जाग्रत् हुन्छ। कर्तव्य हो उच्चतर प्राप्तिको प्रेरणा पाएर चालिएको कदम, तर कुनै पनि प्राप्ति त्यसको मूल्य नचुकाएर उपलब्ध हुँदैन। त्यो मूल्य हो शरीरको सतत दान; त्यही हो त्यस्तो प्राप्तिको मूल्य जो मानिसले आफूलाई क्षत-विक्षत पारी-पारी शरीरलाई संज्ञाशून्य वनाई-वनाई चुकाउँछ। शरीरको समस्त मागलाई, त्यसका समग्र चेष्टालाई निःशेष पार्ने प्रयास नै त तपस्या हो नि महत्तर प्राप्तिका लागि।

x x x

## ३

सोमदत्त आश्रमबाट निस्किंदा आस्थाको विजयको स्वप्न लिएर निस्केको थियो। मनमा आस्थाको प्रेरणा थियो। तर त्यति मात्र थिएन उसको मनमा, सुम्निमा पनि नजानिंदो किसिमबाट त्यहाँ बस्दै ऊसँगै आइरहेकी थी। मनमा कुँदिएको त्यही मूर्तिलाई त मेटाउनु थियो नि उसले। अहिलेको तपस्याको हेतु वाञ्छालाई निर्मूल गर्नु थियो जो सियो जस्तो सुम्निमाको रूपमा उसको मर्मलाई च्वास्स-च्वास्स घोचिरहेको थियो। अहिले थालेको तपस्या त्यही मूर्तिलाई हृदयबाट निर्मूल गरी उखालेर फाल्नु थियो।

आश्रमबाट निस्किएर सोमदत्तले अतिशय कठोर जीवनयापन गर्न थाल्यो, निराहार भएर, निर्जला भएर, वाजपेयी भएर, शीतकालमा कैलाशतीर्थको मार्गमा हिमाच्छादित मानसरोवरको जलमा डुबेर, ग्रीष्मका दिनमा हिङ्गलाज तीर्थको मरुभूमिमा पञ्चाग्नि बालेर। कहिले ऊ सूर्यको आतपमा देहपाक गर्थ्यो, कहिले त्यसलाई जलकुण्डमा डुबाएर नुहाउँथ्यो र कहिले समुद्रको चट्टानका उपर पद्मासन लाएर तपस्यारत हुँदा समुद्रको नुनिलो पानी र वायुले पखालिंदा-पखालिंदा उसको छालाउपर काई जम्थ्यो र सीपी, शम्बूक, कर्कट, शैवाल उसको शरीरमा टाँसिन्थे।

अनि, प्रत्येक प्रयासपछि सोमदत्त आफ्नो मनलाई नियालेर हेर्थ्यो कि सुम्निमाको अवशेष अझै बाँकी रहेको त छैन ? यस प्रकार योगी भएर ऊ समस्त विश्व चहार्दै हिंड्यो। कतै उसलाई बौलाहा भने; कतै उसको डरलाग्दो आकृति देखेर ग्रामीण बालबालिका तर्सेर भाग्थे; र कहींचाहिं ऊ महात्मा मानिएर पूजियो। उसको सम्पूर्ण शरीरमा कत्ले-कत्ला जम्दै गयो माछाको जस्तो; शरीर सुक्दै गयो; कङ्कालमा बेरिएको छालाभरि चाउरी मात्र देखिन लाग्यो; कूपजस्ता भासिएका टिलपिल गर्ने आँखाबाट भयोत्पादक ज्योति टल्किन्थे। जनपदमा कति तर्सेर भाग्थे भने कतिचाहिं यसलाई दैवीतेज सम्झेर श्रद्धायुक्त हुन्थे। सुकेको परालको मुठोजस्तो पिङ्गल जटाजूट उसको टाउकोमा खडा थियो र उसका रसरिक्त जोर्नीका हाड शुष्क काठजस्तै खटखट शब्द गर्थे। तर के सुम्निमाले उसलाई त्यस अवस्थामा पनि पछ्याउन छाडी र ? यदाकदा पीडाले ऊ कराउँथ्यो,– 'यो धुकधुकी नथामिउन्जेल सुम्निमाले मलाई छाड्ने भइन।'

त्यसपछि ऊ झन् घोरतर तपस्याको प्रयोग आरम्भ गर्थ्यो। कतिपटक त प्राणान्त अवस्थामा कुनै नदीको तटमा उसलाई फेला पारेर धार्मिक व्यक्तिहरू उसको सेवा गर्थे; र त्यसरी उसमा पुनः प्राण सञ्चार हुन्थ्यो। एकपटक कुनै वनमा दीर्घ ध्यानावस्थामा स्थित भएर बस्दा धमिराको गुँडले उसको शरीर ढाकियो। कुनै राजकुमारीको कौतुक पादप्रहारले भत्किंदा ध्यानावस्थित सोमदत्त प्रकट भएको थियो। यस प्रकार अनेकानेक

प्रयोगद्वारा सोमदत्त आफलाई वासनाशून्य बनाउँद गया– घोरतर तपस्या र प्रयोगमा तल्लीन रहेर।

एक दिन अन्तमा उसलाई आफ्नो तपस्या सफल भएजस्तो लाग्यो। त्यस दिन गङ्गाद्वारमा गङ्गास्नानोपरान्त धेरैबेरसम्म पद्मासनासीन भएर ऊ ध्यानमग्न थियो। सूर्यको प्रथम किरणका साथै उसका चक्षु पनि उघ्रिए। देख्छ त नदी र पर्वतका सारा दृश्य शुचिमय छन्, मानौं धोएर पवित्र भएका छन्। शान्त वातावरणमा केवल गङ्गाको कलकल ध्वनित भइरहेको थियो। नेत्र खुल्नेबित्तिकै उसले देख्यो सूर्यको एउटा छुट्टै किरणरेखा गङ्गाको घाटनजिकै पानीमा परेको छ र त्यो ठाउँमा एउटा सानो आलोडन भइरहेको छ। त्यो आलोडित जलमा बनेका लघु उर्मिकाउपर सूर्यको त्यो रश्मि-रेखा सुवर्ण कलश बनाइरहेको छ। उसको मनमा परमशान्तिको बोध भइरहेछ। विशेष आनन्दको अनुभूतिले उसको सूर्यदीप्त अनुहार प्रसन्न थियो। त्यही समय उसले एक नारीकण्ठ सुन्यो,– "तापसी ! यता नहेर, म स्नानार्थ जलभित्र पसेकी छु, नग्न।"

अनि पो सोमदत्तले देख्यो कि एउटी नग्न तरुनीको जलक्रीडाले गङ्गामा त्यो सानो आलोडन भएको रहेछ, र त्यसका उपर सूर्य किरण परेर काञ्चन प्रभालाई त्यहाँ विकीर्ण गरिरहेको छ।

उसले भन्यो,– "मेरो चक्षुले केवल जल र सूर्यराशिको क्रीडालाई हेरिरहेको थियो बाले ! तिमी निःशङ्क उदकक्रीडा गर। तापसीको चक्षु तिम्रो शरीरलाई ग्रहण गर्दैन।"

स्वभावानुसार तत्काल सोमदत्तले आफ्नो हृदयमा सुम्निमालाई खोज्यो। उसको हृदय रिक्त थियो– एकदम शून्य र खोक्रो। उसलाई लाग्यो, अब ऊ सुम्निमालाई निर्विकार भएर सम्झिन सक्ने भएछ। एकछिनसम्म विकाररहित दृष्टिले तरुनीको जलक्रीडा पनि हेरिरह्यो सुम्निमाशून्य हृदयका साथ। अनि उसलाई लाग्यो, उसको तपस्या सफल भएछ। उसले मृगचर्म र कमण्डलु टिप्यो र उदयाचलका बालसूर्यलाई लक्ष्य गरेर भन्यो,– 'आज मेरो तपस्या सार्थक भयो, म जितेन्द्रिय भएँ।'

र त्यही समय उसलाई आफ्ना मातापिताको सम्झना भयो जसलाई एक दिन सन्ध्यामुहूर्तमा आश्रममा छाडेर ऊ हिँडिदिएको थियो। अब निःशङ्क भएर ऊ आश्रम फिर्न सक्छ।

आश्रमका लागि ऊ तत्क्षण प्रस्थान गऱ्यो।

गाँठि-गाँठा परेको अत्यन्त शुष्क शरीरलाई लौरोको सहाराले क्लान्त पगमा सोमदत्त एक दिन जब आश्रमको लिपेको प्राङ्गणमा उपस्थित भई ठिङ्ग उभियो उसका वृद्ध मातापिताका क्षीण हुँदै गएका दृष्टिले उसलाई चिनेनन्। धेरै वर्षपछि फर्केर आएको आफ्नो पुत्रलाई कुनै वृद्ध तापसी रात बिताउन आएको सम्झिए। सूर्यदत्तले स्वागत गर्दै भने,– "अतिथिदेव ! तपाईंलाई स्वागत छ। कहाँबाट आउनुभयो ? के परिचय छ तपाईंको ?"

सोमदत्तले आफ्नो झुकेको कम्मरमा हातको टेवा दिएर केही सोझो हुँदै आँगनबाटै भन्यो,– "पूज्य पिताले पनि मलाई चिन्नुभएन ?"

र नजिकै आएर उसले दुवैका चरणमा जटामण्डित शिर राखेर दण्डवत् गऱ्यो। गद्गद भएका मातापिताले बारम्बार उसको शिरलाई सुँघे। उनीहरूका आँखा पुत्रस्नेहले रसाए।

सोमदत्तले भन्यो,– "तात ! तपस्याबाट इन्द्रियजयी भएर आएको छु। इन्द्रियउपर पूरा विजय प्राप्त गरेर म फर्केको छु।"

सूर्यदत्त र उनकी पत्नीले हर्षाश्रु झार्दै भने,– "हामीलाई त्यही आशा थियो, पुत्र ! तिमीबाट।"

पुत्रलाई पुनः प्राप्त गरेर वृद्ध दम्पती अत्यन्त आनन्दित भए। झन् तापसी पुत्रको आफूले इच्छा गरेकै जस्तो विकास देखेर उनीहरूको आन्तरिक सन्तोषको सीमा रहेन। जब सोमदत्त विहान विभिन्न योगमुद्रामा बसेर निर्निमेष चक्षुले सूर्यकिरण पान गर्दै त्राटक गर्थ्यो, उसको दुब्लो, पातलो अनुहारमा सूर्यको आभालाई लक्ष्य गरेर उसकी जननी गद्गद भएर भन्थिन्,– "मेरो पुत्रको मुख तपतेजले उद्दीप्त छ।"

जिस्वालाई कण्ठभित्र मस्तकको ठीक मुन्तिर पसाएर अमरत्व रसको एकान्त आस्वादनमा लीन भएको सोमदत्तलाई हेरेर गर्वले रोमाञ्चित भएका सूर्यदत्त भन्थे,– "ब्राह्मणी ! यो असाध्य खेचरी मुद्रा पनि पुत्र सोमदत्तका लागि सहजसाध्य भएछ।"

पुत्रबाट दिनभरि आत्मासम्बन्धी प्रवचन तथा वेद-उपनिषत् र अन्यान्य धर्मग्रन्थका उल्लेख-उदाहरण तथा विद्वत्तापूर्ण विचार-बिन्दुका साथ परमात्माको व्याख्या सुनेर माता आफ्नो कोखलाई धन्य-धन्य मान्दथिन् र पिता आफ्नो पितृत्वको सार्थकता ठान्दथे। उनीहरू मुखामुख गरेर भन्थे,– "पुत्र सोमदत्तले हाम्रो समस्त कुललाई सहजै तारण गर्ने भयो।"

तर एउटा कुराले भने उनीहरूलाई ठूलो चिन्ता थियो– आफ्नो बिहाका प्रति पुत्रको नितान्त विराग।

सूर्यदत्तले चिन्तित स्वरमा भने,– "के हाम्रो कुल सोमदत्तपछि निर्मूल नै हुने भयो ?"

उनकी पत्नीले आफ्नो सेतो कपालमा निराशाको हात राख्दै भनिन्,– "पितृहरूले आफ्नो भाग अब कसबाट पाउने त हाम्रो वंश यही पुत्रमा शेष हुन गयो भने ?"

एक दिन वृद्ध माताले किञ्चित् आशङ्का र सङ्कोचका साथ यो विषय सोमदत्तअगाडि राखिन्; भनिन्,– "पुत्र सोमदत्त ! तिमीले विवाह गर्नुपर्छ।"

सोमदत्तले अनुत्सुकताको दृष्टि उठाएर बहुतै विरक्तिको स्वरमा मातालाई भन्यो,– "माता ! मलाई विवाहको के प्रयोजन ?"

पिताले यसको उत्तर दिए,– "सन्तानउत्पत्तिका लागि विवाह धर्म-अनुष्ठान हो, पुत्र !"

सोमदत्तले भन्यो,– "मैले त आजीवन ब्रह्मचारी रहने विचार गरेको छु।"

"वत्स ! कर्तव्यहेतुले गरेको विवाह निर्दोष मात्र होइन, अपितु धर्मप्रेरित पनि हो।"

आमाले पनि थपिन्,– "प्रेतयोनी र पूतनर्कबाट पितृकुललाई केवल पुत्रले मात्र उद्धार गर्न सक्छ। सोमदत्त ! तिमीले समस्त धर्मग्रन्थ हेरेका छौ।"

सोमदत्तले उस्तै उदासीनताका साथ आफूले ओढेको कम्बललाई पन्छाएर आफ्नो शरीर देखाउँदै भन्यो,– "पुण्यमयी माता ! मैले ब्रह्मचर्यको साधनाका लागि के तपस्या गरिनँ ! आफ्नो शरीरलाई ठाउँ-ठाउँमा काटेर मांसखण्डले अग्निमा आहुति पनि दिएँ।"

सोमदत्तका शरीरभरि खाटै-खाटा थिए। घोर तपस्याको अचिन्त्य कठिनताका चिह्न सोमदत्तको सारा शरीरमा देखेर एकछिन त मातापिता स्तब्ध पनि भए।

केही समयपछि त्यहाँको स्तब्ध शान्तिलाई भङ्ग गर्दै विनयको स्वरमा सूर्यदत्तले भने,– "पुत्र ! कर्तव्यपालनको उद्देश्यले पत्नीसमागमले ब्रह्मचर्य खण्डित हुँदैन। केवल वासना त्याज्य हो।"

आमाले पनि अनुनयको स्वरमा भनिन्,– "पुत्र सोमदत्त ! केवल एक सन्तानका लागि तिमीले आफूजस्तै तापसी ब्राह्मणीको पाणीग्रहण गर्नुपर्छ। अनि मात्र हामी निश्चिन्ततासाथ स्वर्गलोकको यात्रा गर्न सक्छौं।"

सोमदत्तले क्षीण स्वरमा भन्यो,– "एवमस्तु !" उसको वाणीमा कामना र उल्लासको कुनै सूक्ष्मातिसूक्ष्म झल्को पनि थिएन। तर त्यत्तिकैको सानो स्वीकृतिले सोमदत्तको जीवनयात्रा अगाडि बढ्छ। पितृऋणबाट उऋण हुने हेतु लक्षित थियो उसको स्वीकृतिमा। विवाहको साधारण शारीरिक हेतुभन्दा भिन्न हेतुले प्रेरित भएर सोमदत्तले पितामातालाई वचन दिएको थियो– 'एवमस्तु !'

केही दिनपछि एक ब्राह्मणदम्पती कन्या पुत्रीका साथ त्यस आश्रममा आए। सूर्यदत्तहरूबाट आतिथ्य ग्रहण गरिसकेपछि अतिथि ब्राह्मणले आफ्नो यात्राको लक्ष्य बताए,– "तपाईंहरूजस्तो उच्चकुलीन ब्राह्मणपरिवारसँग सम्बन्ध राख्ने हेतुले हामी आफ्नी कन्याका साथ तपाईंहरूको आश्रममा आएका छौं। हाम्री सुलक्षणा कन्या ब्राह्मणोचित शिक्षा-दीक्षाले सम्पन्न छिन्।"

सूर्यदत्त हर्षित भए। उनले भने,– "अतिथिदेव ! हाम्रा निम्ति पनि यो सम्बन्ध कल्याणकारी लाग्छ। धर्मशास्त्रअनुसार नै स्वयं तपाईंकी सुलक्षणा कन्यालाई पुत्र सोमदत्तका निम्ति माग्दछु।"

जसका सम्बन्धमा यो वैवाहिक चर्चा दुई दम्पतीहरूमा भइरहेको थियो, ती सोमदत्त र अतिथिकन्या निःस्पृह भएर अर्कै वार्तामा लागेका थिए। सोमदत्तले विवाहका प्रति नितान्त अनाग्रहको भावमा कन्यालाई सम्बोधन गर्दै भन्यो,– "जीव र आत्माको द्वैतभाव केवल परमात्मामा गएर लुप्त हुन्छ।"

कन्याले मधुरो स्वरमा समर्थन गरी,– "भेददृष्टि अज्ञान दृष्टि हो।"

उता आमाबाबुहरू विवाह-सम्बन्धलाई विधिपूर्वक स्थिर गर्दै थिए भने यता उही निकट बसेका भावी वर र वधू कसरी अनेकता यथार्थताका विभिन्न अंश हुन् र कसरी एकता निराकार र शून्यको पर्यायवाची अर्थ हो भन्ने कुरा प्रतिपादन गर्दै थिए ।

विवाहसम्बन्धी वार्ता समाप्त भएपछि कन्याका पिताले भने,– "शुभस्य शीघ्रम् ।"

पुत्रका पिताले समर्थन गर्दै भने,– "मेरो पनि त्यही विचार हो ।"

उता सोमदत्त भनिरहेको थियो,– "शरीर स्वल्पजीवी तुच्छ मांसपिण्ड हो ।"

कन्या पनि सदृश विचार व्यक्त गर्दैथी,– "श्वासले फुलेको एउटा पानीको फोका मात्र !"

दुवैको सहमति थियो– शरीरको विकारबाट आत्मा जति असलग्न तथा शुद्ध रहन सक्तछ उति नै परमात्मामा त्यो आफूलाई आत्मसात् गर्न समर्थ हुन्छ । मोक्ष त्यही त हो नि, आत्मा र परमात्मा एकाकार हुन सकेको स्थिति ।

भोलिपल्टै वैदिक धर्मानुसार स्थापित भएको अग्निवेदी परिक्रमा गरेर, शास्त्रोक्त विधिहरूको अनुष्ठानद्वारा, उनीहरू पतिपत्नीमा अवस्थित भए ।

विवाहकार्य सम्पन्न भएपछि सूर्यदत्तले पुत्र सोमदत्तलाई भने,– "पुत्रका प्रति मेरो मुख्य र अन्तिम कर्तव्य आज पूर्ण भयो । अब तिमीले पितृका प्रति आफ्नो कर्तव्य गर्नेछौ ।"

विवाहोपरान्त वृद्ध दम्पतीद्वयले आफ्ना ऐहिक कर्तव्यको परिसमाप्तिपछि संन्यासतर्फ ध्यान दिन लागे । एक दिन सोमदत्तको कुटीसामु आएर उनीहरूले भने,– "अब हामी चारै जना तिमीहरूसँग विदा भएर उत्तरायणपथमा प्रस्थान गर्छौं । संन्यासी भएर योगद्वारा प्राण विसर्जन गर्ने शास्त्रमा लक्षित आयुमा अब हामी पुगिसकेका छौं,– योगेनान्ते तनुत्यजेत् ।"

नवविवाहित वर-वधूले आफ्ना पूज्यपाद पितृहरूका चरणमा मस्तक राखे । उनीहरूको मस्तक सुँघेर वृद्धहरूले आशीर्वाद दिए । जाँदाजाँदै सूर्यदत्तले भने,– "पुत्र सोमदत्त ! शारीरिक सुखको त्याग गरेर तिमी तपस्यामा फलीभूत भएका छौ । अन्त्यसम्म धर्मलाई नछाड्नु ।"

सोमदत्तले भन्यो,– "देव ! सुखभावनाको मेरो कल्मष दीर्घ तपस्यामा भस्मीभूत भइसकेको छ । अब ममा शुद्ध कर्तव्य तथा धर्मको प्रेरणापुनीत सुवर्णखण्ड मात्र शेष छ ।"

वृद्ध मातापिताहरूले हिमालयको यात्रा आरम्भ गरेपछि सोमदत्त र उसकी पत्नी पुलोमा आश्रमको प्रधान कुटीमा सरे । दुवै तपस्वी ब्राह्मण थिए; उनीहरूको अधिकांश समय धर्मशास्त्रानुसार निर्दिष्ट दैनिक कार्यको सम्पादनमा व्यतीत हुन्थ्यो । बिहानभरि वैदिक अनुष्ठानका साथ यज्ञादि कार्यमा उनीहरू संलग्न हुन्थे । यज्ञको अग्निले उत्तप्त मुख र धूवाँले पिरो भएका आँखा पुछ्दै पुलोमा ब्राह्मणी दुवैका लागि स्वल्प भोजन बनाउँथी, र पतिको उच्छिष्ट भोजनको एक-दुई गाँस टिपेर ऊ फेरि पतिको कोठामा पुग्थी र दुवै जना दिनभरि धर्मग्रन्थका विभिन्न पुस्तकको अध्ययन-पाठमा तल्लीन हुन्थे । सन्ध्याकालीन धार्मिक अनुष्ठान समाप्त गरेर स्वल्प भोजनपछि शय्या ग्रहण गर्नुभन्दा

पूर्व पुनः केही कालसम्म दियोको धूमिल आलोकमा धर्मग्रन्थहरूको पाठ गर्थे। साधारणतः त्यस समय उनीहरू पाठमा निहित सत्यासत्यरूप व्याख्या गर्दथे। स्वयं पुलोमा पण्डितनारी थी, त्यसो हुँदा अध्यात्मवादको सूक्ष्मातिसूक्ष्म अर्थ र व्याख्या गर्नमा सोमदत्तको यथार्थरूपले अर्धाङ्गिनी भएकी थी। कुनै दिन अध्ययनको तन्मयतामा उनीहरूलाई समय गएको ज्ञानै हुन्नथ्यो। दीपकूपमा तेल सकिएपछि मात्र उनीहरूलाई ज्ञान हुन्थ्यो कि रात्रि धेरै नै बितिसकेको छ। ग्रन्थाध्ययनबाट शिर उठाएर कुशखण्डले बत्ती उकास्न लागेकी पत्नीलाई सम्बोधन गर्दै सोमदत्त भन्थ्यो,– "अब भयो ब्राह्मणी! अब प्रकाशको आवश्यकता छैन। शय्यासमय भयो। 'पूर्णात् पूर्णमिदम्' को व्याख्या भोलि गरौंला। तिमी सुत्न जाऊ।"

पुलोमा उठ्थी, आफ्नो कुशासन बेरेर त्यही कोठाको भित्तामा अडाई राख्दथी। पतिका लागि एउटा लामो कुशासन फुकाएर भूईंमा ओछ्याइदिन्थी र त्यसका उपर एउटा पातलो कम्बल बिछ्याएर त्यस रातका लागि बिदा लिंदै पतिदेवको चरणमा मस्तक राख्दथी। पति गद्‌गद हुँदै आशीर्वाद दिन्थ्यो,– "भाग्यवती भए, कल्याणी!"

अनि पुलोमा आफ्नो कोठामा आएर सुत्नका लागि कुशासनमाथि कम्बल ओछ्याउँथी र एकछिनसम्म श्लोक पाठ गरेर सुत्थी। अर्को कोठामा सोमदत्त पनि सुत्नुअघि एकछिन श्लोक पाठ गर्थ्यो। दुवैलाई आफ्नो जीवन सार्थक हुँदै गएको सन्तोष थियो।

एक दिन बिहान शय्या त्याग गरेपछि सोमदत्तले नित्यको जस्तो कुटीको पिंढी, आँगन र सँघार लिपपोत गरी परिष्कृत भएको पाएन। पति उठ्नुभन्दा पहिले नै पुलोमाले यो काम गरिसकेकी हुन्थी। ब्राह्ममुहूर्तभन्दा अगावै पुलोमा उठ्थी र स्नानार्थ कोशी नदी पुग्थी। स्नानादि तथा सन्ध्यार्चनादि दैनिक कार्य सम्पन्न गरेर ऊ गोशालामा पुग्थी। उसलाई देखेर कपिला गाई चन्चल हुँदै आङ जुरुङ्गजुरुङ्ग पार्दथी। गोशालालाई सफा-सुग्घर पारेर पुलोमाले कुटीको वरिपरि–पिंढी, आँगन, सँघार, तुलसीको मठ इत्यादि लिप्ने गरेकी थी। अनि सोमदत्त पनि उठेर कुटीबाहिर निस्कन्थ्यो र बडो सन्तोषका साथ पत्नीको गृहकार्य हेर्थ्यो। तर त्यस दिन बिहान आँगन इत्यादि नलिपेको देखेर उसलाई आश्चर्य लाग्यो; उसले बोलायो,– "पुलोमा ब्राह्मणी!"

पुलोमाको क्षीण स्वर गोगृहको पछाडिको वनतिरबाट आयो,– "देव! मलाई रात्रिको अन्तिम प्रहरमै रजोदर्शन भएकोले विधिअनुसार गुप्तवासमा बसेकी छु।"

सोमदत्तले अरू कुरा सोध्ने प्रयोजन देखेन। कमण्डलु, कुशासन र एउटा धौत-वस्त्रखण्ड लिएर स्नानार्थ ऊ कोशी नदीतर्फ हिंड्‌यो।

चौथो दिन प्रथम प्रहरमै विधिपूर्वक आप्लावनस्नान गरी शुद्ध अहतवासा भएर पुलोमा दैनिक कार्यमा संलग्न भई। सोमदत्त पनि कोशीबाट स्नानसन्ध्यादि समाप्त गरेर कुटी फर्क्यो। उसले पुलोमालाई भन्यो,– "ब्राह्मणी! मलोद्वासा भएर तीन रातपछि तिमी आज शुद्ध भएकी छयौ। हाम्रा गुरुजनहरूको आज्ञा शिरोधार्य गरी कर्तव्यहेतुले

मात्र पुत्रप्राप्तिका लागि आज हाम्रो समागमकाल उपस्थित भएको छ। हाम्रा स्मृति तथा धर्मशास्त्रानुसार त्यो कार्य सम्पन्न गर्न आज विशेष याज्ञिक अनुष्ठान हामीद्वारा सम्पादित हुनुपर्छ।"

ब्राह्मणीले भनी,– "आज्ञा होस् पतिदेव ! अनुष्ठान विधि कस्तो छ ? तदनुसार सम्पादन गर्न म प्रस्तुत छु।"

सोमदत्तले भन्यो,– "सर्वप्रथम कामनाशून्य हृदयले शुद्ध कर्तव्य भावमा स्थिर रहेर पुत्रेष्टि अनुष्ठान गर्नुपर्छ हामीले। मूल तत्त्व हो वासना–कामनाको परित्याग।"

"पतिदेव ! काम तथा वासनाबाट म विलकुल शून्य छु।"

"भार्या ब्राह्मणी ! मलाई यसको ज्ञान छ। अब विधिपूर्वक गरिने यज्ञ तथा हविष्यका लागि आवश्यक धान तिमी स्वयं कुटेर ल्याऊ। तिमीले शुद्ध अखण्ड वस्त्र त धारण गरेकी नै छयौ, होइन ?"

"छु, आर्य !"

केहीबेरपछि एक ढक्की चामल कुटेर पुलोमा कुटीको प्राङ्गणका बीच निर्मित यज्ञस्थलमा आइपुगी। सोमदत्तले मन्थन गरेर शमीको गर्भबाट उत्पन्न अश्वत्थद्वारा अग्नि प्रकट गरायो। यत्नपूर्वक प्रस्तुत समिधाका सुकेका काष्ठखण्डमा अग्नि प्रज्वलित भयो। त्यसपछि पुलोमाले कुटेको स्थालीपाकको विधिद्वारा घृत संस्कार गरिएको चामलको चरु पकाएर त्यसको संस्कारसमेत सम्पन्न गरेपछि स्थालीपाकबाट अलिअलि अन्न लिँदै सोमदत्तले अग्निमा तीनपटक आहुति दियो, "अग्नये स्वाहा, अनुमते स्वाहा, देवाय सवित्रे सत्यप्रसवाय स्वाहा !" त्यसै गरी पुलोमाले पनि चरुको होम गरी।

तदनन्तर धेरैबेरसम्म गृहसूत्रको विधिअनुसार यज्ञकार्य चलिरह्यो। प्रायः मध्याह्नमा अन्तिम स्विष्टकृत् होम गरेर उनीहरू आसनबाट उठे। अग्निको प्रखर राप र सूर्यको आतपले दुवै दम्पतीको अनुहार रातो भएको थियो। अग्निले ग्रहण गरेर भस्म भएको चरुको एक सानो खण्डलाई सोमदत्तले एउटा सानो छेस्काले झिक्यो र सुइरोको टुप्पोमा शेष रहेको घिउले खरानीलाई भिजाएर पहिले आफ्नो मस्तकमा त्यसको प्रसादरूप तिलक लगायो, अनि पुलोमालाई पनि लगाइदियो।

सोमदत्तले भन्यो,– "पुलोमा ! आज हामीले चरुको यो अवशेषलाई पात्रमा झिकेर भोजन गर्नुपर्छ।"

तदनुसार त्यो स्थालीपाक चरुको भोजन गरेर उच्छिष्ट भाग उसले आफ्नी पत्नीलाई ग्रहण गर्न दियो। तत्पश्चात् हातगोडा धोएर आचमनद्वारा आफूलाई शुद्ध पारी पवित्र जलले 'उत्तिष्ठत' मन्त्र जाप गर्दै तीनपटक पुलोमाको अभिषेक गऱ्यो। यस प्रकार त्यस दिन शास्त्रोक्त नियमानुसार यज्ञकार्यको अनुष्ठानका सम्पूर्ण विधि सम्पन्न हुँदा नहुँदै तृतीय प्रहर भइसकेको थियो। त्यस बेलासम्म पतिपत्नी दुवै अत्यन्त क्लान्त र शिथिल भइसकेका थिए। दिनान्तको सन्ध्याकार्य सम्पन्न गर्ने समय तत्क्षण नै आइहाल्यो। सदाको जस्तो उनीहरूले कोशीतटमा सन्ध्यादि पूजाआजा समाप्त गरे।

गाईको दूधमा बिहान कुटेको चामलको खीर पकाएर त्यसमा गाईकै घिउ मिसाएर पुलोमाले रात्रीभोजन प्रस्तुत गरी ।

सोमदत्तले खीरको भोजन गर्दै भन्यो,– "जुन पुरुष विमल वर्ण, वेदाध्ययी तथा पूर्ण आयुवान् पुत्रको कामना गर्छ त्यसले यस्तै पाकविधिद्वारा प्रस्तुत पायसको भोजन गर्नुपर्छ ।"

पुलोमाले थाकेको स्वरमा भनी,– "स्मृति र धर्मग्रन्थमा निर्दिष्ट विधिअनुसार मैले यो क्षीरोदनम् प्रस्तुत गरेकी छु; 'पुत्रो मे शुक्लो जायेत वेदमनुब्रूवीत सर्वमायुरियादिति' भन्ने वचन छ उपनिषद्मा, देव !"

"हो, ब्राह्मणी !"

सन्ध्याभोजनपछि दीपशिखाको प्रकाशमा उनीहरूले नियमानुसार केहीबेरसम्म धर्मग्रन्थको पाठ गरे । शयनकाल उपस्थित भएपछि पुलोमा उठी । सोमदत्तले भन्यो,– "पुत्रप्राप्तिका लागि आज तिमीले मेरै कक्षमा आउनुपर्छ ।"

पुलोमाले क्लान्त स्वरमा भनी,– "तथास्तु !"

आफ्नो कोठामा जान लागेकी पुलोमालाई सोमदत्तले पनि क्लान्त स्वरमा आज्ञा दिँदै भन्यो,– "पुलोमा ! तिम्रो कुशको शयन-आसन पनि यही कक्षमा ल्याऊ; र हेर ब्राह्मणी ! शुद्धिका लागि मृत्तिकापात्रमा अलिकति गोबर र गोमूत्र पनि ल्याए । स्नान गर्न ताम्रघटहरूमा नदीको जल त प्रस्तुत नै छ, होइन ब्राह्मणी ?"

"हो, देव !"

दिनभरिको अनुष्ठानबाट क्लान्त भएको शरीरलाई सोमदत्तले कुशको गुन्द्रीमा विश्रामका लागि त्यसै राखिदियो । आफ्नो सुत्ने आसन र गहुँत-गोबर इत्यादि सबै आवश्यक सामग्री लिँदै एकछिनमा पुलोमा पतिको कोठामा उपस्थित भई । सोमदत्त थाकेर पल्टेको थियो । उसले शयन-आसन ओछ्याउँदै भनी,– "आजको विशेष अनुष्ठानले शरीर किञ्चित् क्लान्त छ ।"

अत्यन्त शिथिल अनुभव गरेको सोमदत्तले पल्टेकै अवस्थामा भन्यो,– "अब दीप बाहिर राखिदेऊ ।"

एकछिनपछि सोमदत्त बिस्तारै गुन्द्रीमा उठेर बस्यो । उसले भन्यो,– "अब आजको अनुष्ठानलाई पुरुषले पढ्नुपर्ने मन्त्र बाँकी छ । ब्राह्मणी ! पुत्रप्राप्तिका हेतु सम्पन्न हुने शारीरिक समागममा शरीरतत्त्व रहँदैन, तिमीले यो बुझेकी नै छयौ । शरीरतत्त्वको बोध भएर शारीरिक सुखको अनुभव हुन थाल्यो भने समागमको कर्तव्यहेतु लोप भएर जान्छ, धर्म विलीन हुन्छ र धर्म विलीयमानको त्यो स्थितिमा रहन्छ केवल पाशविक वृत्ति मात्र ।"

पुलोमा अत्यन्त थाकेको अनुभव गरिरहेकी थी । उसले मसिनो स्वरमा भनी,– "मलाई यसको ज्ञान छ पतिदेव !"

सोमदत्तले थाकेकै स्वरमा भन्यो,– "तिम्रो उपस्थेन्द्रिय वेद हो, र त्यसको मध्यभाग प्रोज्ज्वलित अग्नि। यौनसमागम त केवल धार्मिक अनुष्ठान हो, वाजपेय यज्ञ– वेदिरूपस्यी समिद्धो मध्यतः।"

पुलोमाले भनी,– "हो, भर्तादेव !"

सोमदत्त मन्त्र पाठ गर्न थाल्यो,– "अमोऽहमस्मि सा त्वं सा त्वमस्यमोऽहं सामाहमस्मि ऋक् त्वं द्यौरहं पृथ्वी" .... म प्राण हुँ; तिमी वाणी; तिमी वाणी हौ; म प्राण; म साम हुँ; तिमी ऋक्, म आकाश हुँ; तिमी पृथ्वी ....

पुलोमा यति थकित थी कि उसले मन्त्रपाठपट्टि ध्यान केन्द्रित गर्न सकिन। बरु मन्त्रपाठले उसलाई तन्द्राको अनुभव भएजस्तो लाग्यो। एकछिन ऊ उँघेजस्ती भई। उसलाई तन्द्रैमा मसिनो स्वर सुनेको जस्तो लाग्यो,– "देवी ! ल आऊ, सहभावमा सहरेतस् धारण गरौं।"

मन्त्रोच्चारणद्वारा विधिपूर्वक पत्नीको आलिङ्गन गरेर सोमदत्तले अर्को मन्त्रको जाप गर्‍यो,– "विजिहिथां द्यावा पृथ्वी ......।" पुलोमाको मुखमा मुख जोरेर उसले 'विष्णुर्योनि कल्पयतु' को मन्त्र पढ्न लाग्यो। अनि उसले पुलोमाको शरीरका उपर आफ्नो शरीर सुताउँदै भन्यो,– "किरणरूपी कमलहरूका माला धारण गरी अश्विनीकुमार ममा अभिन्न रूपबाट स्थित होऊन् र तिमीमा गर्भको आधान गरून्।"

शरीरसमागमको विधि सम्पन्न गर्दा पतिपत्नी दुवैले अत्यन्त क्लान्त भएको अनुभव गरे। पतिले भन्यो,– "पुलोमा ! आजको पुत्रेष्टि अनुष्ठान कार्य सम्पन्न भयो। तिम्रो शरीरले भोगबोध त गरेन ? वासनासक्त त भइनौ तिमी ?"

थाकेको शरीरलाई हातले टेकेर उठाउँदै पुलोमाले क्षीण स्वरमा भनी,– "भएन आर्यपुत्र !"

सोमदत्तले भन्यो,– "हुनुपर्ने नै त्यही हो, ब्राह्मणी ! अब तिमी आफ्नो कुटीमा जाऊ र स्नानादिले शुचि भएर शय्या ग्रहण गर।"

सधैंको जस्तो भोलिपल्ट बिहानै उठ्दा पुलोमाले विरक्ति र थकानको अतिरिक्त अरू केही परिवर्तन आफूमा पाइन। सोमदत्तलाई पनि यस्तै भयो। पितृऋणबाट मुक्त हुने प्रयत्न गर्दा उनीहरूलाई एउटा गहन उत्तरदायित्व आफ्नो काँधबाट झिकिएको जस्तो अनुभव भयो। त्यसको सन्तोष थियो उनीहरूलाई। अब परमार्थचिन्तनमा उनीहरू निर्बाध रूपले लगनशील हुन सक्ने भए। भोलिपल्टदेखि नै उनीहरूको दैनिक जीवन सदाको जस्तो सञ्चालित हुन लाग्यो।

एक महिनापछि पुलोमाले फेरि ऋतुकालमा प्रविष्ट भएको सूचना सोमदत्तलाई दिई। ऊ फेरि गोशालापछाडिको वनमा तीन दिनका लागि गुप्तवासमा गई।

नलिपेको कुटीको प्राङ्गणमा उभिएर चिन्तित हुँदै सोमदत्तले भन्यो,– "ब्राह्मणी !"

अत्यन्त खिन्न थियो ऊ। उसले भन्यो,– "पितृऋण चुकाउन अझ बाँकी रहेछ।"

पुलोमा पनि विरक्त भई।

यसरी नै पुलोमा आफ्नो पुत्रेष्टि अनुष्ठानको निष्फलताको सूचना सोमदत्तलाई दिन लागी। दुवै जना भविष्यका प्रति आशङ्कित भएर चिन्तित हुन लागे। सोमदत्तले सोच्यो,– 'हाम्रा अनुष्ठानविधिहरूमा त केही भूल भएन ?'

उसले सोध्यो,– "ऋतुकालमा तिमी काँशको पात्रमा त भोजन गर्दिनौ ?"

यस्तो प्रश्नको आक्षेप लक्ष्य गरेर पुलोमाले किञ्चित् तीव्र वाणीमा उत्तर दिई,– "यो आश्रममा काँश्यपात्र नै कहाँ छ र ? अनि कसरी त्यो त्रुटि मबाट सम्भव हुन सक्थ्यो ?"

अनि व्यग्र भएर सोमदत्तले सोध्यो,– "त्यसो भए के भयो त ? त्रुटि त निश्चय नै भएको छ कतै कसैबाट। गौमाता कपिलालाई त तिमीले छुने गरेको छैन अशुचिकालमा ?"

यस आक्षेपको पनि पुलोमाले दृढ भएर प्रतिवाद गरी,– "के मलाई यो साधारण धर्मज्ञान पनि छैन र देव ?"

जतिजति रजोदर्शनकाल निकट हुँदै जान्थ्यो उतिउति पुलोमा उद्विग्न हुँदै जान्थी। सोमदत्त पनि बारम्बार निराशाको कल्पनाले व्यग्र हुन्थ्यो। जतिजति शरीरसमागमको उद्देश्य विफल भएको देख्थे उतिउति उनीहरू यज्ञादि धार्मिक कार्यमा वृद्धि गर्थे। उनीहरूले दैनिक अनुष्ठानहरूको समय पनि बढाउँदै लगे। पूजाआजा, जापताप र ध्यान-आराधनाको अवधि पनि शनैःशनैः लम्बिँदै गयो। ऋतुदर्शनको चौथो दिन त अनुष्ठानका अनेकानेक विधिको पालन गर्दागर्दै उनीहरूलाई एकक्षणका निम्ति पनि अवकाश मिल्न नसक्ने भयो। तर, तैपनि प्रतिमास सबै उपाय विफल भएको प्रमाण पुलोमा दिइरहन्थी।

दुःखी भएर सोमदत्त मनमनै भन्थ्यो,– 'पुलोमालाई कुनै दैवीश्राप ?'

पुलोमा पनि शरीर र मनले थकित भएर सोच्न लाग्थी,– 'ब्राह्मणलाई पूर्वजन्मको कुनै दोषले पुत्रप्राप्ति लेखेको छैन क्यार !'

उनीहरूको दिन एकनाससँग बितिरहेको थियो– पूजापाठ, यमनियम, ध्यान-निदिध्यासन, प्राणायाम आदि यौगिक क्रिया तथा विभिन्न यज्ञादि वैदिक अनुष्ठानहरूमा। दुवै निस्पृह प्राणी थिए। पुत्रकामनाले स्थापित हुन गएको सम्बन्ध फलदायी नभएकोले उनीहरू मनमनै चिन्तित हुन थाले। उनीहरूको आपसी सम्बन्धमा एक प्रकारको चिढचिढापन र मनोमालिन्यता देखापर्न लागेको थियो। हुन त उनीहरूलाई पहिले पनि एक-अर्काको विशेष प्रयोजन नभएजस्तो थियो। वैवाहिक उद्देश्य विफल हुँदै गएको अनुभव गरेर उनीहरूको आश्रम-जीवनमा कटुता उत्पन्न हुन थाल्यो। पुलोमा पहिलेकी जस्ती निमुखा भएर बस्तिनथी। अब ऊ प्रत्युत्तर नदिएर पतिको आज्ञालाई अन्धविश्वासमा शिरोधार्य गर्दिनथी। सोमदत्तले पनि आफ्नो अनन्त ज्ञानको बोधमा पत्नीका साना त्रुटिहरूका प्रति क्षमाभाव राख्न छाड्यो। धर्मग्रन्थ तथा आध्यात्मिक विषयहरूलाई लिएर उनीहरूको वार्तालाप कहिले-कहिले शास्त्रार्थमा परिणत हुन्थ्यो। दुवै आफ्नो पाण्डित्यको ढिपी लिन्थे।

एक दिन 'पूर्णात् पूर्णमुदच्यते' लाई लिएर उनीहरूमा घोर शास्त्रार्थ भयो। वादविवादलाई पतिको अधिकारले टुङ्ग्याउँदै सोमदत्तले भन्यो,– "पुलोमा ब्राह्मणी ! भो अब तिमी सुत्न जाऊ, रात धेरै गइसक्यो।"

पुलोमा जुरुक्क उठी। उसलाई सम्बोधन गर्दै सोमदत्तले फेरि भन्यो,– "तिमीलाई थाहै छ, कुनै-कुनै शास्त्रमा नारीलाई धर्मग्रन्थको अध्ययन वर्जित गरेको छ। पहिलेका ऋषिमुनिहरूले बुझेरै विधिविधान रचेका रहेछन्।"

कोठाबाहिर निस्कन लागेकी पुलोमा थामिई। उसलाई एक पलका लागि त पतिको कथनको भरपूर उत्तर दिऊँजस्तो लाग्यो। उसले भन्नै आँटेकी थी 'वेदका धेरै ऋचाहरूका रचयिता स्त्री नै थिए।' तर क्रोधलाई बलपूर्वक नियन्त्रणमा राखेर केही नबोली ऊ बाहिर निस्की। तर, तैपनि नित्यको नियमानुसार पतिको गोडा ढोगेर आफ्नो आसनी लिँदै जाने कुरा भने उसले बिर्सिन।

अर्को दिन अकारण फेरि उनीहरूमा वादविवाद चर्क्यो,– 'आत्महन्ता' शब्दको आध्यात्मिक अर्थलाई लिएर। सोमदत्तले केही उच्च स्वरमा भन्यो,– "ईशावास्योपनिषद्मा जुन तमस्ले आवृत असूर्य तथा अन्धलोकमा 'आत्महन्ता' पुग्छ भनी भनेको छ के त्यो पनि आफ्नो शरीरको हत्या गर्नेलाई नै भनेको हो त ?"

पुलोमाले पनि आफ्नो स्थिति नबदलिएर केही उच्च स्वरमै उत्तर दिई,– "हो, 'आत्महन्ता' पदलाई शरीरहन्ताको अर्थमा जान्नुपर्छ। मर्त्यधर्मा शरीरलाई 'हत' गर्न अर्थात् मार्न सकिन्छ। आत्मा अविनाशी भएकोले त्यो मर्त्य छैन।"

सोमदत्तले आफ्नो तर्क प्रस्तुत गर्दै भन्यो,– "ब्राह्मणी ! यहाँ 'हन्त' भन्ने शब्द मार्नेको समार्थक प्रतिशब्द होइन, यो तुल्यार्थक हो; 'यथा' अर्थात् 'जस्तै' को अर्थमा प्रयोग भएको हो। आत्मालाई नबुझेर जसले त्यसको उचित सेवन गर्दैन त्यसले आत्मालाई मारेतुल्य गर्छ।"

पुलोमालाई सोमदत्तको तर्क काट्ने प्रतितर्क हत्तपत्त आएन। तर एकछिन पनि निरुत्तर भएर बसिरहनुपर्दा उसलाई अकारण नै क्रोध उम्लियो। सोमदत्तले तत्काल आफ्नो विजयको क्षणमा सन्ध्याकालीन धार्मिक वार्तालाई समाप्त गर्दै भन्यो,– "ल जाऊ, सुत्न।"

पुलोमा मानौं त्यही क्षणको प्रतीक्षामा थी। पतिलाई छिटै ढोगेर ऊ आफ्नो कोठामा आई, र ईशावास्योपनिषत् पल्टाएर पढ्न थाली। आज उसलाई कुण्ठित भएको बोध भयो। पाठमा पनि उसले ध्यान लगाउन सकिन।

दिन त येनकेन बिति नै रहेका थिए एकएक गरेर। आश्रमका दैनिक कार्यहरू साधारण किसिमबाट सम्पादित हुँदै थिए। बाहिरबाट उनीहरूको जीवनचक्रमा कुनै परिवर्तन आएको थिएन। तर मानसिक चिन्तामा एक्ला-एक्लै पिल्सिएर सोमदत्त र पुलोमाको नैतिक जीवननिर्वाह भइरहेको थियो।

कहिलेकाहीं अत्यन्त विरक्तिका साथ सोमदत्त भन्थ्यो,– "यदि पितामाताको आज्ञा र धर्मशास्त्रको आदेशको बाध्यता नभएको भए म उहिल्यै संन्यासी भइसक्ने थिएँ।"

पुलोमा पनि भन्थी,– "म पनि धर्मोपदेशको वाध्यताले यो वैवाहिक जीवनमा अडिरहेकी छु नत्र उहिल्यै तापसी भएर वनभित्र पसिसक्थें। प्रतिमासको पुत्रेष्टिको कठोर अनुष्ठान असह्य हुँदै आएको छ; कर्तव्यभावनाले मात्र म आफ्नो शरीरलाई यो घोर यातना प्रतिमास अर्पिन्छु।"

सोमदत्त केही बोल्दैनथ्यो।

एक दिन यस्तै शुष्क कुरा भएपछि राति सधैंको जस्तो भोजनोपरान्त पाठ्यपुस्तक र आफ्नो आसनी लिएर पुलोमा सोमदत्तको कोठामा पुग्दा उसले भन्यो,– "पुलोमा ब्राह्मणी ! तिमी र ममा विचार-भेद भएकोले ग्रन्थ पाठ गर्दा हामीहरूले लगाएको अर्थमा पनि भेद हुन लागेको छ। तसर्थ सहपाठको तात्पर्य रहेन अब। हामी आपनो-आफ्नो कक्षमा नै स्वाध्याय गरौं।"

पुलोमा यस्न पनि पाएकी थिइन, हातको पुस्तक र आसनी बोकेको बोकै ऊ फनक्क फर्केर गई। उसले मनमनै भनी,– 'म पनि यही चाहन्थें।' आफ्नो कोठामा आएर एउटा ग्रन्थ उघारेर पढ्न बसी। पुस्तकका उपर उसका आँखा घोरिरहन्थे, तर ध्यान एकत्रित गर्न भने अचेल ऊ सक्दिनथी।

विस्तार-विस्तार, एउटै आश्रमका वासी भएर पनि र धेरै दैनिक कार्य साथसाथै गर्ने गरे तापनि उनीहरू आपसमा टाढा हुँदै गए। कहिले त उनीहरूमा धेरै दिनसम्म एक शब्दको पनि आदान-प्रदान हुन्नथ्यो।

यस प्रकार धेरै दिन बित्यो। अन्तमा एक दिन, मानौं नियमपूर्वक सदाको जस्तो पुलोमा रजस्वला भएर पर सरी। आउने चौथो दिनको अनुष्ठानको पुनरावृत्तिको कल्पनाले उसको हृदय काँप्यो। उसलाई लाग्यो, यसपालि त्यो दिनको अनुष्ठानका लागि ऊ आफूलाई कदापि प्रस्तुत पार्न सक्दिन। ऊ एकदम असमर्थ भएकी थी– त्यो दिन पत्नीको रूपमा आविर्भाव हुन। पत्नीको त्यो आफ्नो रूपको कल्पनाले उसको आत्मा र शरीर चाउरिएको जस्तो भयो। घृणाले शरीरका यावत् फोहोरा खुम्चिए। 'त्योभन्दा त हे भगवान् ! बरु मृत्यु नै वाञ्छनीय छ।' घोर वितृष्णाले उसलाई वाक्वाकी लाग्यो। उसको शरीर कठ्याङ्ग्रियो।

सोमदत्तलाई पनि यो तात्पर्यहीन परिश्रमका लागि आफू बिलकुलै तयार नभएजस्तो लाग्यो। शरीरले हठात् सारा शक्ति शून्य भएको अनुभव गर्‍यो। उसका नसा खुम्चिए, शरीर चाउरी पर्‍यो। पुलोमा पर सरेर बसेको तीन दिनसम्म ऊ घोरिएर बसिरह्यो। 'के गर्ने ? त्रुटि के भयो ?' कहीं पनि कुनै त्रुटि भएको छैन भन्ने उसलाई निश्चय थियो– 'धार्मिक अनुष्ठानका कुनै नियममा सानो लेशमात्र पनि त्रुटि भएको छैन। यदि पूर्वजन्मको पापको फलस्वरूप यसले यो दण्ड भोग्नुपरेको हो भने अब सोमदत्त गर्न नै के सक्थ्यो र ? त्यसो भए, हे भगवान् ! चाँडै मृत्युदान दिएर पापमोचन गर।'

उता गोशालाको पछाडि एउटा पर्णकुटीमा पर सरेर बसेकी पुलोमा नाना प्रकारका दुश्चिन्ताले घोरिएर बसिरहन्थी। एकान्तमा आश्रमका सानातिना दैनिक कार्य

गर्दागर्दै व्यतीत भएजस्तो यो तीन दिनको गुप्तवास थिएन। कार्यहीनताले घोरिँदै बसिरहनुपर्दा उसका मनमा अनेक प्रकारका कुरा खेल्न लाग्थे । आफ्नो बालिकाकालको स्मृति हुन्थ्यो, मातापिताद्वारा कठोर जीवनमा प्रविष्ट गराइएको कुरा सम्भन्थी । र अनि ऊ गाउँका कुरा सोच्न लाग्दथी जहाँका भिल्लकेटाकेटीहरूसँग जोगिएर माताको सजग दृष्टिमुनि हुर्किँदै गएकी थी । एउटा भिल्लबालक ऊसँग घनिष्ट हुँदै आएको आमाले थाहा पाएर किञ्चित् अधिकारको स्वरमा भनेकी थी,– 'पुलोमा ! अबदेखि घरबाट बाहिर कहिल्यै नजाने गरेस् ।'

यस्ता नाना प्रकारका कुरा खेलिरहन्थे पुलोमाको मस्तिष्कमा। तर बीचबीचमा उसलाई चौथो दिनको सम्झनाले घबराहट पनि हुने गर्थ्यो। 'भगवन् ! एकपटक माता बनाऊ, एउटा सन्तान देऊ । तर मलाई चौथो दिनको उत्पीडनबाट रक्षा गर ! रक्षा गर !'

सोमदत्त चिन्तित अवस्थामा एकनाससँग घोरिएर बस्दाबस्दा त्यस्तो चरम अवस्थामा पुगेको थियो, जब पुत्रप्राप्तिको असफलताले उसमा यस प्रकारको मानसिक एकाग्रताको रूप धारण गरिसकेको थियो, जुन एकाग्रतामा भावनाको विकार थिएन, यद्यपि बौद्धिक तन्मयता भने अवश्य नै प्रशस्त थियो। मस्तिष्कको एकाग्रताले स्वयं आफ्नो अस्तित्व बनाउँछ, त्यस्तो व्यक्तिको हृदयान्तरमा, जो यसको शिकार हुन पुग्दछ। सोमदत्तलाई अरू कुनै कुराको ध्यान रहेन, किनभने पुत्रप्राप्तिको मानसिक एकाग्रताले उसको समग्र व्यक्तित्वलाई आक्रान्त पारिसकेको थियो– समस्त विचार गर्ने क्षमतालाई लट्ठ पार्ने बिन्दुमा केन्द्रित गरेर। जतिजति ऊ असफलता प्राप्त गर्थ्यो, जतिजति पुत्रप्राप्तिको लक्ष्य टाढाटाढा हुँदै गएको उसलाई अनुभव हुन्थ्यो, उतिउति एकाग्रताको मानसिक सियो तिखारिँदै जान्थ्यो । ऊ सोच्थ्यो,– 'के भयो यो ?'

त्यही असफलताजनित तीव्रतम एकाग्रताको तोडमा उसले एक दिन सोच्यो,– 'यो स्थल मध्यकिरातदेश हो। सम्भव छ, कुनै अदृश्य तत्त्व हामीलाई बाधा पुऱ्याइरहेको छ। आर्यहरूका समस्त देवीदेवता र उनीहरूका शास्त्रमा उल्लिखित कर्मकाण्ड, वैदिक ग्रन्थमा निर्देशित तपयज्ञादि हामीहरूद्वारा विधिवत् सम्पन्न भएर पनि किन कार्यसिद्धि भएन ?' यद्यपि सोमदत्तलाई निश्चय थियो कि निष्प्रयोजनीय नै भए तापनि अब केवल धैर्य नछाडेर पुत्रेष्टिअनुष्ठान पुनः पुनः गरिरहनुबाहेक अरू गर्नुपर्ने कुरा कुनै शेष छैन। तर त्यो अनुष्ठानको सम्झनासम्मले पनि उसको मन वितृष्णाले भरिन्थ्यो। यो वितृष्णाबाट मुक्ति पाइन्छ कि भन्ने क्षीण आशा गर्दै उसले किरातहरूको घैतालाई पनि सन्तुष्ट पारेर एकपटक हेर्न उचित सम्झ्यो। जब आफूलाई पुत्रेष्टिअनुष्ठान कार्यको मानसिक यातनाबाट समेत थकित, उत्साहहीन र असमर्थ भएको पायो अनि मात्र किरातदेवको तुष्टिको इच्छा उसमा जाग्रत् भयो ।

र चौथो दिन ब्राह्ममुहूर्तभन्दा पहिले नै उठेर ऊ कोशीतटमा पुग्यो। चिन्ताले ऊ रातभरि सुत्न सकेको थिएन। कोशीमा स्नानादि कार्य सम्पन्न गरेपछि पद्मासनमा बसेर ध्यान गर्न थाल्यो। त्यस बेला हठात् उसलाई सुम्निमाको बिजुवाबाको सम्झना भयो।

उसलाई थाहा थियो, बिजुवा किरातीहरूको धर्मगुरु हो– धामी, जसले उनीहरूका सबै देवीदेवतालाई साधेको छ। चारैतिरबाट निराश भएर डुब्न लागेको मानिसले तृणको सहारा प्राप्त गरेजस्तै उसले पनि समाउने कुरा पाएँ भन्ने सम्झी बिजुवाको घरतिर आफ्नो पग निर्देशित गऱ्यो।

किरातीको गाउँमा बिजुवाको घर कहाँ छ, उसलाई ज्ञान थिएन। ऊ केवल यतिले मात्र अवगत थियो कि उत्तरतिरको त्यो शृङ्गमाथि, हरियो वनको मध्यमा, जहाँबाट यदाकदा धूवाँ निस्केको देखिन्थ्यो, त्यहींनजिक किरातीगाउँ छ।

त्यस दिन अत्यन्त आलस्यका साथ पुलोमा उठी। उसलाई शुद्ध हुनु थियो। लेश मात्रसम्म जाँगर नभए तापनि उठ्न बाध्य थी ऊ। उठ्नासाथ उसको मस्तिष्कमा अचानक आफ्नो गाउँको त्यो भिल्ल साथीको सम्झना भयो जो पुलोमाको घरपछाडि आएर धीमा स्वरले बोलाउँथ्यो,– 'पुलोमा ! ए पुलोमा !!' पुलोमाकी माताले उसलाई हकारेर पठाइदिएकी थी,– 'भिल्ल भएर ब्राह्मणबालिकासँग खेल्ने त्यत्रो दुस्साहस तेरो ? भाग् यहाँबाट !'

पुलोमा स्नानार्थ कौशिकीतटमा आई।

सोमदत्तको कृश शरीर अत्यन्त क्लान्त भएर बालकसूर्यको प्रथम किरणका साथै किरातगाउँको निकट पुग्यो। नितान्त थकित भएकोले आफूले टेक्दै हिँडेको लट्ठी एकतर्फ अड्याई ऊ एउटा ढुङ्गामाथि बस्यो। बाटोको बायाँ बसेको थियो किरातगाउँ, र गाउँ शान्त थियो। बाटोको दायाँ थियो एउटा सानो जलप्रपात जसको धारा एउटा चिल्लो प्रस्तरखण्डका उपर अनवरत झरिरहेको थियो। त्यो प्रपात सघन वृक्षको शीतल छायामुनि स्थित थियो र जलप्रपातले त्यो स्थानलाई चिसो पारिराखेको थियो। एक त सोमदत्तको अत्यन्त थाकेको कृश शरीर, त्यसमा झन् त्यहाँसम्म धाउनको उद्देश्य; उसलाई हठात् लज्जाको बोध भयो। ऊ हलचल नगरी धेरैबेरसम्म ढुङ्गामाथि बसिरह्यो किङ्कर्तव्यविमूढ भएर। त्यहाँ बस्दाबस्दै उसले देख्यो, सूर्य तरुशिखरहरू छिचोल्दै आकाशमाथि आइसकेको छ। त्यही समय ऊ देख्दछ एउटी नग्न तरुणीलाई जो गाउँको बाटो झर्दैछे तल धारामा पानी भर्न आइरहेकी। सोमदत्त हतपताएर उठ्यो। टाढाबाट उसलाई लाग्यो त्यो तरुणी सुम्निमा हो। तर उसको काखको सानो बालकलाई देखेर उसले सम्झ्यो, होइन रहेछ; शायद सबै किरातस्त्रीहरूको शरीर एकनासकै हुन्छ।

सुम्निमालाई सम्झिँदा सोमदत्तलाई झन् ठूलो लज्जाको बोध भयो। युवतीले धारामा गाग्री थापी र त्यहींको एक शिलाखण्डमा बसेर शिशुलाई स्तनपान गराउन तल्लीन भई। एकछिनपछि सोमदत्तलाई अनुभव भयो, ऊ एउटी अपरिचिता नग्ना युवतीले शिशुलाई स्तन दिइरहेको हेरिरहेको छ। हतपताएर उठ्दै उसले आफ्नो दृष्टि यथासाध्य जलप्रपातबाट विपरीत दिशातिर पाऱ्यो, अनि युवतीलाई सोध्यो,– "बिजुवाको घर कहाँ हो, किरातवाले ?"

युवतीले आफ्नो झुकेको शिर उठाएर सोमदत्तलाई पुलुक्क हेरी। उसको बायाँ हातले स्तनलाई किञ्चित् उचालेर टेवा दिइरहेको थियो। उसले सोधी,– "तिमी को हौ, ब्राह्मण ?"

सोमदत्तले युवतीलाई नहेरेरै उत्तर दियो,– "मलाई बिजुवासँग प्रयोजन छ।"

युवतीले भनी,– "उः त्यो माथि देब्रेतिरको घर हो। त्यहाँ गएर बोलाऊ।"

यति भनेर शिर निहुराउँदै ऊ फेरि शिशुले दूध खाइरहेको हेर्न लागी।

सोमदत्त बिस्तारै उठ्यो। आफ्नो लट्ठी टिपेर ऊ गाउँतिर प्रस्थान गर्‍यो।

युवतीले बताएको घरको द्वारमा पुगेपछि सोमदत्तले कराएर बोलायो,– "बिजुवा !"

तल धाराबाट युवतीले पनि पुकारी,– "बिजुवाबा ! को एउटा ब्राह्मण आएको छ।"

सँघारमा बाँधेको भोटेकुकुर चन्चल भएर भुक्न थाल्यो। बिजुवा निस्क्यो, यताउति हेरेर सोध्यो,– "कसले खोज्यो मलाई ?"

सोमदत्तले भन्यो,–"मैले बिजुवा !"

"तिमी को हौ ? किन आयौ ?"

सोमदत्तले आफ्नो परिचय र प्रयोजन बताएपछि बिजुवाले भन्यो,– "सोमदत्त ब्राह्मण ! तिमीलाई छोरी सुम्निमाले धेरै दिनसम्म सम्झिरही। अहिले त उसको बिहे भइसक्यो। ६ महिनाकी छोरी पनि छ।"

अनि उसले कराएर बोलायो,– "सुम्निमा ! हेर्, तेरा सोमदत्त आएका छन्।"

अनि फेरि सोमदत्ततिर फर्केर उसले भन्यो,– "के गति भएको तिम्रो ! कति दुब्लाएका, कस्ता बूढा देखिएका तिमी !"

शिर निहुराएर सोमदत्त उभिरह्यो, उसले केही उत्तर दिएन। बिजुवाले आफ्नो व्यावसायिक अधिकारको स्वरमा सोध्यो, एउटा वैद्यले रोगीलाई सोधेजस्तो,– "तिमी छोरो किन चाहन्छौ ?"

सोमदत्तले भन्यो,– "धर्मनिर्वाहका लागि सन्तान भएन भने पितृहरूको उद्धार हुँदैन। सन्तानविना मनुष्यलोकमा आर्जन गरेको धर्म सबै निष्फल हुन्छ, यस्तो हाम्रो शास्त्रको आदेश छ।"

बिजुवाले फेरि सोध्यो– "त्योबाहेक नि ?"

"त्यसका अतिरिक्त हाम्रा निम्ति पुत्रप्राप्तिको अरू कुनै हेतु छैन।"

"तिमीलाई शरीरले भोग गर्दैछु भन्ने के कहिले पनि लागेन स्त्रीसमागममा ?"

"किञ्चित् पनि लागेन।"

"त्यसो भए के धर्मकै निम्ति मात्र छोरो होस् भन्ने चाहन्छौ तिमी ? शरीरसुखका लागि हुँदै होइन त ?"

सोमदत्तले दृढतापूर्वक उत्तर दियो,– "होइन। भोग र कर्तव्यमा हामीले भोगकामनालाई तपस्याद्वारा मृत बनाएका छौं। केवल कर्तव्यको उद्देश्य मात्र छ हाम्रो जीवनमा।"

बिजुवाले बढो गम्भीरताका साथ भन्यो,– "ब्राह्मण ! तिम्रो मनुवा रिसाएको छ, किनभने तिमीले त्यसलाई तपस्याद्वारा मार्न खोज्यौ। मनुवादहमा तिमीले नुहाउनुपर्छ।"

सोमदत्त नबोलेर उभिरह्यो। एकछिन थामिएर बिजुवाले फेरि सम्झाएजस्तो गरी भन्यो,– "हाम्रो शरीर यन्त्र होइन, माध्यम होइन, साधन पनि होइन। त्यो आफैं साध्य हो, लक्ष्य हो, त्यसको हेलां गर्न सक्दैनौ तिमी। मानिसको रस, भोगभावना र सुखको इच्छाबाट शरीर शून्य भएपछि त्यो ज्यान नभएजस्तै हुन्छ; त्यसले सन्तान जन्माउन सक्दैन। त्यो ज्यान नभएको अररो हतियार मात्र होइन। सन्तान सम्भोगको परिणाम र प्रमाण हो, बुझ्यौ ब्राह्मण ?"

तबसम्म सुम्निमा पनि छोरी बोकेर आइपुगी। एकछिन छक्क परेर सोमदत्त र सुम्निमाले हेराहेर गरे। सोमदत्तले अहिले पो थाहा पायो कि तल धारामा पानी भर्न आएकी युवती नै रहिछ सुम्निमा। यत्तिका वर्षमा पनि उसको शरीरमा कुनै परिवर्तन आएको थिएन; पहिलेकै जस्तो पूर्ण तारुण्यले टल्किएको काञ्चनप्रभायुक्त शरीर। कोशीतटमा अन्तिम दिन देखेको रूप आज यतिका वर्षको अन्तरपछि प्रकट हुँदा पनि त्यसमा किञ्चित् पनि वयःवृद्धिको लक्षण नदेखिएको। उसको स्मृतिमा सुम्निमासँग बितेका दिन् झलझली नाच्न थाले। तर ऊ निःशब्द भएर उभिरह्यो। सुम्निमाले शान्ति भङ्ग गर्दै भनी,– "सोमदत्त !"

उसले त्यति मात्र भन्न सकी। एकछिन कसैले केही बोलेन। दुवैले केहीबेर भन्ने कुरा नपाएर हेराहेर मात्र गरे। अनि स्नेहको स्वरमा सुम्निमाले बिस्तारै भनी,– "सोमदत्त ! कति दुब्लाएका तिमी; जीउ पनि कस्तो खङ्ग्रङ्ग ! कठै ! मैले त चिन्नै सकिनँ।"

उसले मायाको हातले सोमदत्तको काँध स्पर्श गरी। सोमदत्तको शरीरभरि खुम्चिएको छालाउपर एकाएक सूक्ष्म कम्पनको लहर चलमलायो, गाईवस्तुको आङ जुरुङ्ग भएजस्तै। स्तनपान गर्दागर्दै सुम्निमाको छातीमा उसकी सानी छोरी निदाइसकेकी थी।

बिजुवाले भन्यो,– "सुम्निमा ! सोमदत्त ब्राह्मणको मनुवा रिसाएको छ, उसले आफ्नो मनुवाको हेलां गर्‍यो भनेर। हो सोमदत्त ! मनुवालाई चोट पर्‍यो भने ऊ ठुस्स पर्छ। बालकजस्तै त बेहोरा छ नि उसको। ल सुम्निमा ! अब यिनको मनुवालाई रिझाउनुपर्‍यो।"

निदाएकी बालिकालाई सुताउन सुम्निमा कोठामा गई। बिजुवाले फेरि भन्यो टाउको हल्लाएर, आफैंलाई सम्बोधन गरेजस्तो गरी,– "शरीर त हो नि मनुवा भनेको। शरीरलाई हेलां गर्न हुन्न सोमदत्त !"

सोमदत्तलाई प्रतिवाद गर्ने तीव्र इच्छा भयो। उसको हृदयमा एउटा स्वर पनि निर्मित भयो, शरीर त खोस्टो मात्र हो।

तर बिहानभरिको ठाडो उकालो चढ्दा थाकेको शरीर सुम्निमाको दर्शनले अस्तव्यस्त हुन गएको मस्तिष्कले उसमा तर्क गर्ने आग्रह र शक्ति रहेको थिएन।

छोरीलाई सताएर सुम्निमा वाहिर आई। उसको मुखबाट बरावर निस्किरहन्थ्यो,– "कठैबरा! के गति भएको सोमदत्त! तिम्रो।"

त्यसपछि अचानक थामिंदै नथामिएर उसले प्रश्नमाथि प्रश्न गर्न लागी,– "तिम्रो अझै बिहे भएको छैन, सोमदत्त? हेर्दिनन् ब्राह्मणीले तिमीलाई? नत्र किन तिमी यस्तो हाड र छाला?"

फेरि सोमदत्तको पाखुरा समाएर व्यथित स्वरमा ऊ भन्न लागी,– "कठै! तिमीलाई आहार पनि त पुगेको छैन। तिमीलाई माया गरेर हेरचाह गरिदिनेसम्म पनि कोही भएन क्यार .....!"

विजुवाले भन्यो,– "छोरी! यिनलाई अरू केही भएको छैन, यिनको शरीरले हठ गरेको छ, जिद्दी समाएको छ। यिनको वानीबेहोरा देखेर शरीरले पनि अड्डी लिएको छ। केही होइन सुम्निमा! यिनको मनुवा यिनीसँग रिसाएको छ, ठुस्किएको छ। त्यसलाई रिझाउनुपर्‍यो, अरू कुनै बाटो छैन।"

सुम्निमाले भनी,– "बाबा! जे-जे गर्नुपर्ने हो चाँडै गरिदिनोस्। कठै! यिनको यो दशा देखेर रुन मात्र सकिनँ म।"

विजुवाले छोरीलाई सान्त्वना दिँदै भन्यो,– "यो काम तिमीले नै गर्नुपर्छ, छोरी! आऊ के-के गर्नुपर्ने हो, म सब कुरा बताइदिन्छु तिमीलाई। र ब्राह्मण! तिमी एकछिन यहीं बसिराखे, है?"

सुम्निमाले भित्रबाट गुन्द्री ल्याएर पिंढीमा ओछ्याइदिई, सोमदत्तको हातको लौरो आफूले लिंदै भनी,– "एकछिन यहीं बिसाऊ है सोमदत्त?"

सोमदत्तको लौरो पिंढीमा अडयाएर बाबुका साथ ऊ कोठाभित्र पसी। कोठामा विजुवाले छोरीलाई सानो स्वरले धेरैबेरसम्म कुन्नि के-के सम्झायो; सोमदत्तले कोठाभित्र बोलेको नबुझिने बोली मात्र सुन्यो, कुरा केही बुझेन। एकछिनपछि एउटा ठूलो झोला बोकेर सुम्निमा वाहिर निस्की। उसले भनी,– "ल, हिंड जाऔं।"

सोमदत्तले आश्चर्य मानेर सोध्यो,– "कहाँ?"

पिंढीमा उभिएको विजुवाले भन्यो,– "जाऊ ब्राह्मण! सुम्निमासँग निर्धक्क भएर। तिम्रो ब्राह्मणधर्म नष्ट हुँदैन।"

सोमदत्त एकछिन अनिश्चित उभिरह्यो; सुम्निमाले आग्रह गरेर फेरि भनी,– "आऊ न, सोमदत्त! ढिलो नगर।"

कुन अनौठो क्रियाका लागि सुम्निमा उसलाई बारम्बार बोलाइरहेकी छ? उसले केही बुझ्न सकेन। उसको मस्तिष्कमा एउटा ठूलो हलचल मात्र भइरह्यो र त्यहाँ सारा दृश्य अवास्तविक लाग्न थाल्यो उसलाई।

विजुवा कोठाभित्र गयो। वाहिर अब सोमदत्त र सुम्निमा मात्र रहे। उभिरहेको सोमदत्तको हात समाएर सुम्निमा हिंड्न लागी। सोमदत्तको मन र शरीरले केही विरोध गरेन र बिस्तार-बिस्तार ऊ पाइला चाल्दै थियो सुम्निमाको हातले आफ्नो हात समाउन दिएर।

सुम्निमाले भनी,– "तिमी किन यसरी सुकेको, सोम ?"

सोमदत्त केही बोलेन। सुम्निमाले फेरि भनी,– "मैले तिमीलाई धेरै दिनसम्म सम्झिरहें।"

तैपनि सोमदत्तले केही उत्तर दिएन, ऊ हिँडिरह्यो। तर मनमा उसले पनि सम्झ्यो कि धेरै कालसम्म सुम्निमालाई बिर्सिने प्रयत्नमा तपस्या गर्दै ऊ देश-देशान्तर चाहार्दै हिँडेको थियो।

सुम्निमाको भन्ने कुरा कहिल्यै नटुङ्गिएलाजस्तो थियो। पहिलेकै चाञ्चल्य उसमा अझै विद्यमान थियो। उसले फेरि सोधी,– "यो के भएको तिमीलाई ? तिम्रो शरीरभरि खाटैखाटा छन् नि ! कहाँ घाइते भयौ यसरी ?"

सोमदत्तले भनेन कि उसैलाई बिर्सिन उसले अग्निमा आफ्नो शरीरको मांसखण्ड काटी-काटी होम गरेको थियो कुनै समय। तर ऊ केही नबोली सुम्निमाबाट डोरिएर, एकनासले हिँडिरहेको थियो, मानों कुनै मादकवस्तुको प्रभावमा ऊ तन्द्रिल अवस्थामा छ। सुम्निमाको एकनासको स्वर मानों एउटा लघु जलप्रपात कुनै एकान्त वनको शीतल निकुञ्जमा साना-साना कङ्कड समूहका उपर लगातार बर्सिरहेजस्तो उसको कर्ण–गह्वरमा प्रविष्ट गरिरहेको थियो; र यसबाट उसलाई लाग्यो कि ऊ तन्द्रिल अवस्थामा पुग्दै जाँदैछ। सूर्यको ऊर्ध्वारोही शुभ्र प्रकाश सुम्निमाको प्रपुष्ट चम्पक शरीरलाई आभासम्पन्न बनाइरहेको थियो र उसको मुखडामा कोमल रक्तिमता चम्काउँदै थियो। काँधसम्म लहराउँदै झरेको केशको केही भाग सुम्निमाको सुडौल पिठ्यूँमा र केही कुममा दुवैतिरबाट अगाडि छातीमा झरेर स्तनका उपर हलुका-हलुका उर्फिंदै धूप-छाया पार्दै थियो।

हिँडिरहेकी सुम्निमाले सोमदत्तको ध्यानमग्नता भङ्ग गर्दै एकाएक थामिएर सोधी,– "यतिका दिन तिमी कहाँ थियौ सोमदत्त ?"

सोमदत्तले यसको पनि उत्तर दिएन। एकछिनपछि बरु आफ्नो तर्फबाट प्रश्न गऱ्यो गम्भीर भएर,– "सुम्निमा ! कसरी सहायता गर्न सक्छयौ तिमी मेरो ?"

सुम्निमाले भनी,– "तिमीले बोल्यौ त ? मलाई त लाग्यो थियो तिमी मसँग रिसाएका छौ, त्यसैले नबोलेका तिमीले ! मनमा लाग्यो, बाहुनले कतिसम्म रिस मनमा राख्न सक्दो रहेछ।"

उसले हाँसेर सोमदत्ततिर फर्केर हेरी, अनि फेरि भनी,– "हो त हेर न, बाले कस्तो कामको जिम्मा लगाइदिनुभयो मलाई।"

हतबुद्धि भएर सोमदत्तले फेरि सोध्यो,– "तिमीले पनि धामीको काम जानेकी छयौ ?"

सुम्निमाले मुन्टो हल्लाएर भनी,– "अहँ, जान्या छैनँ। म स्वास्नीमानिस, सोझी मलाई केही आउँदैन सोमदत्त ! आफू होइदिनुबाहेक।"

"त्यसो भए....... " अप्ठयारो मानेर सोमदत्तले प्रश्नवाचक अनुहारले सुम्निमालाई हेऱ्यो।

सुम्निमाले भनी,– "आत्तिनु पर्दैन सोमदत्त ! बाले भन्नुभा' छ, मनुवादहमा तिमीलाई नुहाइदिनू रे र खोलाको देवीअगाडि तिमीलाई सिँगारिदिनू रे, नचिनिने गरी तिम्रो रूपै साटिदिनू रे। मैले यो झोलामा त्यसका सबै थोक ल्याएकी छु।"

सोमदत्तले केही बुझ्न सकेन। आफ्नो मस्तिष्कले काम गर्न छाडेको उसले अनुभव गऱ्यो। उसले आफूलाई अहिलेको स्थितिमा पाएर विधिको विडम्बनाको ध्यान भयो, जसलाई केही वर्षअघि हृदयबाट निर्मूल गर्न भनी उसले घोरतम तपस्यामा प्रविष्ट भएर आफ्नो शरीर सुकाएको थियो, आज उही नग्न किरातयुवतीको पछिपछि लागेर ऊ अज्ञात स्थानतिर गइरहेको छ। आफ्नो वर्तमान स्थिति देखेर उसलाई लाग्यो, अहिलेका समस्त वस्तु वास्तविक होइनन्, स्वप्नमा देखेका दृश्य मात्र हुन् ती। त्यस कारण स्वप्नमै रमाएजस्तो भयो ऊ। आफ्नो आश्रम र त्यहाँ उसलाई पर्खेर बसेकी आफ्नी विवाहिता ब्राह्मणी पुलोमा स्वप्नमा देखेको स्वप्नजस्तो भएर धूमिल हुँदै गयो उसको मस्तिष्कबाट।

एकछिनमा उनीहरू गाउँ छाडेर वनभित्र पसे। सल्लो, चम्पा, उत्तिस, चिलाउने, कटुस र लप्सीका वृक्षहरूले झ्याम्म थियो वन। सुम्निमाले भनी,– "अब हामीहरू देवीथाननिर आइपुग्यौं। उः रूखहरूले छोपेर झ्याम्म परेको ठाउँमा छ मनुवादह।"

उनीहरू पुगेको त्यो स्थल अत्यन्त रमणीय थियो। वनभित्र निर्मित थियो एउटा अर्को वन–उपवन। झ्याम्म परेका टल्किने हरिया पातका घना वृक्षहरूले बनेको त्यो स्थलमा मानों सदासर्वदा अखण्ड शान्तिमय गुप्त एकान्तमा घेरिएर सुरक्षित राखिएजस्तो थियो।

सुम्निमाले एक हातले झ्याङ पन्साउँदै त्यो सुरम्य उपवनभित्र देखाई। भनी,– "सोमदत्त ! उः हेर मनुवादह।"

झ्याङभित्रको खुला स्थलको मध्यमा एउटा जलाशय थियो उपवनले परिवेष्टित, र जलाशयको निर्मल पानीका उपर लहरे वृक्षका मसिना हाँगा निहुरिएका थिए। पानीको एक झल्को पऱ्यो सोमदत्तको आँखामा। सुम्निमाले झ्याङबाट आफ्नो हात झिकी। पन्सिएको झ्याङले खुम्चिँदै फेरि आफ्नो पूर्वरूप धारण गऱ्यो। मनुवादहको छिन-छिनमा उघ्रेको द्वारका उपर मानों हरियो लहरा र पातहरूको झ्याम्म परेको किरमिरे चित्रको पर्दा त्यसमाथि पऱ्यो।

सुम्निमाले भनी,– "भित्र पस्नुभन्दा पहिले एकपल्ट पछि फर्केर हेर त सोमदत्त ! कति अग्लो ठाउँमा हामी आइसकेका छौं। उः त्यो तलको जङ्गलभित्र सिमलको त्यो ठूलो रूखनिर नै छ तिम्रो आश्रम। देख्यौ तिमीले ? जहाँनेर कोशी बाङ्गिएकी छ।"

सोमदत्तले फर्केर हेऱ्यो। आफू उभिएको ठाउँ निकै मुन्तिर भिरालो पर्दै सुदूर दक्षिणको क्षितिजसम्म पुगेको वन-जङ्गलको विस्तारका उपर सूर्यको प्रखर किरण बसिरहेको थियो। समस्त विश्वको वातावरण शान्त थियो, मानों सूर्यको प्रखर तापले तलका वनप्रदेशका सम्पूर्ण ध्वनि किचिएर निःशब्द भएका थिए। सोमदत्तले त्यो निःशब्द

निर्जनतामा केवल आफूनजिकै टाँस्सिएर उभिएकी सुम्निमाले सास फेरेको र आफ्नो मुटु बल्किरहेको मात्र सुन्यो। मध्याह्नको सूर्यको ताप कठोर भए पनि पर्वतको उचाइले गर्दा तातो-चिसो मिसिएको हलुका वायु सुम्निमालाई स्पर्श गरी सोमदत्तलाई समेत अँगाल्दै पूर्व दिशाबाट बगिरहेको थियो वनस्पतिको गन्धमा सुम्निमाको मानव-गन्ध मिसाएर। नजानिंदो किसिमबाट आइरहेको हलुको मानव-सुगन्धबाट त्यो विराट् निर्जनतामा आत्मीयताको सानो लोक निर्मित भइरहेको। सोमदत्तलाई लाग्यो, यो बिरानो ठाउँ होइन।

सुम्निमाले भनी,– "देख्यौ, आश्रमको थलो कहाँनिर छ ?" सोमदत्तले भन्यो,– "अहँ, मैले त देखिनँ। विराटतामा लाग्दछ, मानौं सबै कुरा लोप भएको छ।"

सुम्निमाले भनी,– "फेरि एकपल्ट हेर गौरले सोमदत्त ! त्यो सिमलको रूखनिर।"

सोमदत्तले भन्यो,– "म त यो अरण्यको विस्तृत अगमतामा असङ्ख्य वृक्षहरू मात्र देख्दछु। सिमलले पनि आफ्नो अनगिन्ती शिर उठाएको देख्दछु जताततै। मैले त ठम्याउन सकिनँ, सुम्निमा !"

"ल भयो, त्यसो भए।" सुम्निमाले भनी,– "अब पसौं मनुवादहको वनभित्र।"

सुम्निमाले अघिकै जस्तो फेरि एक हातले त्यहाँको भ्याङ पन्साएर एउटा सानो प्रवेशद्वार बनाई। पहिले सोमदत्त पस्यो, अनि सुम्निमा। भ्याङको द्वार फेरि बन्द भयो। वनको त्यो एकान्ततामा एउटा थर्को एकान्त कुना बन्न गएको थियो त्यहाँ – विराट् मातृत्वका शरीरभित्र रहेको जीवन्त गर्भ-गह्वर।

भित्र पस्नेबित्तिकै सोमदत्तले लामो सास तान्यो, फोक्सोभरि किञ्चित् सौरभमय चिसो वायु भरियो। उसलाई लाग्यो, उसको थकान त्यतिले नै मेटिन गएको छ। भन्यो,– "कस्तो अद्भुत मनोरम स्थल !"

सुम्निमाले भनी,– "अगाडि आऊ न। त्यो ठूलो ढुङ्गामा बसेर यसको शोभा हेर, -यही हो मनुवादह।"

एउटा विशाल शिलाखण्डमा बसेर सोमदत्तले भन्यो,–"चारैतिरबाट वनस्पतिहरूले सुरक्षित यो सुरम्य खाडल, मलाई माताको गर्भको स्मरण गराउँछ। र यहाँको यो सरोवरको जल त्यो जीवनरससदृश लाग्छ जसबाट गर्भमा शिशु पोषण प्राप्त गर्छ।"

सुम्निमा भूईंमा बसेर झोलाबाट सरजामहरू झिकिरहेकी थी। सोमदत्तको मुग्ध अनुहार लक्ष्य गरेर उसले विस्मित स्वरले बोलाई,– "सोमदत्त !"

सोमदत्तले भन्यो,– "के सुम्निमा ?"

"किन त्यस्तो अनुहार लाएको तिमीले, सोमदत्त ?"

सोमदत्तले सोध्यो,– "के सुम्निमा ? कस्तो अनुहार ?"

सुम्निमाले कुरा फर्काउँदै भनी,– "केही खाँदैनौ ? भोकायौ होला ?"

"यहाँ त भोजनको केही आवश्यकताको अनुभव हुँदैन। त्यसै रमाइलो छ, त्यसै परितृप्ति छ।"

सुम्निमाले हाँसेर भनी,– "यहाँ भोको बसेर तप गर्दै घौता रिझाउने खण्ड छैन। हाम्रा घौता भोको बसेर रिझिँदैनन्।"

सोमदत्तले पनि परिहासकै हेतुले सोध्यो,– "त्यसो भए केले रिझिन्छ त ?"

"खाएर शरीरलाई तिरिप्त पारेर; अनि पो शरीर खुसाउँछ र घौता रिझिन्छन्।"

सोमदत्तको दृष्टि सुम्निमाको केही नलगाएको शरीरमा पर्‍यो– स्वास्थ्यले दीप्त भएको सुनको मूर्तिजस्तो पहेंलो वर्ण, कस्सिएको, खँदिलो। एक विपलका लागि सोमदत्तलाई आफ्नो शरीरको सम्झना भयो, कालो, सुकेको, चाउरिएर मुजैमुजा परेको, खुकुलो छालाको खोल भिरेको।

सुम्निमाले सकौतुक फेरि भनी,– "कि बाहुन भएकाले किरातीले छोएको खानेकुरा खान हुन्न भन्ने सम्झेका छौ तिमीले ?"

सोमदत्तले भन्यो गम्भीर भएर,– "साँच्चै, मलाई त त्यसतिर ध्यान नै थिएन।"

सुम्निमाले भनी,– "तर मलाईचाहिं थाहा छ राम्ररी। त्यसो हुँदा तिम्रो धर्मको रच्छे होस् भनेर घरबाट दूध र मह ल्याएकी छु।"

झोलाबाट उसले दूध र महको दुई थरीको ढुङ्ग्रो झिकी। अनि भनी,– "म पनि आज तिमीले खाएजस्तै दूध र मह मात्रै खान्छु।"

फेरि हाँसेर भनी,– "बाहुनी हुनुपर्‍यो एक छाकलाई।"

र फेरि उत्लिखेरै उसले कुरा थप्दै भनी,– "हेर न, बाले मलाई सम्झाउनुभा' थ्यो, मनुवादहको देवा कडा छ, त्यसउसले तिम्रो धर्म बिग्रने क्यै कुरा पनि नगर्नू रे मैले; तिमीले आफ्नो धर्मलाई कति बिघ्न मान्ने गर्‍या' छौ भन्ने थाह नै नभाजस्तो मलाई !"

अनि उसले आफ्नो साथ ल्याएको दूध र महको ढुङ्ग्रो सोमदत्तका अगाडि राखिदिई। सोमदत्तले अत्यन्त रुचिका साथ सबै खायो। अनि झोलाको सिरानी बनाएर उपरखुट्टी लाउँदै ऊ शिलाखण्डमा पल्ट्यो। उसलाई पूर्ण सन्तोषको अनुभव भइरहेको थियो। सुम्निमाले भनी,– "तिमी एकछिन यसै थकाइ मार, म झट्ट न्वाहेर आउँछु दहमा।"

दहभित्र पसेर सुम्निमा जलक्रीडा गरेको सोमदत्तले पल्टिपल्टी हेरिरह्यो। सुखको तन्द्रामा उसलाई सम्झना भयो धेरै वर्षपहिलेको त्यो दृश्य जसमा सुम्निमा कोशी नदीको तटमा यस्तै जलक्रीडा गर्ने गर्थी। उसलाई लाग्यो, सुम्निमा उसलाई बोलाउँदैछे,– "सोमदत्त !"

धेरै वर्षपहिलेको ध्वनि उसको कानमा पर्‍यो,– "सोमदत्त !"

पल्टेको पल्टेकै ऊ उँघ्न लाग्यो। यथार्थ र स्वप्न छुट्याउने नसक्ने अवस्थामा पुगेको थियो ऊ......कोशी नदी र मनुवादहको जल एकाकार हुन गएको छ उसको मस्तिष्कमा, नदीको तातेको बालुवा हुँदै बग्ने हावा यो चिसो दहको वातावरणमा सोस्सिँदै गएको छ। धेरै पहिले यही आश्रममा बसेका समय कोशीतटमा गाई चराउन जाँदा ऊ जुन वृक्षको फेदमा अढेसा लगाई विश्राम गर्थ्यो। शमी वृक्षको फेद र अहिलेको यो शिलाखण्डले उसको मस्तिष्कमा एउटै रूप लिँदै गयो। सबै कुरा बिलाउँदै

गए, एकाकार भएर। एकछिन ऊ भुसुक्क निदायो, केवल शरीरमा अवर्णनीय सुखबोध मात्र रह्यो, र बराबर उसको कानमा मधुरो आवाज परिरहेजस्तो भइरह्यो उसलाई,– "सोमदत्त ! सोमदत्त !! सोमदत्त !!! "

वायुको एक झोंका– तातो पनि र चिसो पनि छुट्याउनै नसक्ने उसको मुखमा परेझैं भान भयो उसलाई र मानिसको शरीरको गन्ध पनि मिसिएजस्तो। उसले निद्रैमा बडबडायो,– "सुम्निमा !"

सुम्निमाले आफ्नो मुख उसको मुखैनिर लगेर भनी,– "सोमदत्त !"

सुम्निमाको भिजेको कपालबाट दुईतीन थोपा जलबिन्दु सोमदत्तको मुखमा पऱ्यो। उसलाई लाग्यो, स्वप्नमा हलुका-हलुका जलवृष्टि भइरहेको छ।

सुम्निमाले भनी,– "सोमदत्त ! सोमदत्त !! तिमी निदायौ ?"

अनि पो सोमदत्तले आँखा उघाऱ्यो। सामुन्ने देख्छ भिजेको शरीर लिएर एकदमै नजिकै हात-गोडा टेकेकी सुम्निमा उसको मुखनिर आफ्नो मुख लगेर उसलाई बोलाइरहेकी छ,– "सोमदत्त ! अब उठ सोमदत्त !!"

सोमदत्तले आङ तान्दै भन्यो,– "कस्तो मादक भूखण्ड रहेछ यो, यो वनस्पतिले परिवेष्टित उपवन। त्यसै लट्ठ पार्ने। म त भुसुक्क निदाएँछु।"

"हो सोमदत्त ! असाध्य मीठोसँग निदाएका थियौ तिमी। कहिले पनि धक फुकाएर सुत्न नपाएजस्तो; बय्यरा। म उठाउने नै थिइनँ तिमीलाई मायाले त्यस्तो मग्नसित सुत्दा। तर हेरन, सुर्जे ढल्न थाल्यो, त्यसैले।"

रमाइलो आलस्यले छोपेको स्वरमा सोमदत्तले भन्यो,– "मलाई त लाग्छ, कतै नजाऊँ। यहीं बसिरहूँ, बसिरहूँ, मन लागुन्जेल यहीं बसिरहूँ, सधैंभरि।"

सोमदत्तको कुरा सुनेर सुम्निमाले अचम्म मानी र भनी,– "देवीथानमा पनि कोइ रात बिताउँछ र ? रात बस्न हुन्न बाले भन्नुभा' छ, तिम्रो धर्म जाने कुरो नगर्नू यों भनेर। मनुवा बडो डरलाग्दो देवा हो रे, एकदम कडा देवा हो मनुवा। त्यसैले .......ल हिंड सोमदत्त ! अबेर हुन थाल्यो। तिमीलाई तेल लगाइदिन्छु, न्वाहिदिन्छु र तिम्रो अहिलेको रूपलाई साटिदिन्छु, बाले भनेजस्तै।..........बित्यामा यों रल्लिएर बस्ने कुरा नगर।"

हतारिएर सुम्निमाले यति भनी र हतारिएरै उसले झोलाबाट तेलको एउटा सानो माली झिकी र भनी,– "एकछिन राम्ररी पल्ट तिमी सोमदत्त ! म तिम्रो आङमा तेल दलिदिन्छु। बाले वनस्पतिबाट अरक झिकेर बनाको तेल हो। सुँघ त कस्तो गम्म वास्ना आउँछ।"

तेल घसेको दुवै हात उसले सोमदत्तलाई सुँघाई। धूपको सुगन्ध थियो त्यो तेलमा। सुम्निमाले बिस्तार-बिस्तार सोमदत्तको शरीरमा तेल लाइदिन लागी। उसको हातको हलुका-हलुका स्पर्श सोमदत्तलाई बडो रमाइलो लाग्यो; शिथिल सुविस्ताको अनुभव गऱ्यो उसले। तेल लगाइदिंदा सुम्निमाको नग्न शरीर बीच-बीचमा सोमदत्तको

शरीरलाई छुन्थ्यो। एक प्रकारको उष्ण शान्तिको अनुभव गरेर लट्ठिँदै गयो। उसलाई लाग्यो, बराबर ऊ तन्द्रामा डुब्न खोज्दैछ– झम्म-झम्म। सुम्निमा तेल लाउँदैथी र भन्दैथी,– "कस्तो सुख्खा भएको जीउ ! तेल यसरी सोस्तैछ कि तिर्खाएर पिएजस्तो लाग्छ, तन्तनी। यस्तो दल्न पाको छैन कि बालुवामा परेजस्तो तेल सोसिहाल्छ तिम्रो जीउमा... कस्तो चिरिएको पैतला, कुर्कुच्चा कठै...! एकछिन उठेर बस त कपालमा तेल हाल्दिऊँ..."

त्यहाँको निःशब्द वातावरणमा सुम्निमाले बोलेको स्वर चराको बोली जस्तो सुनिन्थ्यो सोमदत्तको कानमा।

सुम्निमाले भनी,– "ल अब उठ, र नुहाऊ मनुवादहको पानीमा।"

ऊ यन्त्रवत् सुम्निमासँगसँगै जलभित्र प्रवेश गर्‍यो। जलको निर्मल शीत स्पर्शले उसको अङ्ग पुलकित भयो। अहिलेसम्मको लट्ठ पार्ने मादकता मानौं त्यहाँको शीत स्पर्शले एकदम लोप भएको छ र त्यसको ठाउँमा सारा शरीर र मनमा मानौं निष्प्रयोजन अद्‌भुत स्फूर्ति र चञ्चलताको सञ्चार भइरहेछ। दिनको टह्कालो घाममा उसले आफ्नो अगाडि तिघ्रासम्म पानीमा उभिएकी सुम्निमालाई देख्यो जलक्रीडा गर्दै उसलाई पानी छ्यापिरहेकी। तत्क्षण उसलाई लाग्यो, सारा वातावरण नै पुलकित छ, क्रीडामय छ। उसले पनि सुम्निमालाई पानी छ्याप्यो र निथ्रुक्क पारिदियो। सुम्निमाले आफ्ना दुवै हत्केलाले पानीको बाछिटा छेल्दै शिर फर्काएर चिच्च्याई,– "भो–भो, सोमदत्त !"

उनीहरूले धेरैबेरसम्म जलमा स्नान गरे, र दुवै जना सँगसँगै पौडिँदै दहमा टाढा-टाढासम्म पुगे। अनि, जब तटमा आएर सुम्निमाले लुगा भिजाउँदै उसको शरीर मल्न थाली सोमदत्तले भन्यो,– "तिमीलाई कसले सिकायो यी सबै रमाइला कुरा गर्न ? तिम्रो हात कसरी यस्तो सिपालु भयो ? कस्तो कोमल स्पर्श छ तिम्रो हातमा ? कस्तो कमलो चाप छ तिम्रो हत्केलामा, कि त्यसले थिचिएर तेल लाइदिरहँदा म लट्ठ भएको थिएँ।"

सुम्निमा उसको गर्दनलाई भिजाएको लुगाले मल्दथी, फेरि भिजाउँथी मल्दथी, र पुछ्थी। यो क्रियामा सोमदत्तको गर्दनसम्म पुग्नका निम्ति उसको शरीर बराबर सोमदत्तको शरीरसँग टाँस्सिने गर्थ्यो।

ऊ भन्दैथी,– "आज तिमी मलाई गिज्याउन खोज्दैछौ, होइन सोमदत्त ? मलाई के आउँछ र ! यसो निहुराऊ त; गर्दनको कापमा राम्ररी मलिदिऊँ।"

सोमदत्तले शिर झुकायो। सुम्निमाले गर्दनमा रगडिदिँदै भनी,– "हेर हेर; कस्तो कत्ला जमेको तिम्रो गर्दनमा।"

निहुरिएकै अवस्थामा सोमदत्तले भन्यो,– "मैले ठट्टा गरेको होइन सुम्निमा ! सत्य भन्दैछु; तिमी अत्यन्त प्रवीण छयौ। यस्तो चर्या कसले सिकायो भन न तिमीलाई ?"

सोमदत्तलाई यस्तो सुखको अनुभव कहिल्यै भएको थिएन। कसैको चर्यारत स्पर्श पनि यस्तो कोमल, सुखदायी र तृप्तिकर हुन सक्छ भन्ने उसलाई थाह नै थिएन।

सुम्निमाले भनी,– "के भनेको तिमीले, हँ सोमदत्त ? यस्ता साना-साना कुरा पनि कसैले सिकाउनुपर्छ–तेल लाउनु, नुहाइदिनु, माया गर्नु ! यी सब कुरा त जीवनले त्यसै

दिन्छ। साधारण किसिमले बाँच्दै जाँदा आफैं सिकिने कुरा हुन् यी सब त। लोग्नेमानिस र स्वास्नीमानिसका बीच माया गर्ने कुरा पनि कसैले सिकाइरहनुपर्छ र? जीवनले आफैं त्यसै नदिएका कुराहरूलाई पो त मिहिनेतका साथ सिक्नुपर्छ। हेर, तिमी बाहुनहरूले कति कुरा सिकेका छौ मिहिनेत गरेर; कति कुरा जानेका छौ; कस्ता-कस्ता, कत्रा-कत्रा पोस्तक पढ्छौ, हेर्छौ र कस्ता-कस्ता नबुझिने कुरा गर्छौ......।"

र फेरि जोरसित हाँसी ऊ; र भनी,– "छि, के भन्या' तिमीले? तेल लाउन, नुहाइदिन पनि सिक्नुपर्छ रे।"

सुम्निमाले भनेका यतिका कुरा सोमदत्तले सुनेन कि बुझेन, कुन्नि! उसले श्वास फेरेजस्तो विस्तारो स्वरमा भन्यो,– "सुम्निमा!"

सोमदत्तको पिठ्यूँ मल्दामल्दै सुम्निमा टक्क थामिई; उसले अचम्म मान्दै भनी;– "के सोमदत्त? के भनेको?"

सोमदत्त केही बोलेन, अनौठो किसिमले हेरिरह्यो सुम्निमालाई। सुम्निमाले हतारिएर भनी,– "धेरैबेर पानीमा नबसौं। यहाँका देवा बडा कडा छन् रे। लाग्ला तिमीलाई यहाँका चौता। यता आउन लाग्दा बाले मलाई भन्नुभा'थ्यो, हेर् है सुम्निमा! बाहुनको छोरालाई चाँडै फर्काएर ल्याए नि, केही नहोस् उसलाई।"

पानीबाट बाहिर निस्किएर उनीहरू घाटको एउटा शिलाखण्डमा उभिए। सूर्यको तेर्सिएको एउटा किरण-रेखा वृक्षको सघन छायाको अन्तरबाट छिरेर सोमदत्तको छाती र सुम्निमाको पेटमा पहेलो डोरो बनाउँदै तल पत्थरमा प्रकाशबिन्दु भएर परिरहेको थियो। सुम्निमाले भनी,– "हावामा त्यसै एकछिन उभिरहौं, आङ सुक्छ।"

सोमदत्तलाई हृदयभित्रैदेखि एउटा हलुका सिहरन भएझैं लाग्यो। शरीरले रमाइलो बोध गऱ्यो। सुम्निमाले सोधी,– "जाडो लाग्यो सोमदत्त?"

"होइन, अत्यन्त प्रसन्न छु म, त्यसैले शरीर पुलकित भइरहेछ।"

"त्यसो भए, सोमदत्त! तिम्रो मनुवा रिझिएजस्तो छ। जीउले त्यस्तो रमाइलो मान्न लाग्यो भने भन्ठान्नुपर्छ, मनुवा ठुस्किन छाडेछ अब। गाईबस्तुलाई देख्या' छैनौ तिनलाई माया गरेर छोयो भने कसरी जीउ जिरिङ्ग-जिरिङ्ग गर्छ? आङमा काँडा उम्रेको हो त्यो खुशीले, र त्यस्तै मनुवाले पनि खुशी भएर पखेटा फालेको हो रे त्यो, बाले भन्नुभा'को त्यो सोमदत्त!..... ल, अब एकछिन बस। म तिमीलाई सिँगारिदिन्छु, तिम्रो रूप साटिदिन्छु.....।"

सोमदत्तले आग्रहका साथ प्रश्न गऱ्यो,– "किन? मलाई किन चाहियो शृङ्गार? किन मेरो रूपमा परिवर्तन ल्याउने? किन सुम्निमा?"

"किनभने...किनभने...हेर सोमदत्त! तिमीलाई भिल्लको रूपमा सिँगारिदिन्छु र..."

"पहिले बताऊ सुम्निमा! मेरो रूप किन बद्लिने?"

किञ्चित् छिपीको स्वरमा सुम्निमाले भनी,– "बाले भनेको क्या; तिम्रो मनुवाले अर्को रूप लियो भने फुर्फुरिन्छ रे त्यो। बालकजस्तै त हो नि त्यो पनि। त्यसलाई

नानाभाँति फुर्काउनुपर्छ रे। अनि आफू रिझिएपछि अर्काको ठुस्स परेको मनुवालाई पनि रिझाउन सक्छ रे। मैले क्यै बुझ्या' छैन यी सब कुरा, साँच्चै सोमदत्त ! कुन्नि बाले भनेको हो......." भन्दै उसले झोलाबाट कौडीहरूको कन्दनी झिकी र सोमदत्तको कम्मरमा लगाइदिई। अनि कौडीहरूको माला जनैंजस्तै गरी काँधमा भिराइदिई। कपाल कोरिदिएर मयूरपङ्खी मुकुट पनि उसको शिरमा पहिऱ्याइदिई। अनि एउटा कालो चिल्लो काठको लामो लौरो दिएर सुम्निमाले भनी,– "यै हो तिम्रो हतियार........ल, अब हेर आफ्नो अनुहार दहको पानीमा।"

पानीको किनारमा घुँडा टेकेर दुवै बसे र निहुरिँदै पानीमा हेर्न लागे।

सुम्निमाले भनी,– "के देख्यौ पानीमा ? चिन्यौ आफूलाई ?"

सोमदत्तले घोरिएर पानीमा हेर्दै भन्यो,– "यहाँ त म कहाँ छु र। एउटा भिल्ल र एउटी सुन्दरी तरुणी छे– सुवर्ण रूपकी !"

पानीको छायामा तरुणीको अनुहार हाँस्यो। त्यही समय वायुको एउटा सानो झोंका पानीमाथि लहर बनाएर गयो। पानीको आङ सिरिङ्ग गरेजस्तो भयो। किनारामा एकएक गरेर पछारिन लागेका लहरले पानीको छायाचित्रलाई हल्लाएर किरिमिरी पारिदियो।

सोमदत्तले चकित स्वरमा भन्यो,– "यो के भयो ? मैले केही बुझिनँ, मलाई के भयो सुम्निमा ?" अनि अचानक उसले सुम्निमाको झुकेको काँधलाई दुवै हातले जोरसँग हल्लाउँदै भन्यो,– "सुम्निमा !"

उसको आँखा एउटा भयङ्कर दीप्तिले टल्किरहेको थियो, राति बाघका आँखा जसरी टल्किन्छन्। र उसको श्वास उत्तप्त थियो र द्रूत गतिले चलिरहेको थियो।

सुम्निमा आत्तिँदै हतपताएर उठी। उसले सोमदत्तलाई पनि उठाउँदै भनी,– "सोमदत्त ! अब तिमीले यहाँ धेरैबेर बस्ने होइन। देवा असाध्य बलियो छ र कडा पनि छ यहाँको......मनुवादहको........बाले भनेको तिमीलाई जोगाएर ल्याउनू रे......."

जब उनीहरू मनुवादहको वनको भ्याङलाई फटधाएर बाहिर निस्के, सोमदत्तको आँखा बाह्यलोकको उज्यालोमा एकछिन तिर्मिरायो। उसलाई एक प्रकारले तानेर नै, बलपूर्वक सुम्निमाले मनुवादहको उपवनबाट बाहिर ल्याएकी थी। बाहिर आएपछि सोमदत्त केही संयत भयो। उसले भन्यो,– "कस्तो उज्यालो बाहिर..........।'

सुम्निमाले भनी,– "अब दिन ढल्किसक्यो; रात पर्न बेर छैन; र तिमीले टाढा आफ्नो आश्रम पुग्नु छ। म तिमीलाई आश्रमको वनसम्म– त्यै कोशीछेउको शमीको रूखसम्म पुऱ्याइदिन्छु। छिट्छिटो हिँडौं अब......."

किरातीगाउँलाई दाहिनेपट्टि पारेर पातलो गोरेटो हुँदै उनीहरू शनैःशनैः तल झर्दै थिए। सोमदत्त अत्यन्त शान्ति र परमसुखको अनुभव गरिरहेको थियो, यस्तो परिपूर्णता उसलाई आजसम्म पहिले कहिल्यै भएको थिएन; मानों जीर्ण रोगपछि प्रथम-प्रथम उसले भोजन गर्न पाएको छ; त्यस्तो संन्तोष ऊ अहिले अनुभव गरिरहेको थियो। मन

आनन्दित थियो, सन्तुष्ट थियो, परिपूर्ण थियो; तर त्यसमा मनुवादहमा भएजस्तो उग्र चञ्चलता थिएन। ऊ फेरि साधारण स्थितिमा प्राप्त भइसकेको थियो। लाग्थ्यो कि सोमदत्त र सुम्निमा मानौं धेरै पुराना मित्र हुन्, मानौं एकै गाउँका घनिष्ट साथी हुन्। यसरी कुरा गर्दै उनीहरू बाटो काटिरहेका थिए।

सोमदत्तले प्रश्न गऱ्यो,– "तिम्रो विवाह कहिले भयो, सुम्निमा ?"

उसले भनी,– "मलाई तिमीले पन्साइदिएपछि धेरै वर्षसम्म दुःख मानेर मैले जीवन बिताएँ। लाग्थ्यो, केहीमा पनि स्वाद छैन; खल्लो-खल्लो। पछि आमाबाको ढिपी टार्न सकिनँ; बिहे गरें गाउँकै केटोसँग; त्यसले पनि मैसँग बिहे गर्छु भनी ढिपी लिएको थियो। छोरी पनि छ मेरी, छ महिनाकी। देखेनौ ?"

"तिमी सुखी छचौ, सुम्निमा ?" मधुरो स्वरमा सोमदत्तले सोध्यो।

"घाउ लागेको रूख पनि त हुर्किन्छ नि, यदि त्यसमा बाँच्नलाई चाहिने रस बाँकी छ भने र सहज स्वभावमा त्यसले हुर्किन पायो भने। फेरि, मेरो दुल्हा तिमी जस्तै छ ऊसँग रात बिताउँदा तिमीसँगै छु जस्तो लाग्छ। यस्तै सपनालाई अँगाल्दै त हिंड्नुपर्छ नि बाँच्नु छ भने......"

एकछिन दुवैले केही बोलेनन्। चुप्प लागेर हिंडिरहे। सुम्निमाले भनी,– "मेरो दुल्हा भन्छ,– 'सुम्निमा ! मैले तिमीलाई पाइनँ।' त्यस्तो छ मेरो दुल्हा। रातभरि, म ऊसँग टाँस्सिएर सुतेकी हुन्छु तैपनि उसले मलाई पाएन रे। हाम्री छोरी पनि भई, तैपनि म उसलाई भेट्टिइनँ रे।.........ऊ भन्छ,– 'अब म काशी जान्छु, त्यहाँ बाहुन जस्तो गोत्र लिन्छु र म पनि ठूलो सपनालाई अँगाल्छु।' त्यस्तो पनि कसैले गर्ने हो, भन त सोमदत्त ? एक त किरातीले बाहुनको गोत्र लिने रे !"

सोमदत्त अवाक् भएर सुम्निमाको कुरा सुनिरहेको थियो। उसको हृदयान्तरमा ठूलो उद्वेग र हलचल मच्चिरहेको भए पनि उसले मुखबाट एक शब्द झिकेन। सुम्निमाले एउटा लामो सास तानी। र भनी,– "हुन त यो जिन्दगीसँग बाँधिएर बसिरहनलाई त साना-तिना सपना अँगाल्नैपर्छ, तर किरातीले बाहुनको जस्तो भएर गोत्र लिने र उनीहरूको जस्तो अजङको ठूलो सपनालाई अँगाल्ने कहाँसम्म ठीक होला र यो, होइन सोमदत्त ? सोमदत्त ! किन केही नबोलेको ?"

सोमदत्तले भन्यो,– "तिम्री छोरी अत्यन्त रहरलाग्दी छ।"

यसरी कुरा गर्दै उनीहरू कोशीतटको त्यही शमीको वृक्षनेर पुगे जहाँ बाल्यकालमा सोमदत्तले पहिलो पटक सुम्निमालाई भेटेको थियो।

रूखमुनि उभिएर सुम्निमाले भनी,– "सम्झना छ सोमदत्त ! यहीं हाम्रो भेट भएको थियो धेरै दिनपहिले !" भन्न त उसले त्यति मात्र भनी, तर सोमदत्तलाई लाग्यो, उसका आँखा रसाएका थिए।

उसले बिस्तारो भन्यो,– "त्यो के बिर्सिने कुरा हो, सुम्निमा ? "

उसले सुम्निमाको हात समायो। सूर्य अस्ताचलमा ढल्के। हठात् रूखमुनि साँझको अँध्यारो देखियो।

सोमदत्तको हातबाट आफ्नो हात हटाएर सुम्निमाले भनी,– "मलाई अबेर भो....म जान्छु अब, माया नमारे ल ?"

सोमदत्तले केही भन्नुभन्दापूर्व नै उसले फेरि भनी,– "बाले त भनेको होइन, तर एउटा सबभन्दा पछिल्लो विधि म आफ्नै मनले गर्छु।"

यति भनेर हठात् उसले सोमदत्तलाई आफूसँग टाँसेर बलियो आलिङ्गनमा बेर्दै उसको मुखमा चुम्बन गरी।

अनि तीव्रताका साथ दौडिँदै ऊ भागी; र यो पनि भन्दै गई,– "मैले आफ्नो मुटुको तातो सासले तिम्रो मनुवालाई फुकिदिएकी छु.....सोमदत्त ! सोमदत्त !! सोमदत्त....... !!!"

उसको स्वर वनभित्र रात्रिप्रवेशको अन्धकारमा लोप भयो।

सोमदत्त विक्षिप्तजस्तो भएर करायो,– "सुम्निमा.....! सुम्निमा......!!"

सुम्निमाको मधुरो हुँदै गएको स्वर उसको कानमा पऱ्यो,– "सोमदत ! म तिमीलाई आश्रममा पर्खिरहेकी छु सपनाजस्तो तिमीबाट अँगालिन......."

-सोमदत्तको ओष्ठ अग्निस्पर्शले पोलेजस्तो भतभत गरिरहेको थियो। उसको शरीर भर्खरैको नारीशरीरको स्पर्शले रन्किएको थियो। ऊ उत्तेजित थियो, चञ्चल थियो।

उन्मत्त स्वरमा ऊ करायो,– "सुम्निमा !"

कोशीको कलकल ध्वनिमाथि उठेको उसको स्वर पहाड, जङ्गल र घाँचमा प्रतिध्वनित हुँदै गाईंगाईं कराउन थाल्यो; मानों सारा वनप्रान्त ऊजस्तै, उन्मत्तभैरव भएर सहस्र कण्ठले चीत्कार गर्दैछ,– 'सुम्निमा ! सुम्निमा !!'

प्रगाढ हुँदै गएको अन्धकारमा सुम्निमा दुगुर्दै गाउँतिर फर्किरहेकी थी। आफ्नो मुटुको चड्काइले पगपग ऊ बेहोश हुन खोज्थी। प्रतिध्वनित भइरहेको सोमदत्तको आर्तपुकारलाई नसुन्नका लागि उसले दुवै कान थुनेकी थी।

कोशीतटमा साँझ झमक्क परिसकेको थियो। विक्षिप्त सोमदत्त अन्धकारमा सुम्निमाको भर्खरै पाएको स्पर्शको तीव्र तप्त रापले बाफिँदै आफ्नो कुटीमा हुर्रिंदै आयो, जहाँ रात्रिको अन्धकारमा लुप्त भएको चराचरको मध्यमा मानों एउटा पहेंलो उज्यालो बलिरहेको छ, मानों त्यो क्षीण उज्यालोमा टोलाएर बसिरहेकी पुलोमा पहेंलीजस्ती लाग्थी– कुनै गृहवासिनी किरातीनारी पर्खेर बसिरहेजस्ती।

त्यस दिन बिहान अत्यन्त आलस्यका साथ पुलोमा उठी। शरीरमा किञ्चित् शक्ति पनि बाँकी रहेनजस्तो लाग्यो उसलाई। सुतीसुती उसले आङ तानी, र सोची,– 'आज चोखिन नपरेको भए हुन्थ्यो।' ओछ्यानमा उसको शरीर तातो थियो, किञ्चित् ज्वरोको तापजस्तो। शरीर र उसले पहिरिएको एकसरो धोती फोहोर थियो; तर उसलाई लाग्यो,– 'बरु फोहोरी नै बसिरहन पाए हुन्थ्यो रातभरिको आफ्नै जीउको तातोमा।'

हठात् उसलाई भिल्ल साथीको सम्झना भयो– अल्छी मानेर शरीर तान्दा । कस्तो आश्चर्य ! आज के भइरहेछ उसलाई ?

तर त्यसरी आलस्यमा ऊ कहाँ सुत्न पाउँछे र ? अत्यन्त अनिच्छुक हुँदै ऊ ओछ्यानबाट उठी र नुहाउन भनेर कोशीतटमा आई । नुहाउने घाटनिरको भिजेको ठाउँलाई देखेर उसले सोची,– 'पतिको स्नानादि क्रिया सिद्धिसकेछ । आज उसलाई निकै अबेर भएछ ।'

त्यसपछि छिटोछिटो त्यहाँको कार्य समाप्त गरी ऊ भिजेकै परिधानमा आश्रम फर्की । उसको कपालका टुप्पाबाट पानीका थोपा चुहिरहेका थिए । आफ्नो कोठामा पसेर उसले स्वच्छ वस्त्र फेरी र कोशीमा धोएका लुगाहरू सुकाउन ऊ आँगनमा आई । ठीक त्यही बेला पूर्वतिरको वनको अँध्यारोलाई छिचोल्दै सूर्यको कोमल किरण आँगनमा तेर्सो परेर ओछिएको थियो । तुलसीमठको बाडामा सबै लुगा सुकाएर नियमानुसार चामल कुट्न ऊ ढिक्की भएतिर जान लाग्दा उसलाई लाग्यो, आज आश्रम अस्वाभाविक किसिमले शून्य छ । अहिलेसम्म सोमदत्त आफ्नो विशेष क्रिया समाप्त गरी यज्ञका लागि अग्नि स्थापित गर्न आँगनमा आइसकेका हुन्थे । कदाचित् पुलोमाले अबेर गरेको देखेर उनी आश्रमको उत्तरतिरको भागमा आफ्नो विशेष अनुष्ठानको अवधि बढाएर यौगिक क्रिया गर्दै होलान् भन्ने पुलोमाले सोची । ऊ हतार नगरी बिस्तारै आफ्नो दैनिक कार्य गर्न लागी । ढिक्कीको ओखलीमा एकएक धान राखेर उसले देब्रे गोडाले ढिक्कीको फेदलाई थिची । सिरानमा ढिक्कीको टाउको उठ्यो । ऊ एकछिन त्यसै टोलाएर उभिरही । उसको गोडामुनि ढिक्की खुकुलो हुँदै गयो र ढिक्कीको लुसी ओखलीभित्र बिस्तारै घस्यो । मौलामा दुवै हात राखेर त्यसका उपर गाला अडचाई ऊ धेरैबेरसम्म त्यसै उभिरही । बाहिर सूर्यको प्रकाशले सारा आश्रम नै टकटक उज्यालो भइसकेको थियो । पुलोमालाई समयको किञ्चित् पनि ज्ञान रहेन । ढिक्कीघरमा उभ्भी-उभ्भी सपना देखेजस्तो ऊ आफ्नो बाल्यकालका कुरा सम्झिन थाली । त्यसो त उसको बाल्यावस्था एउटी ग्रामीण बालिकाले बिताउने जस्तै साधारण समय थियो, जसमा ऊ पिताजीको कठोर अनुशासनमा हुर्केकी थी । तर आज उसलाई बितेका तिनै दिन– माइतीघरमा बिताएका तिनै कठोर अनुशासनका दिन नै, बढी रमाइला दिन थिए भन्ने लाग्यो । केही नभए पनि कमसेकम ऊ बाल्यावस्थाको निर्दोष अज्ञानतामा त थी ! र आजकाल प्रतिमास पिल्सिनुपरेजस्तो दारुण निराशामा उसले पिल्सिनुपरेको त थिएन ' उसलाई सम्झना भयो– गाउँको बगैंचाको त्यो जलाशय, र कालो चिल्लो शरीर भएको त्यो भिल्ल केटो जसलाई केही समयपछि आमाले भेट्न दिएकी थिइन छोरी ठूली हुँदै गएकी हुनाले । तर, तैपनि घरपछाडि आएर ऊ बोलाउने गर्थ्यो,– "पुलोमा ! ए पुलोमा !" पुलोमा उसको बोली सुनेर पुस्तकबाट मुन्टो उठाउँथी, तर आमाको डरले बाहिर निस्किन्नथी । केही समयसम्म प्रतीक्षा गरेपछि भिल्ल केटो फर्किन्थ्यो, तर त्यसपछि धेरैबेरसम्म पुलोमाको ध्यान पुस्तकमा जान सक्दैनथ्यो । एउटा दीर्घ निःश्वास फालेर पुलोमाले भनी,– 'कहाँ होला त्यो भिल्ल आजकाल ?'

गोगृहबाट कपिला गाईले वाँ: गरी। पुलोमाको तन्द्राच्छन्नता अकस्मात् लोप भयो। उसले सोची,– 'आज धान कुट्न भ्याइन्न। चौथो दिनको यो नियम खण्डित हुने भयो।'

गाईको दैनिक सेवा समाप्त गरेर ऊ गोशालाबाट बाहिर आई। आश्रमको प्राङ्गण असाधारण किसिमले शून्य थियो। त्यहाँको चिसो अग्निवेदीका उपर रूखबाट झरेका पात खसेका थिए। तुलसीको मठ पनि सुकेर कटकटिएको थियो सूर्यको कडा किरणमुनि। हिजो पोतेको प्राङ्गणको पाप्रो पटपटी फुट्न लागेको थियो, र चारैतिर चराचुरुङ्गीले खसाएका विष्टा र वृक्षका पातका हाँगाबिँगा र खर-पात छरिएका थिए। आश्रममा मानिसको बास नभएजस्तो थियो। पुलोमाले बिहान सुकाएको धोतीको एउटा छेउ बाडाबाट भूइँमा लत्रेको थियो। पुलोमालाई त्यो धोती पनि कुनै अर्केको जस्तो लाग्यो। उसले सोची,– 'कति वर्ष बिताएँ मैले यहाँ ?'

सोमदत्तले अहिलेसम्म पनि यज्ञादिको तरखर नगरेको देखेर उसलाई आश्चर्य लाग्यो। एकपटक ऊ सोमदत्तको कोठामा गई। कोठा शून्य थियो। अनि ऊ सोमदत्तको त्यो विशेष स्थानमा पुगी जहाँ अचेल एकान्तमा ऊ आफ्नो धेरै समय बिताउने गर्थ्यो। आज त्यो स्थल पनि जनशून्य थियो, रिक्त थियो। ऊ फेरि आश्रममा नै फर्की। प्राङ्गणमा तुलसीको मठनजिक उभिएर उसले आश्रमको चारैतिर आफ्नो दृष्टि घुमाई। महान् शून्यताबाहेक त्यहाँ केही थिएन। नबलेको यज्ञवेदीले त्यहाँको शून्यतालाई झन् गम्भीर बनाइरहेको थियो। पुलोमालाई लाग्यो उसको जीवन कस्तो एक्लो रहेछ। उसलाई सोमदत्तका प्रति किञ्चित् पनि आग्रहको अनुभव भएन, उसले केवल अनुभव गरी आफ्नो जीवनको त्यस्तो खोक्रोपन जसका उपर दैनिक धार्मिक क्रियाहरूको सानो पातलो आवरण परिरहेको छ। फुर्सत नहुने गरी उनीहरूबाट सम्पादित भइरहेका क्रिया, अनुष्ठानादि, व्रत, तप, पूजाहरूले त्यो शून्यतालाई छर्लङ्ग भयो, हृदयको खाडल उदाङ्ग ! हे ईश्वर ! यो के भएको ?

पुलोमालाई एकाएक भयको सञ्चार भयो; कुनै शारीरिक क्षति होला भनेर होइन, त्यो महान् एक्लोपनको विराटतालाई बुझेर। उसले एकपटक टाउको उठाएर बोलाई,– "ब्राह्मण ! पति !!" तर उसको यो पुकारमा आग्रह-वाणी थिएन। अरू कुनै उपाय नदेखेर, एउटा निर्जन द्वीपमा धेरै दिनदेखि देख्दै आएको कुनै वस्तु लोप हुँदा त्यहाँको सुपरिचित दृश्यमा केही खालीपन भएको बोध भएर खोजेजस्तो गरी उसले सोमदत्तलाई बोलाएकी थी। उसका पुकारको उत्तरमा कतैबाट केही स्वर आएन, केवल सघन वनभित्र टाढासम्म उसले बोलाएको स्वर अमानवीय ढङ्गबाट प्रतिध्वनित भयो। पुलोमाले सोची,– 'कहाँ गए होलान् उनी ?' फेरि ऊ फर्केर कुटीको आफ्नो कक्षमा आई। सोची,– 'आज यज्ञपूजादि सबै थन्किए।'

कोठामा आएर ऊ गुन्द्रीमा पल्टी। जीउ हलुका भयो। कोठाको शीतलताले उसको रन्केको शरीरलाई विश्रामको शान्ति दिएजस्तो लाग्यो। उसले जीवनमा यस प्रकारको निश्चिन्त

अवकाश पाएकी थिइन;– दिन-रात केही-न-केही चर्यामा लागिरहनुपर्थ्यो । आजको यो अप्रत्याशित आनन्दलाई उसले गुन्द्रीमा पल्टी-पल्टी रमाइलो मानेर भोग गर्न थाली । शरीरका पोरा-पोरा खुकुला भए; मन पनि अकारण नै खुकुलो भयो । शरीर र मन दुवै थकाइ मारिरहेका थिए ।

पाप र पुण्य भनेको के हो ? जीवनभरि जुन धार्मिक क्रियाहरूलाई ऊ पुण्यकार्य मानेर निरास भई गर्दै आएकी थी, आज त्यो पुण्यकार्यबाट पूर्ण अवकाश पाउँदा उसको मनमा आफ्नो संस्कारको हलुको वाणीले उसलाई भन्यो,– 'पुलोमा ! जीवनभरिको पुण्य सञ्चय एकक्षणको अवहेलनामय असावधानीले नष्ट हुन्छ । आज के गरिरहेकी तँ ?'

तर, चिसो गुन्द्रीको आनन्द अनुभव गरिरहेको शरीरले उठ्ने जाँगर देखाएन । बाहिर मध्यान्हको रौद्र तापमा गएर कार्यरत हुने उत्सुकता पनि पुलोमाको थिएन,– 'पुण्य किन यस्तो क्षणभङ्गुर ? के यो यस्तो अन्यदेशीय तत्त्व त होइन जीवनमा कि त्यसलाई आफूमा हुर्काउन सतत सचेष्ट भइरहनुपर्छ, प्रतिकूल वातावरण र माटोमा लगाएको कुनै अन्य विदेशी विरुवाजस्तो ? के धर्ममा स्वाभाविकता नै छैन र ? नत्र आज शरीरले किन यस्तो सुखभोग पाइरहेको छ, धार्मिक अनुष्ठानबाट निवृत्ति पाएकोले ?' पुलोमाका यस्ता विचार कुनै स्पष्ट रूपबाट उसका मनमा आएका होइनन्,– तन्द्राबाट झल्यास्स-झल्यास्स बिउँझिएर हेर्दा देखिएका दृश्य असम्बद्ध र असंलग्न वस्तुहरू आँखामा परेजस्ता । त्यस बेलाको प्रधान अनुभवचाहिं उसलाई थकाइ मेटाएको सुखको थियो । त्यो सुखले आलस्यसँग मिसिएर विलासिताको भोकको स्वाद दिइरहेको थियो उसलाई । त्यसै अल्छी मानेर पल्टिँदै उसले सोची,– 'आज भोजन बनाउने काम पनि गर्दिनँ म ।'

तर, तत्क्षण उसलाई लाग्यो, ऊ भोकाएकी छे । उठेर ऊ भण्डारकक्षमा गई । हिजो जमाएको एकराते दही थियो । अलिकति चिउरा र दही खाएर ऊ बाहिर निस्की । गोगृहबाट गाईले व्वाः गरेर कराई । पुलोमाले सम्झी,– 'गाई भोकै रहिछन् ।' उसले गाईको दाम्लो फुकाउँदै भनी,– "जाऊ कपिला ! आज जहाँ मन लाग्छ चर्न जाऊ, स्वच्छन्द भएर ।"

पुच्छर ठाडो पारेर गाई कुद्दै नदीतिर लागी । काम नपाएकी पुलोमा फेरि फर्केर कोठामा आई । कोठाभित्र पस्दा ओसाराको छानोमा झुन्ड्याएको मृगचर्ममाथि उसको दृष्टि पऱ्यो । आज त्यो चर्म बेरिए बेरियै रह्यो । त्यसैका उपर बसेर सोमदत्त ध्यान-पूजा गर्थ्यो । एकपल्ट फेरि उसलाई सोमदत्तको सम्झना आयो । उसले भनी,– 'ती मेरा पति हुन् ।'

सोमदत्तलाई सम्झिन्नँ भनेर जतिजति उसका बारेमा पुलोमा मनमा कुरा खेलाउँथी उतिउति उसको ओठमा बराबर यही एउटा वाक्य बन्दथ्यो,– 'उनी मेरा पति हुन्, पुत्रेष्टिकार्यका लागि नियुक्त पुरुष ।'

योभन्दा बढी भावनाको सङ्ग्रह ऊ गर्न सक्दिनथी । यतिका वर्षसम्म दिनरात सँगसँगै रहँदा पनि सहधर्मिणीको अर्को कुनै रूप उसले देखिन आफूमा– धार्मिक

अनुष्ठानका लागि वासना-शून्य हृदयले रात सह-शय्यावती भएर उसका साथ केही कठिन समय बिताउनु दिनभरिको एकनासे यज्ञादि पूजा-व्रतहरूको अविश्रान्त सम्पादन-उपरान्त। पछिपछि त त्यो रात्रिको अनुष्ठान शरीर र मन दुवैलाई थकाउने क्लेशदायी चर्या हुँदै गयो। उनीहरूको जीवन केवल यन्त्रवत् मात्र चलिरहेको थियो। कालान्तरमा उनीहरूका बीच बोलचाल पनि बन्द हुँदै गयो। वार्तालापको आवश्यकता नै रहेन, त्यस्तो एकरूपता हुन गयो उनीहरूको सम्बन्धमा। एउटाले अर्काको अस्तित्वको अनुभव उसका थाकेर राता भएका आँखाले तरेर हेरेकोबाट पाउँथ्यो, नत्र दुवैले आपसको अस्तित्वलाई बिर्सिसकेका थिए। सहवासमा पनि मानिस आपसमा कति निस्पृह हुन सक्दो रहेछ। यी सब कुरा मनमा खेल्दा पुलोमा आफूलाई अवलम्बन दिएजस्तो गरी भन्ने गर्थी,– 'उनी मेरा पतिदेव हुन्, आज कता लागेछन् उनी ?'

दिनभरि पुलोमाका मनमा यस प्रकारका विचार आइरहे। ऊ कहिले सोमदत्तलाई सम्झिन्थी, त कहिले आमाबाबुलाई र झन् कहिलेचाहिं गाउँको त्यो भिल्ल केटालाई। पाप र पुण्यको विचार मस्तिष्कमा बराबर आइरहन्थ्यो। दृढतापूर्वक निर्णयमा पुग्ने वा शृङ्खलाबद्ध भएर चिन्तन गर्ने उसको उद्देश्य थिएन। ऊ त क्षणक्षणको प्रवाहमा बगेको एउटा सुकेको पातसदृश भएकी थी। उसमा कुनै निश्चित धारणा थिएन।

उसले समय व्यतीत गर्ने हेतुले अल्छी मान्दै वस्त्रखण्डले बेरेर राखेको महाभारतको पुस्तकको ठेली झिकी,– प्राचीनकालको इतिहास पढूँ भनेर। एकदुई पाता पढेपछि उसलाई अचानक अगाडि पढ्ने इच्छा भएन। ऊ टोलाएर बसिरही। उसले सम्झी,– 'छोड, मेरो सन्तान भएन।'

अनि उसले आफ्नो शरीरका उपर दृष्टिपात गरी – जीउ लाग्न नसकेको शरीर, सुकेको, खस्रो, चाउरिँदै गएको। उसले पेटलाई छोई; उक्सिन नसकेको, चिसो, निभेको अगेनो जस्तो। अरूहरू त कति सहजै गर्भधारण गर्छन्, ऊ आफू किन बन्ध्या भएकी ? कुन पाप उसको शरीरले बेहोर्नुपरेको यो ?

एकपटक सोमदत्तले एउटा ग्रन्थमा देखाएको थियो,– 'पापी नारी बन्ध्या भएर जन्मिन्छे।' सोमदत्तको पाठ-स्वरमा लेश मात्र पनि कटुता थिएन, तर पाठको वाक्य कस्तो कालो विषमा डुबेको उनले खोजेर झिकेका थिए। किन त्यसरी सोमदत्त आफूलाई उच्च स्थानमा राखेर पुलोमातिर तिरस्कारको दृष्टिले हेर्छन् ? के उनको आफ्नै पापको परिणाम हुन सक्दैन र उनीहरूको विवाहको निष्फलता ? हो, पुरुष निश्चय नै श्रेष्ठ हो तर त्यसैले झन् आफ्नो पापले स्त्रीलाई पुछेर दोषी बनाइदिन्छ ऊ।

मनलाई नियन्त्रणमा राख्न पुलोमा फेरि आफूअगाडि उत्तानो परेर पल्टेको पुस्तक पढ्न थाली। तर पुस्तकमा लेश मात्र पनि ध्यान जान सकेन। पुस्तकको पत्र त्यही ठाउँमा उघ्रेको थियो जहाँ मेनकाले विश्वामित्रको तपस्या भङ्ग गरेको वृत्तान्त वर्णित थियो। त्यत्रा-त्यत्रा ऋषिहरूको तपस्या पनि कति छिटै भङ्ग भएको होला ? पुलोमाको मस्तिष्कमा एकपल्ट यस्तो विचार आयो,– 'यतै कतै त्यो प्राचीनकालीन प्रणयलीला

भएको हुँदो हो, कौशिकीतटमा।' एकक्षणका लागि पुलोमा सचेष्ट भई। उसले सोची,– 'पुराणहरूमा धेरैजसो पुरुषहरू नै मोहित भएर स्त्रीको वशमा भएका छन्। तर त्यस्ती स्त्रीको वर्णन कतै पनि त पाईदैन जो सहजमै पुरुषबाट मोहित भएर मर्यादाच्युत भएकी होस्। तर किन छैन र ? छन् त्यस्ता पनि छन्, अहल्या के हुन् त ?'

त्यसै बेला स्मृतिको सुदूरताबाट पुलोमालाई भिल्ल केटाले बोलाएको स्वर सुनेजस्तो लाग्यो,– 'पुलोमा ! ए पुलोमा !!' यस्तै हुन्थ्यो गाउँमा। ऊ पाठ्यपुस्तक लिएर बस्थी। बाहिर घरपछाडि आएर भिल्ल केटो उसलाई बिस्तारो बोलाउँथ्यो, र त्यो स्वर सुन्नासाथ उसको ध्यान पुस्तकबाट हट्थ्यो। ऊ मुन्टो उठाउँथी र घरबाहिर खेतबगैंचालाई हेर्थी, तर फेरि आमाको डरले पुस्तकमाथि मुन्टो गाडेर हेर्दै बसिरहन्थी। ऊ पटक्कै पढ्न सक्दिनथी एकछिनसम्म। अहिले पनि बोलाएझैं लागेर उसले ढोकाबाहिर हेरी उत्सुकताले। तृतीय प्रहरको बतासले एउटा उदास ध्वनि सुसेलिरहेको थियो जङ्गलको अन्तर-कुन्तरभित्र बगेर, भिल्ल केटोले कतै टाढा सुसेलेजस्तो ध्वनि थियो– स् स् स्–स् स् स्।

उसले सम्झी, अब एकछिनपछि साँझ पर्छ। वनप्रान्तमा साँझ पर्नेबित्तिकै एकैपटक झमक्क रात पर्छ। ऊ अल्छी मान्दै उठी। सन्ध्याका लागि दियो ठीक पारेर ऊ फेरि कोठामा आई। गोशालाबाट कपिलाले बाँ: गरेर कराई। 'चरेर फर्किछन् कपिला।'

'आज कहाँ गएछन् सोमदत्त ब्राह्मण ?'

साँझ परेपछि उसले दियो बाली। उसको मस्तिष्कमा अगि भर्खरै उम्रिएका मेनकाविश्वामित्र र अहल्या आदिका कुरा अझसम्म पनि टाँस्सिएर अडेकै थिए। महाभारत थन्क्याएर उसले रामायण झिकी, र पढ्न लागी,–

"तस्यान्तरं विदित्वा च सहस्राक्षः शचीपतिः।

मुनिभेषधरो भूत्वा अहल्यामिदमब्रवीत्॥"

उसले मनमनै भनी,– 'शचीपति इन्द्र मुनिको भेष धरेर प्रोषितभर्तृकाका साथ रमण गरे। असम्भव आख्यान हो यो पुराणको। मोहाच्छन्न नै नभईकन कुनै नारीद्वारा यस्तो भ्रम हुन सक्दैन– हुनै सक्दैन। कविले पछि प्रसङ्गमा अहल्याले इन्द्रलाई चिन्नेको देखाएको छ, यदि त्यही हो भने इन्द्रले छद्मभेष किन धारण गर्नुपर्‍यो ?'

पुलोमाले अत्यन्त आश्चर्य मानेर सोची,– 'विनाप्रयोजन यस्ता विचार किन आइरहेका छन् मेरो मस्तिष्कमा ?' अगि-अगि पनि कैयौं पटक उसले यी ग्रन्थहरूको पारायण गरेकी हो। पहिले कहिल्यै पनि त यी उपाख्यानहरू यस्तो मानवीय र तात्कालिक अर्थयुक्त उसलाई लागेनन्। शुष्क ताडपत्रमा लेखिएका चिसा अक्षर आज किन यसरी जाग्रत् भएजस्ता लाग्छन् ? मानौं, कुनै ठूलो मानव-अनुभवको उष्णताले स्पन्दित हुँदैछन्।

पुलोमालाई लाग्यो,– 'आलस्य र अप्रत्याशित अवकाशले उसको मन चञ्चल हुँदैछ। जीवनपर्यन्तको नियम-निष्ठामा पनि मनको केही अंश बन्धनमुक्त रहिरहेको छ। यो उचित होइन, यो उचित होइन !'

एकपटक उसको शरीर काँप्यो। डरको चिसो पसेजस्तो लाग्यो उसलाई। उसले वस्त्रखण्डले धर्मग्रन्थहरू बाँधेर छानामा भुन्ड्याई, अनि सुत्ने उपक्रममा लागी। तर आँखामा लेश मात्र पनि निद्रा थिएन। वनमा रात्रिका असङ्ख्य जीवहरूको ध्वनिले आफ्नो छुट्टै दुनियाँ बनाइरहेको थियो। आज पुलोमा यो आश्रममा एक्लै रात बिताइरहेकी छे। हृदयको कुनै गहिरो अनकण्टारबाट उठेको भयको सञ्चारले उसको शरीरलाई चिसो पारिदियो। ऊ जीउलाई टक्टक्याउँथी; शरीर सिरिङ्ग-सिरिङ्ग गरेर काँपेजस्तो हुन्थ्यो। र फेरि एकछिनपछि स्वस्थ भएर ऊ आटव्यको अस्पष्ट ध्वनिलाई सुन्न लाग्थी, र उसलाई लाग्थ्यो, उसको हृदयान्तरको भयको कम्पन र बाहिर रात्रिको अन्धकारमा डुबेको वनमा अस्पष्ट ध्वनिहरू मिसिएर एउटै हुन गएका छन्– बाहिरको ध्वनि उसको हृदयमा पस्दैछ, र भित्रको भय कालो अन्धकार भएर जगत्भरि फैलिन पुगेको छ। ऊ फेरि मनलाई दृढ पारेर कान थाप्थी। उसलाई लाग्थ्यो, अन्धकारको भय कुनै रूप धारण गरेर आउँदैछ उसका प्रति आकर्षित हुँदै। ढुकढुक गरिरहेको मुटु लिएर ऊ त्यसको प्रतीक्षामा बसेकी जस्ती हुन्थी। त्यसै बेला एउटा पक्षी नजिकैको वृक्षबाट करायो, त्यसको चीत्कार सारा वनप्रान्तमा लहरिँदै गयो। टाढा पहाडमा पनि त्यो प्रतिध्वनि भयो। पुलोमालाई त्यो ध्वनि बालककालको एउटा परिचित ध्वनिजस्तो लाग्यो,– आफ्नो घरपछाडि लुकेर बसेको भिल्लकिशोरले बिस्तारै सुसेलेर बोलाएजस्तो– 'पुलोमा ! ए पुलोमा !!'

पुलोमाले सम्झी,– 'गाउँबाट यता लाग्दा त्यो भिल्लकिशोरसँग अन्तिम भेट भएको थियो। खोलानिर ऊ छुट्टै उभिएको थियो, एक्लै पर्खेर बसेको, हातमा जामुन र पाकेको कदमको फल पातको दुनोमा लिएर। उसलाई थाहा थियो बर्सातका यी जङ्गली फलहरू मलाई मन पर्थे। ऊ रूखमा चढेर हाँगा हल्लाउँदै जामुन झार्थ्यो। म तल बसेर झरेका फल टिप्थें। पछि आमाले मलाई बाहिर जानै रोकिदिनुभयो। त्यो बिदा हुने बेलामा आमाले उसलाई हकार्नुभयो,– पर्दैन त्यो फल दिन, जा।– मैले निराश भएर उसलाई हेरिरहें। बाले भन्नुभयो,– के भयो त, फलमा के दोष छ र ? पुलोमा ! लेऊ त्यो फल, लिए हुन्छ।– जामुन र कदमका फल मेरो अँजुलीमा राखेर ऊ त्यहीं उभिरह्यो। उसलाई त्यहीं, बाटोको छेउमै, उभिएको छाडेर हामी हिंड्यौं। टाढा पुगेपछि रूखका झ्याडले उसलाई सदाका लागि छोप्पिनुभन्दा पहिले एकपल्ट मैले उसलाई फर्केर हेरेकी थिएँ। टाढा कालो टाटोजस्तो ऊ उभिरहेको थियो। अस्ताउन लागेको सूर्यको किरणले त्यसको कटि र ग्रीवामा लाएका कौडी र सिपीका माला टल्किएका थिए।'

यस्ता पुराना कुरा सोच्दासोच्दै पुलोमा एकछिन तन्द्रामा लट्ठिई। असंलग्न चित्रहरू उसको मस्तिष्कमा आइरहेका थिए:– विश्वामित्र, मेनका, अहल्या, भिल्लकिशोर। दियोको पहेंलो ज्योतिले कोठाको एउटा सानो भागलाई पीतआभामा प्रकाशित गरिरहेको थियो– बाहिरको निर्जन निस्तब्धतामा वन्य पशु-पक्षीहरूको चीत्कारको सम्मिलित गुञ्जन।

तत्क्षण पुलोमालाई भान भयो,– कोठाको द्वारभन्दा बाहिरको अन्धकारबाट कोही प्रकट भयो– प्रचण्ड वेगका साथ। उसको मनमा भयको सञ्चार भयो, अङ्ग-अङ्गमा चिसो कम्पन चलमलायो। उसलाई लाग्यो, वनको चिल्लो अन्धकारको डल्लो प्रबल वेगका साथ हुर्रिंदै उसको कोठाभित्र पस्यो। पुलोमाको कण्ठबाट ठूलो चीत्कार निस्कियो। दीपको क्षीण प्रकाशमा त्यो भयङ्कर रुद्ररूप प्रकट भएको देखेर एकपटक बीभत्स स्वरमा पुलोमा चिच्च्याई,– "भिल्लयुवक !"

त्यसपछि त्यो कालो छायाले पुलोमाको सर्वाङ्गलाई ढाकिदियो। उसले अन्धकारबाहेक अरू केही देखिन। एउटा उत्तप्त शरीर उग्र वेगका साथ पुलोमाका उपर खसेको थियो उसलाई किच्दै। त्यसको उष्ण निःश्वासले पुलोमाको मुख भतभती पोल्न लाग्यो। त्रास, पीडा र आनन्दको अनुभव एकैसाथ भयो उसलाई;– र अनि कालो आनन्दको विस्मृति, मृत्युको जस्तो, उसले सुनेझैं लाग्यो कानैनिर एउटा उच्छ्वसित वाणी,– "सुम्निमा ! सुम्निमा !!"

भय र त्रासको प्रतिक्रियास्वरूप पुलोमाले त्यो कालो आकृतिलाई प्रबल शक्तिका साथ अँठ्याई र स्वाँस्वाँ गर्दै खण्डित स्वरमा भनी,– "भिल्लयुवक ! भिल्ल !!"

त्योभन्दा कालो रात कहिले पनि भएन, त्योभन्दा भयपूर्ण घडी फेरि कहिले पनि आएन; त्यस बेलाको जस्तो पीडा उसले कहिले पनि पाइन। लाग्थ्यो, ऊ मृत्युमा बारम्बार चुर्लुम्म-चुर्लुम्म डुब्दैछे। तर पनि त्यस्तो मृत्युलाई त्यस आग्रहका साथ कसैले अँठ्याएन होला। पुलोमालाई लाग्यो आज उसलाई फुत्किन दिन हुन्न; आफ्नो आलिङ्गनबाट आज यो मृत्युलाई निस्किन दिन हुन्न। पीडा र आनन्दको एकसाथको भोगमा परेर ऊ साउतीको सीत्कारमा भन्दै थी,– "अह् अह् भिल्ल, अह्-अह् !" उसलाई लाग्यो कि उसको कानैनिर सारा वन-प्रान्त निःश्वसित भएर बुदबुदाइरहेछ वाष्पध्वनिमा,– "सुम्निमा ! सुम्निमा !!"

X X X

भोलिपल्ट बिहान जब सोमदत्तको आँखा उघ्रियो, उसलाई लाग्यो, उसका आँखा मात्र जागेका छन् शरीरचाहिं रात्रिको भोगविलासमा अझै निमग्न छ। सुती-सुती उसले कोठाको चारैतिर दृष्टि फाल्यो। सूर्यको बालकिरणको पीतआभा आँखीझ्यालबाट पसेर कोठामा जीवन-सञ्चार गरिरहेको थियो, उज्यालो छरेर। त्यो पीतआभाले उसलाई सुम्निमाको सम्झना गरायो। सुम्निमाको शरीर पनि सुवर्णकेंवराजस्तै पहेंलो छ। हिजो राति कुटीभित्र प्रवेश गर्दा यस्तै आभामय लागेको थियो दीप-प्रकाशमा यो कोठा। अनि सोमदत्तले पुलोमालाई सम्झ्यो, उसकै पार्श्वमा ऊ निश्चिन्त भएर अझै निदाएकी नै थी। हिजो रातिको क्षीण दीपको पहेंलो उज्यालोमा पुलोमा पनि पीतआभायुक्त भएकी थी। सोमदत्तलाई पहेंलो वर्ण नै सबभन्दा राम्रो लाग्यो। उसले मनमनै भन्यो,– 'सुम्निमाको शरीरको वर्ण पनि ठिक्क यस्तै छ, अहिलेको प्रातःकालीन सूर्यकिरणको रङ्गजस्तै, हलुका पहेंलो।' सोमदत्तलाई उठ्ने जाँगर थिएन। शरीरको थकाइ मीठो थियो,

आलस्य पनि विलासमय। पुलोमाले आलस्य मानेर एकपटक आङ तानी र निद्रैमा दीर्घनिःश्वास लिएर कोल्टे फर्की। उसको हात सोमदत्तको छातीमा पऱ्यो र तिघ्रा उसको जीउसँग टाँस्सिन पुग्यो। सोमदत्त उत्तानो परेर चुपचाप सुतिरह्यो। पुलोमा फेरि निश्चिन्त भएर सुती, निद्रामा उसको एकनासे श्वास चल्न थाल्यो। त्यसरी अचल भएर लेटिरहेको सोमदत्तलाई अप्ठचारो लाग्यो, उसलाई कम्मरमा कुनै वस्तु बिभिरहेजस्तो लाग्यो। उसले सम्भ्यो,– कौडीको कन्दनी थिचिएर उसको कम्मरमा बिभाइरहेको छ। उसले विस्तारै आफ्नो छातीबाट पुलोमाको हात भिक्यो र उठेर बस्यो। कोठाको चारैतिर उसको कन्दनी चुँडिएर त्यसका कौडी छरिएका थिए। मयूरपङ्खी मुकुट पनि किचिएर सिरानमुनि खसेको थियो, खाली भएको दियो भित्तानिर घोप्टिएको थियो र भूईंमा तेलको कालो र बाक्लो सुकिसकेको टाटो परेको थियो। पुलोमाको सिरानीलाई उसले राम्ररी मिलाइदियो र फालिएको बर्को शरीरमा राम्ररी ओढाइदियो। अनि छरिएका कौडा र मयूरपङ्खहरू टिपेर ऊ कुटीबाहिर आयो। बाहिरको शीतल, स्वच्छ बतास र प्रभातकालीन दृश्यले उसको हृदय पुलकित भयो, शरीर हलुको भएको बोध भयो र मन रमायो। उसले कमण्डलु टिप्यो, छानामा भुन्ड्याएको मृगचर्म भिक्यो र स्नानार्थ ऊ कौशिकी नदीतटतिर लाग्यो। प्रभातको शीतल समीरले उसको शरीरमा हलुका कुतकुती उत्पन्न गराइरहेको थियो। वनका पक्षीहरू विविध स्वरमा चिरिबिरी गरिरहेका थिए। चराहरूको कलरवमा यतिविघ्न मिठास हुँदो रहेछ भन्ने सोमदत्तलाई आज मात्रै थाहा भयो। उसलाई लाग्यो,– आजभन्दा पहिले उसले चराको बोली नै सुनेको थिएन।

कौशिकीतटमा पुगेर सबभन्दा पहिले सोमदत्तले पानीमा आफ्नो भिल्ल रूपको दर्शन गऱ्यो। आफ्नो अनुहार देखेर ऊ हाँस्यो। र तत्क्षण उसलाई लाग्यो,– ऊ जीवनमा पहिलो पटक हाँसिरहेको छ आज। त्यसपछि एक-एक गरेर उसले आफ्नो भिल्ल रूपको शृङ्गार-सज्जालाई नदीमा फ्याँक्न थाल्यो। कौडीका मालाहरू पानीमा एउटा सानो चप्पको स्वरका साथ डुब्थे। मयूरपङ्खचाहिं जलको प्रवाहमा धेरै टाढासम्म बग्दै जान्थे, सूर्यको प्रकाशमा टल्किँदै। त्यस दिन सोमदत्तलाई स्नान गर्दा अत्यन्त रमाइलो लाग्यो। ऊ धेरैबेरसम्म पानीमा खेलिरह्यो। अनि ऊ सदाकै जस्तो स्नानादि क्रिया सिध्याएर सन्ध्याजप गर्न भनी कुशासनमा बस्यो।

उता पुलोमा पनि केही बेरपछि उठी। उठ्नासाथ उसले स्पष्टरूपले केही कुरा बुझ्न सकिन, केवल मनभित्र कहाँ हो कहाँ रमाइलो भइरहेझैं लागिरह्यो, कुनै मीठो सपनाको रमाइलोपनको प्रभाव जागिसक्दा पनि भइरहेजस्तै लाग्यो। एकछिनपछि ऊ पूर्णरूपले संज्ञावती भई; अनि रातिको घटनालाई सम्भिन लागी। मातापिताका साथ गाउँमा छँदा जुन भिल्ल केटोसँग उसको मैत्री थियो, त्यसैको मधुर सम्भना मात्र भइरह्यो उसलाई। त्यही स्मृतिको आनन्दमा विभोर भएर उसले आँखा चिम्ली मानों आँखा थुनेर ऊ रातिको अनुभवलाई दोहोऱ्याएर भोग गर्न खोजिरहेकी छे। तर त्यसरी कति बेरसम्म ऊ बिहानको आलस्यको विलासमा लट्ठिरहन सक्छे र ? उसले उठ्नैपर्छ,

नउठी सुख छैन। ओठलाई चुच्चो गोलाकार बनाएर उसले मधुरो स्वरमा भनी,– "भिल्लयुवक।" एकपटक उसले चारैतिर पल्याकपुलुक भिल्ललाई खोजी। तर कहाँ थियो र त्यहाँ त्यो भिल्लयुवक! ऊ पो कोठामा एक्लै छे, एकदम एक्ली। 'कहाँ गयो त्यो भिल्ल ?' यसरी कोठाको दृश्यलाई हृदयङ्गम गर्दागर्दै उसलाई झल्याँस्स सोमदत्तको सम्झना भयो, 'उनी त हिजो बिहानैदेखि बेपत्ता छन्।' उसलाई हठात् अत्याहट भयो,– 'सोमदत्तले देखे भने–कोठाको यो दृश्य उनले हेरे भने ?'

पुलोमा हतारिएर उठी। मालाबाट चुँडिएका कौडाहरू सिरानीमा, गुन्द्रीमा र कोठाका कुनाकाप्चातिर अझै छँदै थिए। मयूरपङ्खका सानासाना झुत्लाहरू पनि कोठामा यताउति टल्किरहेका थिए। उसले पहिरिएको लुगा फुस्केको थियो। त्यसलाई कम्मरमा बाँधेर लुगा तानतुन पार्दै ऊ उठी र भूईंका झुत्ला र कौडाहरू टिप्न लागी। भित्तातिर घोप्टिएको दियोलाई सोझो पारी; अनि ऊ हतारिएर बाहिर आई र चारैतिर राम्ररी हेरी; उसको मन ढुक्क भयो। सोमदत्त फर्केको कतै कुनै चिह्न थिएन। तर उत्तिखेरै उसको दृष्टि पऱ्यो मृगचर्म झुन्ड्याउने गरेको ठाउँमा। त्यहाँ मृगचर्म नदेखेर उसलाई शङ्का भयो,– 'के सोमदत्त फर्केर आइसके ? नत्र, मृगचर्म कहाँ गयो त ?' उसको मुटु ढुकढुक गर्न थाल्यो। दुगुर्दै ऊ गोठपछाडितिर गई र हातैले एउटा सानो खाडल खनेर उसले कौडी र मयूरका प्वाँखहरूलाई त्यसमा पुरिदिई। त्यसै बेला गोठमा गाईले बाँः गरी, तर पुलोमाको ध्यान त्यतापट्टि थिएन। ऊ व्यग्र चिन्ताका साथ सोमदत्तको सम्झनामा एकाग्र थी। घरी-घरी उसको मन घबडाएर प्रश्न गर्थ्यो,– 'तिनी राति नै त फर्केनन् ?'

यस्तै चिन्ता र विकलताका साथ पुलोमा पनि नुहाउन कोशीतटमा पुगी। मनमा व्यग्रता भए पनि उसको शरीरमा असाधारण स्फूर्ति र अज्ञात प्रसन्नता थियो। सूर्यतर्फ मुख फर्काएर ध्यानमग्न भई अचल बसेको सोमदत्तलाई देखेर पुलोमाका हलुकासँग चलिरहेका गोडा लज्जाले अचानक भारी भए। ऊ धरतीमै गाडिएजस्ती भई। उसका गोडा अगाडि बढ्न सकेनन्। पुलोमालाई लाग्यो, सोमदत्तको अनुहारमा आज असाधारण दीप्ति छ; सूर्यको प्रकाश परेर त झन् उनको मुहुडा ऐश्वर्यमय भएको छ। त्यस्ता तापसी ब्राह्मणकी पत्नीको कुलटा आचरणलाई सम्झेर पुलोमाले आफूलाई धिक्कारी,–'हे भगवान्! किन मलाई यो पापमा बेऱ्यौ ? म किन आफ्नो तपस्वी पतिजस्तो हुन सकिनँ ?'

पुलोमाको पयरको शब्द सुनेर सोमदत्तले आँखा उघाऱ्यो। उसका नेत्रमा स्नेह र करुणाको ज्योति थियो। त्यस्तो प्रेममय दृष्टिले उसले पुलोमालाई कहिल्यै पनि हेरेको थिएन। झन् यता त उसको आग्रहहीन दृष्टिमा तिरस्कार र वैरभाव मात्र रहन थालेका थिए। अहिले पतिको त्यो सुकुमार दृष्टि आफ्ना उपर परेकाले पुलोमा आश्वस्त भई। उसले मनमनै भनी,– 'सोमदत्तले केही पनि थाहा पाएका रहेनछन्।'

सहसा उसलाई तीव्र आनन्दको उद्रेक भयो। नुहाउन भनेर ऊ पानीमा पसी। नदीको शीतल जलले शरीरको सारा व्यथा हरेर लगेजस्तो भयो उसलाई। मानौं पत्रैपत्र

परेर रहेको जीवनको ताप पखालियो। उसको मन पुलकित भयो। क्षणक्षण उसलाई भिल्लयुवकको सम्झना हुन थाल्यो। जलको शीतल स्पर्शले उसलाई लाग्यो, उसको शरीर फुर्फुरिरहेको छ आनन्द मानेर, कहाँ होला भिल्ल अहिले ? रात्रिको कति प्रहर बितेपछि गयो होला ऊ कुटीबाट ? नदीभित्र पानीमा डुबेर सदाको जस्तो स्नान गर्दा उसलाई यस्तो आनन्दको र उल्लासको अनुभव पहिले कहिल्यै भएको थिएन। उसलाई लाग्यो, उसका शरीरका रोम-रोममा आनन्दको स्पन्दन भइरहेको छ। पूर्ववर्ती तट जहाँ ऊ नुहाइरहेकी थी, अरूभन्दा उच्च भूमि हुनाले प्रभातको शीतल छाया अझ बाँकी नै थियो, तर पश्चिमतिरको तटलाई सूर्यका किरणले उज्यालो पारिसकेको थियो। त्यसतिरका बालुवाकण र ढुङ्गाहरू प्रकाशमा टल्किन थालिसकेका थिए। माटो, बालुवा र साना मसिना ढुङ्गाहरूका पत्रैपत्र परेको त्यो उच्चा तटबन्धभन्दा माथिको विस्तृत वन-प्रदेशभित्र दिनको चहलपहल प्रारम्भ भइसकेको थियो। त्यताबाट कुनै पक्षीको एकोहोरो स्वरप्रलाप आइरहेको थियो। पुलोमाको मर्ममा त्यो स्वर ध्वनित भयो। ऊ पुलकित भई। जलमा डुबेको उसको नग्नदेहमा कोशीको हलुको दक्षिणवाहिनी प्रवाहले एक प्रकारको आनन्ददायी कुतकुती उत्पन्न गर्दै गयो। निहुरिएर उसले आफ्नो शरीरलाई हेरी। छिप्पिएको शरीर किञ्चित् ढल्न खोजेको, तर आज पुलोमालाई आफ्नो शरीरको अत्यन्त ममता लाग्यो। मायाको अर्थहीन चेष्टामा उसले बगिरहेको पानीलाई अँगाली। यो रित्तो चेष्टामा पनि उसलाई असाध्य रमाइलो लाग्यो, मानो पूर्ण सजग चेतनाका साथ ऊ स्वप्नको रमाइलोपनको अनुभव गरिरहेकी छे। उसले मनमनै भनी,– 'कहाँ होला त्यो भिल्लयुवक अहिले ?' रात्रिको चेतनालाई लुप्त पार्ने असहनीय आनन्दको सम्झनामा ऊ डुब्नै अटिकी थी। त्यसलाई कल्पनामा पुनरावृत्ति गर्ने त उसमा सामर्थ्य थिएन, तर त्यस विराट् अनुभवलाई जति पनि अहिले सम्झनाद्वारा टिप्न सक्थी त्यसलाई टिप्दै पुलोमा धेरैबेरसम्म आत्मविभोर भएर पानीमा नुहाइरही। उसले अरू सबै कुरा बिर्सी;– यो बिर्सी कि आश्रमनिकटको नदीतटमा ऊ स्नान गरिरहेकी छे, र आश्रमवासी पति त्यहीं नजिकै कुशासनका उपर सन्ध्यामा लीन छन्। त्यो बिहानको समयलाई नै उसले बिर्सी र आफू भएको कोशीप्रान्तलाई नै,– उसका चेतनाबाट वर्तमान एकदम लुप्त भयो। ऊ मोहित भएर सम्झिन थाली भिल्लयुवकका साना-साना कुराहरू। बीचबीचमा कुनै मधुर सङ्गीतको टेकजस्तो मनमा प्रश्न उठिरहन्थ्यो,– 'कहाँ होला अहिले त्यो युवक ?'

सोमदत्त कुशासनमा बसेर सधैंको जस्तो ध्यानमा लीन हुने चेष्टा गरिरहेको थियो, तर मन स्थिर थिएन, चञ्चल थियो; कुनै व्यथाले होइन केवल अनुभव अहिलेसम्म अप्राप्य भएको आनन्दले। उसको शरीरले प्राप्त गरेको अनुभवले चञ्चलता ल्याएको थियो। ईश्वराराधनामा केही गरेर पनि उसको मन एकाग्र हुन सकेको थिएन। क्षणक्षणमा उसको मन त्यसै फुरुङ्ङ-फुरुङ्ङ भएर रमाउँथ्यो। उसको मस्तिष्कमा हिजो दिनभरिका घटनाहरू एक-एक गरेर आइरहेका थिए। मनुवादह तस्वीरमा देखेजस्तो स्पष्ट, उसको दृष्टिको अगाडि अहिले पनि झलझल उपस्थित भइरहेको थियो। साँझ

पर्दानपर्दै उसमा उन्माद चढेको पनि सम्झना छ, जहाँ केवल स्पन्दित अन्धकारको महासागरमा देहयुक्त परमानन्दको ज्वारमाथि ज्वार आइरहेको थियो– पहेंलो-पहेंलो। त्यस अन्धकार र परमानन्दमा मिसिन पुगेको थियो त्यो पीतप्रकाश जसले सोमदत्तलाई बारबार सुम्निमाको सम्झना गराउँथ्यो। कुशासनका उपर बसेर केवल ध्यान गर्दा रात्रिको अनुभव पक्रिन खोज्दा घरीघरी सोमदत्तको हात पर्थ्यो सुम्निमाको तस्वीर मात्र,– सुनको मूर्ति प्राणवन्त भएकी किरातबाला सुम्निमा।

सोमदत्तले सम्झ्यो,– यही तटमा सुम्निमासँग उसको प्रथमबार भेट भएको थियो। एक-एक गरेर उसको मस्तिष्कमा सुम्निमाका विभिन्न भावहरूका चित्र नाच्न थाले। ऊ स्मृतिको प्रवाहमा भासिँदै गयो, भासिँदै गयो। वर्तमान उसका लागि लोप भइसकेको थियो। उसलाई एकरत्ति सुद्धि रहेन कि पुलोमा त्यहीं नजिकै कोशीको जलमा स्नान गरिरहेकी छे।

जब पुलोमा नुहाइवरी तटमा उक्ली, पतिको ध्यानमग्न अवस्था देखेर चकित हुँदै ऊ थामिई। भरखरैको उसको आनन्दमग्नता एकाएक लोप भयो। पानीबाट निस्केर हलुको गतिले ऊ आइरहेकी थी। पैतलामुनिको बालुवा थिच्चिएर किञ्चित् भासिन्थ्यो, र त्यसले उसको पैतलामा सुखको गुदगुदीको अनुभव हुँदै थियो। प्रत्येक पगमा त्यही सानो सुखलाई अनुभव गर्दै ऊ आइरहेकी थी, उसको दृष्टि अचल बसिरहेको सोमदत्तका उपर परेको थियो, ऊ थामिई; उसलाई हठात् ग्लानि भयो। पतिको एकाग्र ब्रह्मचिन्तनको मुद्रा लक्ष्य गरेर उसलाई लाग्यो,– सोमदत्त कति धर्मभीरु तथा ऋषितुल्य छन्। उनको तुलनामा आफू कति होची र पातकी। जीवनको यावत् धर्म आर्जन एउटा रात्रिको सानो अनुभवमा लुप्त भएर गयो। के ऊ एउटी साधारण कुलटा भइन र केवल एक रातको अनुभवले ? पुलोमाले मनमनै आत्मभर्त्सना गरी। उसलाई लाग्यो, सोमदत्तको तुलनामा ऊ तुच्छातितुच्छ छे। यो विचारले उसको मनमा पतिका प्रति ठूलो आदरभाव जाग्रत् भयो। आत्मग्लानिविभोर भएर उसले पतिका सामु घुँडा टेकी, र बिस्तारै स्नानार्द्र शिरलाई पतिका चरणमा राखिदिई।

सोमदत्तको ध्यान भङ्ग भयो। पत्नीको यस्तो अनौठो व्यवहारले उसको प्रसन्नता झन् बढ्यो। उसलाई लाग्यो, आजको परमप्राप्तिमा उदार हृदयताको अब सीमा नै छैन। उसले पुलोमाको शिरमा हात राख्दै भन्यो,– "कल्याणी ! भद्रे !!"

त्यो एउटा यस्तो क्षण थियो उनीहरूको जीवनमा कि उनीहरू दुवै हृदयको भावै बाहुल्यका साथ आपसमा अत्यन्त निकट भए। त्यति एउटा क्षणमा उनीहरूले पतिपत्नीको सीमाको छेउछाउमा पुगेर आपसको दाम्पत्यप्रेमको एकपटक दर्शन गरे। त्यो एकक्षणका लागि सोमदत्तले सुम्निमा र पुलोमाले भिल्लयुवकलाई मनमा नसम्झेर आपसमा पतिपत्नी भएर प्रेमको मधुर भावनाको अनुभव गरे। यो उनीहरूका निम्ति अत्यन्त नै अभिनव अनुभव थियो। सोमदत्तले अकारण नै स्नेहको स्वरमा पत्नीलाई सुकुमार सम्बोधन गर्‍यो,– "पुलोमा !" सम्बोधनको आफ्नै कोमल स्वर लक्ष्य गरेर

सोमदत्तलाई किञ्चित् अप्ठ्यारो लाग्यो। ऊ चुप्प भयो। उता पुलोमाले पतिको कोमलवाणीको सम्बोधनले चकित भएर सोमदत्ततिर हेरी। उसको मुखमण्डलमा स्नेहको दीप्ति थियो– एउटा चिल्लोपन। पुलोमाको हृदय पग्लियो। उसले पनि अत्यन्त आर्द्र स्वरमा भनी,– "पतिदेव !" तर हठात् उसलाई पनि आफ्नो आर्द्रता एकदम अस्वाभाविक लाग्यो, यस्तो कि अहिलेसम्म उनीहरूका बीच त्यस्तो कहिले पनि भएको थिएन। अप्ठ्यारो मानेर ऊ पनि चुप्प लागी।

आपसी भावनाले गद्गद हुँदै सोमदत्त र पुलोमा कुटीमा फर्केर आए। दिन धेरै माथि चढिसकेको थियो। यद्यपि यज्ञवेला बितिसकेको थियो र उनीहरूलाई यज्ञ गर्ने कुनै उत्साह पनि थिएन,– तैपनि दैनिक नियम भङ्ग गर्ने इच्छा उनीहरूले गरेनन्। सदाको जस्तो उनीहरूले यज्ञ गरे, दुवैलाई त्यसमा केही रुचि थिएन। दिउँसो भोजन गरेपछि एकछिन सानासाना साधारण किसिमका कुरा भइरहे धर्मग्रन्थका विषयहरूमा। सोमदत्त विश्राम गर्न चाहन्थ्यो। उसले भन्यो,– "अब तिमी पनि केहीछिन विश्राम गर्न जाऊ।"

पुलोमा पनि आफ्नो कुटीकक्षमा एक्लै बस्न चाहन्थी। पतिको आदेश सुन्नासाथ ऊ आफ्नो कक्षमा गई। दुवै आफ्-आफ्नो ओछ्यानमा पल्टिएर रात्रिको घटनालाई सम्झिन थाले, आफ्नो एक्लो एकान्तको प्राप्तिजस्तो, अरूहरूका आँखाबाट जोगाएर राखेको धनलाई कृपणले गाडेको ठाउँबाट झिकेर हेरेजस्तो। सोमदत्तलाई त थाहा थियो रातभरि उन्मादमा उसले सुम्निमा सम्झेर अँगालिराखेकी अरू कोही थिइन् उसकी पत्नी पुलोमाबाहेक। तर उन्मादको भ्रम पनि, त्यस अवसरको अनुभव र प्राप्तिले गर्दा, यथार्थभन्दा पनि अधिक सत्यजस्तो लागिरहेको थियो उसलाई। यौन-आनन्दसँग ब्रह्मानन्दको तुलना भएको छ कुनै-कुनै धर्मग्रन्थहरूमा। पछि, ब्रह्मानन्दको अनुभवबाट, पुनः साधारण जीवनस्थितिमा प्राप्त भएपछि पनि त्यस आनन्दको अनुभव स्थूल दैनिक जीवनको यथार्थताभन्दा गहकिलो र अधिक सत्ययुक्त हुन्छ भन्छन् त्यस्ता आत्मदर्शीहरू। सोमदत्त सोच्दछ,– 'मेरो हिजो रातिको अनुभव उन्मादजन्य त होला, तर निश्चय नै त्यस्तो उन्माद साधारण विक्षिप्तता थिएन जसले परिणाममा व्यक्तित्वको क्रमशः ह्रास गराउँदै लग्छ। मेरो विक्षिप्तता त जीवनदायिनी थियो जसको अनुभूति रात बिताउँदा, लाग्छ, मेरो व्यक्तित्व झन् विकसित हुन गएको छ। मेरो जीवन र चेतनाको स्तर त्यो अनुभवले झन् उच्चतर भएको छ।'

सोमदत्तले मनमनै भन्यो,– 'फेरि मेरो कुनै पापकर्म पनि त भएन। उन्मादमा पनि' भ्रमको तीव्रतामा पनि, पतिपत्नीको समागम नै भयो, पापकर्म भएन। बिचरी पुलोमालाई वास्तविक सत्यको ज्ञान हुन पाएन, र ऊचाहिं पापबोधले पीडित होली।

यस प्रकारको विलासमय चिन्तनमा ऊ डुबिरह्यो। हलुको तन्द्राको लट्ठ्याइले उसका आँखा झमझम हुन थाले। हिजो दिउँसोको परिश्रम र रात्रिको अनुभवले क्लान्त भएको थियो उसको शरीर। मनमा कुरा खेलाउँदा-खेलाउँदै ऊ भुसुक्क निदायो।

पुलोमा आफ्नो कोठामा आउँदा उसले बिहान जुन स्थितिमा छाडेकी थी त्यही स्थितिमा थियो उसको कोठा। कोठाभित्र पस्नासाथ उसको समग्र चेतनालाई एक्कैपटक आक्रमण गरेजस्तो गरी हिजो रातिको घटना र निस्सासिने घडीको सम्झनाले उसलाई छोप्यो। उसलाई लाग्यो, कोठाभित्र ती यावत् कुरा मानौं रगमगाइरहेका छन्। ऊ शिथिल भएजस्ती भई। गुन्द्रीमा थ्याच्च बसेर बिस्तार–बिस्तार शरीर ढाल्दै उसले सिरानीउपर शिर राखी। अनि मनमनै भनी,– 'पाप-पुण्य, चाहे जेसुकै भएको होस् हिजो, तर आज म हिजोकी पुलोमा कदापि रहिनँ। त्यो अनुभवले मलाई अर्कै नारीमा परिणत गरिदिएको छ; केवल मेरो भावजगत्मा मात्र होइन, मेरो शरीरको रगरगमा नयाँपनको सृष्टि हुँदैछ। पुरुषलाई कुन्नि कस्तो हुन्छ यौन-अनुभव, यदि सार्थक त्यो हुन गयो भने, तर नारीका लागि त्यस घडीदेखि नयाँ जीवन प्रारम्भ हुन्छ उसको। भगवान्ले चाहेका छन् भने सम्भवतः सन्तानरचनाको क्रियामा म लागिसकिहुँली।'

पुलोमाले आफ्नो हात हलुकासँग पेटमा राखी। उसले सोमदत्तलाई सम्झी कि 'हाय ! म यो महान् अनुभवको साँझमा उनलाई सम्मिलित गर्न सक्दिनँ। मेरो यो उपलब्धि नितान्त एक्लो हुने भयो।' यस प्रकारको चिन्तन गर्दागर्दै ऊ पनि लट्ठिँदै गई। एकपटक उसले आफ्नो भाग्यको सराहनासमेत गरी; भनी,– 'ईश्वरले मेरो रक्षा गर्न सोमदत्तलाई अज्ञानमा राखे।' अनि एकछिनपछि ऊ भुसुक्क निदाई। उनीहरू धेरैबेरसम्म सुतिरहे। उठ्दा साँझ परिसकेको थियो।

भोलिपल्टदेखि उनीहरूको जीवन सदाको जस्तो नियमबद्ध चल्न थाल्यो। धार्मिक अनुष्ठान, यज्ञादि कार्यहरूमा कुनै व्यतिक्रम आएन। उनीहरू आपसी जीवनमा कहिले पनि शारीरिक सम्बन्धको आकर्षणले बाँधिएनन्,– त्यसो हुँदा सँगसँगै निवास गरे पनि उनीहरू बेग्लाबेग्लै बसेका जस्ता थिए। उनीहरूलाई त्यस रातको अनुभवले, उनीहरूको व्यक्तिगत जीवनलाई जरैदेखि हल्लाइदिएको भए तापनि, दृढतापूर्वक गठित भइसकेको स्वभावले गर्दा पुनः उनीहरूको आफ्‌आफ्नो व्यक्तिगत जीवनको रथ स्वभावको गहिरो डोबमा लागेर हिंड्न थाल्यो। तर के अब उनीहरू पहिलेको जस्तो निश्चिन्ततासँग दैनिक कार्य सम्पादन गर्दै जीवनयापन गर्न आउँथे र ? बाहिर देख्दा आश्रमको दैनिक नियम तथा निष्ठाचारमा कुनै फरक परेको थिएन, तर त्यसमा निवास गर्ने दुई प्राण– स्त्री र पुरुषको अन्तर्जगत्मा महान् उथलपुथल आएको थियो। आपसी सम्बन्धको पुरानो आधार, जो लामो सहवासको स्वभावले– त्यसमा हार्दिक आकर्षणशून्य भए तापनि र पतिपत्नीको धार्मिक उद्देश्यमाथिको आस्थाले निर्मित भएको थियो, अब समाप्त भइसकेको थियो। तर त्यसको ठाउँमा उनीहरूले सम्बन्धको अर्को कुनै आधार भेट्टाएका थिएनन्। तसर्थ, उनीहरूको स्थिति बहुतै विचित्र र अप्ठ्यारोमा परेर आपसमा तर्केर बस्न थाले। जहाँ पहिले एकान्तसेवनमा भयावह नीरसताको बोध हुन्थ्यो अब त्यहाँ उनीहरूलाई आफआफ्नो कोठामा एक्लै बस्दा अनुभवको परिपूर्णताको बोध हुन थाल्यो। उनीहरूले बुझ्न थाले कि एकान्तता रिक्तता होइन किनकि त्यस बेला अनुभवको तोडले

शरीर र मन अझै काँपिरहेजस्तो हुन्थ्यो। यही कारण थियो कि उनीहरू गौका पाउनेबित्तिकै आफ्‌आफ्नो कोठामा आएर बस्ने गर्थे, एकान्तमा शान्ति पाउँला भनेर होइन। एक त, एकान्तमा निर्बाध सुखको एक्लौटी भोग गर्न पाइन्थ्यो, र अर्को नयाँ स्थितिमा आफ्नो स्थान प्राप्त गर्नका लागि प्रयत्न गर्न सकिन्थ्यो, भाव र उत्तेजनामय विचारहरूको विशृङ्खलतामा भनेका कुराहरूलाई केलाएर तिनमा तारतम्य ल्याउनका लागि छरिएका शृङ्खलालाई एकएक गरेर टिप्दै। एउटा कुराचाहिँ निश्चित थियो, अनुभवको एक झोक्मा, उनीहरूले विचारको जुन प्रासाद खडा गरेका थिए र जसभित्र निवास गरेर उनीहरूलाई जुन निरापदताको भान भइरहेथ्यो, त्यो अकस्मात् धराशायी भयो।

तर जीवनपर्यन्त जुन कुरालाई उनीहरूले सत्य भनेर मानिआएका थिए त्यसको विनाशका खण्डहरू आँखासामुन्ने नै भए तापनि स्वभावले गर्दा उनीहरू त्यसलाई स्वीकार गर्न प्रस्तुत थिएनन्। त्यसो हुनाले उनीहरूको मन-हृदयभित्र भयानक अन्धवेग मच्चिरहेको थियो। अनुभव कि आस्था कुन वस्तु मिथ्या हो ? अनुभव, आफूलाई परिआएको, आफूले भोगेको कि चिन्तनको आधारमा खडा गरेको परिकल्पित विश्वास ? कुन सत्य हो इन्द्रियजन्य भोग कि बुद्धिजन्य वैचारिक निष्कर्ष ? के इन्द्रियले सदा सत्यानुभूति मात्र गराउँछ र ? मृगमरीचिका के दृष्टीन्द्रियदोष होइन र ? हो, बुद्धि पनि तर्कमूलक भएकोले गणितन्यायअनुसार शुद्ध सिद्धान्तको परिणाम त त्यसले अवश्य भिक्ला तर के त्यस्तो परिणाम र शोध जीवनको अनन्तमुखी सत्त्वसँग नितान्त टाढाको कुरा हुँदैन भन्ने के प्रमाण यदि इन्द्रियानुभूतिको मापदण्डबाट त्यसलाई विचार नगर्ने हो भने ? यदि त्यो रातको अनुभवलाई कुनै उपायले आफ्नो जीवनबाट परिष्कार गरेर मेटिदिन सकेको भए उनीहरूलाई सजिलो पर्ने थियो। तर, अब त्यो कसरी सम्भव हुने हो र ? जुनसुकै चिन्तन र जुनसुकै कार्यमा उनीहरू लागिरहेका भए पनि त्यो अनुभव उनीहरूका उपर निरन्तर व्याप्त नै रहन्थ्यो, उनीहरूले फेरेको साससम्मलाई पनि सुगन्धयुक्त पारेर। र उनीहरू आफैं पनि त्यो अनुभवको आनन्दबाट मुक्त हुन चाहँदैनथे। उनीहरूको रिक्त जीवनलाई परिपूर्ण बनाएको थियो त्यही अनुभवले, उनीहरूको जीवन असमर्थ हुन गएको थियो त्यही घटनाले। यस्तै निरन्तरको द्वन्द्वमा सोमदत्त र पुलोमा छटपटाइरहन लागे।

पुलोमा एक्लै बसेर सोच्थी,– 'पाप के हो ? जीवनमा त्यसको कुनै लक्षण छ जो जीवनमा नै प्रकट हुन्छ घाउमा पीप प्रकट भएजस्तो ? मरेपछि पाप-पुण्य, दण्ड-पुरस्कार पाइन्छ भन्छन्, तर त्यो पनि त प्रतिकार्यमा पाइने वस्तु हो। त्यहाँ पनि पाप-पुण्यलाई चिनाउने, त्यसको यथार्थ रूप दर्शन गराउने कुनै लक्षण भेट्टाइँदैन। र यस जीवनमा दण्ड र पुरस्कारको प्रश्न पनि उठ्दैन। यस्तो स्थितिमा केलाई पाप र केलाई पुण्य भन्ने ? कुन्नि, सोमदत्तलाई यस जीवनमा पाप-पुण्य चिन्ने ज्ञान छ कि ! उनी त धर्मात्मा छन्; म पो पातकी भएँ। तर के साँच्चै नै म पातकी भएँ र ? त्यही त म

जान्न चाहन्छु। यतिका दिनपछि आजसम्म पनि त्यस रात्रिको अनुभवको सुखले मेरो शरीर पुलकित हुन्छ, त्यसको सम्झना मात्रले मेरो नारीशरीर द्रवित हुन्छ, उल्लासमा र मनमा सङ्गीतको सुमधुर ध्वनि सुनिएजस्तो भान पर्छ। पापको त्यस्तो अनुभूति त नहुनुपर्ने हो!'

सोमदत्त पनि एक्लै आफ्नो कोठामा बसेर कल्पनाको आनन्दलहरीमा तैरिन्थ्यो। गङ्गास्नानबाट कल्मष पखालेर जीउ र मन शुद्ध हुँदा जुन रमाइलो अनुभव हुन्छ, त्यस्तै भइरहन्थ्यो उसलाई अचेल। त्यो रातको अनुभव महागङ्गास्नान रहेछ, शरीर र मन दुवैलाई सदा-सदाका लागि पुलकित पार्ने। र, यस्तो अनुभव किन हुन गयो उसलाई? यौनसम्बन्धमा यस्तो शुचिताको बोध, यस्तो विपुल आनन्दको अनुभव? के यस्तो हुनु पापशक्ति त होइन? पाप के हो? के स्त्रीसमागमको सुखमा नै पाप निहित छ र? उसले शास्त्रादि ग्रन्थमा पढेको थियो, स्त्रीसमागममा पाप निहित छैन यदि आनन्द त्यसको उद्देश्य होइन भने र यदि समागमी स्त्रीपुरुष पतिपत्नी छन् भने। पुलोमा उसकी पत्नी थी र धर्मशास्त्रमा पनि उसका साथ यौनसम्बन्ध वर्जित छैन अपितु पुत्र-प्राप्तिको हेतुले स्थापित भएको सम्बन्ध समर्पित छ। यिनै सब कुराबाट सोमदत्त सानो सन्तोष प्राप्त गर्थ्यो। सोमदत्त आनन्दप्राप्तिको दोषलाई पनि तर्कले शुद्ध पार्न खोज्थ्यो– अन्ततोगत्वा, सम्भोगको संयोगजात, उब्जाउ वस्तु हो आनन्द। मुख्य प्राप्तिहेतु त सन्तान हो। पुलोमाले सन्तान धारण गर्न सकी भने आनन्दको दोषबाट ऊ मुक्त हुनेछ। तर के यति साधारण र सहज अनुभव थियो उसको र? भन्छन्, धर्मको सूक्ष्म गति छ। वायुजस्तो अदृश्यगोचर त्यसको प्रवेश छ। पापपुण्यको विवेचना गर्ने धर्म-दृष्टि अत्यन्त तीक्ष्ण हुन्छ। के सोमदत्त व्यावहारिक तर्कबाट धर्मको आँखा छल्न सक्थ्यो र? त्यस दिन राति कोसँग सम्भोग भएको थियो उसको? पुलोमालाई त उसले भोलिपल्ट बिहान ब्यूँझिएपछि मात्र देखेको थियो आफूसँगै टाँस्सिएर सुतिरहेकी। त्यसैले अनुमानबाट ऊ आज भन्छ, उसको समागम शास्त्रविहीन भएको छ आफ्नी सहधर्मिणीका साथ। त्यस दिन रातभरि उसले आफ्नो आलिङ्गनमा राखेकी नारी वास्तवमा आफ्नी पत्नी पुलोमा नै थी भनी स्वीकार गरे पनि के भावनामा ऊ सुम्निमाका साथ टाँस्सिरहन्थ्यो त रातभर? के सुम्निमा भन्ठानेर होइन र? त्यसो भए पाप र पुण्यको आधार के? शरीर या मन? दोषको मूल स्रोत कहाँ छ? देहजगत् अथवा भावजगत्मा? अहिलेसम्म पनि सोमदत्तले प्राप्त गरिरहेको आनन्दानुभूतिको कारण के यही होइन कि उसको आत्माले एक रात, भ्रममा परेर नै भए पनि सुम्निमालाई त्यस अनुभवबाट झिकिदियो भने त्यहाँ बाँकी नै के रहन जान्थ्यो र? सोमदत्तले उद्विग्न भएर भन्यो,– 'पाप भावनाजगत्को वस्तु हो।'

X X X

यस्तै अवसरमा एक दिन पुलोमाले सोधी,– "आर्यपुत्र! पापको रूप कस्तो छ? कसरी त्यसलाई चिन्ने? त्यसको स्वाद कस्तो हुन्छ? कसरी त्यो स्वाद थाहा पाउने? शरीर र मनमा त्यसको कस्तो अनुभव हुन्छ? के पक्षीद्वारा मङ्गल प्रभाती गाएर

जगाएको सूर्योदयजस्तो सुन्दर रूप छ त्यसको ? के त्यसको स्वाद मधुको जस्तो मीठो हुन्छ जिभ्रोमा ? के शरीर र मनमा त्यसको अनुभवमात्रले पनि, हलुको बतासले नदीको वक्ष कम्पित गर्ने लघु लहरजस्तो, आनन्दोर्मि उठाउँछ ?"

सोमदत्तले भन्यो,– "पुलोमा ! पाप मनको कुरा हो। तिमी निश्चिन्त होऊ। तिमीलाई यस्तो विचार अकारण आउँछ। तिमी पुण्यात्मा नारी छचौ। शरीरले पनि तिमी शुद्ध छचौ, किन्तु यदि शरीरबाट मात्र, मन चोखो नै रहेर केही कार्य हुन गएको छ जो तिम्रो दृष्टिमा दोषपूर्ण छ भने पनि; शरीर केवल मनको यन्त्र मात्र हो। मनले पाप र पुण्य कार्य गर्छ। तिमी व्यर्थै आफूलाई नधिक्कार ! पापी त म हुँ, मनबाट।"

सोमदत्तलाई लाग्यो, यस प्रकार पत्नीका सम्मुख आफूलाई दोषी भनेर केही अंशमा भए पनि ऊ पाप मोचन गरिरहेछ। पुलोमाले सोमदत्तको यस्तो अचिन्त्य कुरा सुनेर पतिभक्तिमा विह्वल हुँदै भनी,– "आर्य ! यो कस्तो असङ्गत कुरो तपाईं मलाई भनिरहनुभएको छ ? मलाई थाहा छ, मेरा पति ऋषि हुन्; उनबाट मनसा, कर्मणा कुनै पनि पाप हुन सक्दैन। म पो पापी नारी हुँ।"

सोमदत्त पत्नीका प्रति करुणाले गद्‌गद भयो र उसलाई स्वयं आफ्नो पाप पुलोमाको अज्ञानजनित पापभावनाले झन् गर्हित लाग्यो। उसले स्नेहार्द्र स्वरमा भन्यो,– "तिमीलाई थाहा छैन पुलोमा ! तिमी पवित्र छचौ, पापी म हुँ।"

पुलोमाले पनि अचानक गद्‌गद भएर भनी,– "त्यस्तो आज्ञा नहोस्, पतिदेव ! तपाईंलाई थाहा छैन, कति ठूलो पापकुण्डमा डुबेकी छु म।"

सोमदत्तले भन्यो,– "विश्वास गर पुलोमा ! मलाई सबै थाहा छ। तिमीबाट कुनै पापकर्म भएको छैन। निश्चिन्त होऊ तिमी।"

पुलोमाले केही संयत भएर एकछिनसम्म सोमदत्तको अनुहारलाई हेरी। उसको अनुहारमा स्नेहको स्निग्धता थियो तर पुलोमालाई एउटा कुराले भने विह्वल पाऱ्यो,– 'किन आज सोमदत्त ऊसँग यस्तो व्यवहार गरिरहेका छन् ? भन्छन्, मलाई सबै कुरा थाहा छ। के थाहा छ सबै कुरा उनलाई ? के त्यस रातको कुरा पनि थाहा छ त ?'

मनमा अत्यास मानेर पुलोमाले फेरि सोमदत्तको मुहारलाई राम्ररी हेरिरहन सकिन। उसले शिर निहुराई र निहुरिएर नै आँखाको कुनाबाट सोमदत्तको अनुहारलाई अध्ययन गर्दै एकपटक हेरी। सोमदत्त पुलोमालाई हेरिरहेको थियो, ऊ पनि वक्र आँखाले नै। पुलोमालाई त्यो क्षण असह्य भयो। ऊ जुरुक्क उठी र आफ्नो कोठामा आई।

कोठामा आएर पुलोमा अत्यन्त उद्विग्न भई। उसको मनमा एकनासले एउटै प्रश्न उठिरह्यो,– 'सोमदत्तको कथनको अर्थ के हो ? किन उनी भन्छन्, मलाई थाहा छ, के थाहा छ उनलाई ? यदि साँच्चै नै उनले त्यस रात हामीलाई देखेका भए ? यस्तो लज्जामय नग्नतामा कसरी उनीसँग जीवन बिताउन सक्छु र म ?' पुलोमा त्यत्रो सर्वनाशको कल्पना गर्न सक्दिनथी, र मनलाई कमजोर हुनबाट बचाउँदै उसले भनी,– 'अहँ ! उनलाई केही पनि थाहा छैन।'

कोठाको भूइँमा अस्ति रातिको दियोको तेलको चिह्न अझै बाँकी नै थियो, खैरिँदै गएको कालो धर्सो। त्यस दिनको रातिको सम्झनाले उसलाई आश्वासन पाएजस्तो भयो। ऊ एकछिनमै चङ्गा भई। उसलाई लाग्यो,– त्यो अनुभवको सुखलाई कसैले उसबाट खोस्न सक्दैन। यथार्थ सत्य त त्यो थियो, उसको सुख– जो त्यो रात कहिले पनि नसिद्धिने गरी उसको सम्पूर्ण जीवनलाई भर्न आएको थियो। त्यसैले ऊ ऐश्वर्यवती भएकी छे, भाग्यवती, सौभाग्यवती। यो तथ्यका सामु सोमदत्तको भनाइको के अस्तित्व जो ऊ आफैँ नै अस्पष्ट थियो ? वनको बाघले भन्दा मनको बाघले खाएको जस्तो आचरण किन गर्नु ? यसरी आफूलाई आश्वस्त पार्दै ऊ स्वप्नलोकमा पुगी जहाँ उसको सहचर केवल एउटा भिल्ल हुन्थ्यो र जहाँको ध्वनि केवल उसले बोलाएको स्वर साउती गरेजस्तो पुकार मात्र थियो,– 'पुलोमा ! पुलोमा !!' यस प्रकारको सुखतन्द्राबाट बिउँझिनेबित्तिकै पुलोमालाई च्वास्स काँडा बिझेजस्तै गरी उसको मर्मस्थललाई भेट्दै सोमदत्तको बोली सुनेको जस्तो लाग्थ्यो,– 'मलाई सबै कुरा थाहा छ !'

पुलोमा मनलाई दृढ पार्दै भन्थी,– 'के थाहा छ ? सोमदत्त ! तिमीलाई केही थाहा छैन। तिमीले सदासर्वदा मलाई दुःख र व्यथा मात्र दिन जान्यौ। तिम्रो यत्रो लामो सहवासमा मैले केवल पीडाको अनुभववाहेक, रित्तोपनवाहेक केही पाइनँ। आज मैले आफ्नो जीवनमा बल्लबल्ल एकपटक प्राप्त गर्न सकेको सुखलाई समेत तिमी त्यही अन्धशत्रुताले हेर्न खोज्दछौ, र भन्दछौ,– मलाई सब कुरा थाहा छ ! के थाहा छ र तिमीलाई ? सोमदत्त ! तिमी द्रोही हौ, मेरा ईर्ष्यालु हौ; त्यसै हुनाले अज्ञानमा पनि मेरो कुभलोको चेष्टा भइरहेको छ तिमीबाट।'

यस प्रकारका विचारको तरङ्गमा नै पुलोमाले सोची,– सोमदत्तसँगको उसको सम्बन्ध, बाह्यरूपले पतिपत्नीको भए तापनि, अन्तरहृदयमा भने वैरीवैरीको रहेछ। एउटाले अर्कोलाई मौका पाउनासाथ घात गर्ने ताकमा रहेका प्राणीजस्ता रहेछन् उनीहरू। पुलोमाले फेरि भनी,– 'सोमदत्त ! यदि तिमीमा मेरा प्रति त्यस्तो वैरभावना छ भने, ल सुन, म पनि तिमीलाई हृदयदेखि नै घृणा गर्छु।'

एक्लै कोठामा उसले मुख बिगारेर अनुभव गरी कि साँच्चै नै ऊ सोमदत्तलाई घृणा गर्छे। उसलाई लाग्यो, उसको जीवन अत्यन्त सुखपूर्ण हुने थियो, यदि उसको जीवनमा सोमदत्त नभएको भए।

उता सोमदत्तको मनमा पनि खुलदुली भइरहेको थियो। पुलोमा हठात् उठेर गएपछि उसको मन बेचैन भयो र ऊ कोठामा धेरैबेरसम्म ओहोरदोहोर गरी टहलिरह्यो। आज उसलाई बेचैन पार्ने एउटा विशेष कुरा हुन गएको थियो, उसले जुन बेला पुलोमालाई भनेको थियो,– 'पुलोमा ! मलाई सबै कुरा थाहा छ' ऊ झस्केकी थी। पहिलेपहिले वार्तालाप हुँदा जुन समर्पणको भावोद्वेगमा उसले आफूलाई पापी भनेकी थी, सोमदत्तको कुरा सुन्नेबित्तिकै मानौं उसको कान चनाखो भएको थियो। कसैले अज्ञातमा प्रहार पो गर्छ कि भनेजस्तो तर्सेर सचेत भएको गाईजस्ती भएकी थी ऊ। त्यस्तो चेष्टा

किन भयो ? मेरो सहज उक्तिका प्रति त्यस्तो सजग चेष्टा किन भयो उसको ? सोमदत्तको मस्तिष्कले धेरैबेरसम्म तर्क गरिरहनु परेन। उसको हृदयमा सहसा ईर्ष्यालु ज्वाला दन्कियो– पुलोमा आफ्नो गुप्त सुखलाई आफ्ना पतिवाट पनि गुप्त राख्न चाहन्छे। को भन्ठानेकी थी पुलोमाले त्यस रात सोमदत्तरूपी त्यो पुरुषलाई ? के उसको हृदयमा पहिलेदेखि नै कुनै भिल्लयुवक निवास गर्दैनथ्यो होला ? उसले आफ्नो किशोरावस्था जुन गाउँमा विताई त्यहाँ भिल्लहरू पनि वास गर्दथे। के त्यस बेला कुनै भिल्लयुवकले उसको हृदयमा निवास गरेन होला ? के त्यसैले होइन त्यस रात स्वातीको सीपीजस्तो पक्लक्क उघ्रेकी थी ऊ ? त्यस्तो तन्मयता अतीतकालको कुनै असम्पन्न वासनाको वर्तमान भोगतृप्तिले मात्र ल्याउँछ। सम्झिँदै ल्याउँदा सोमदत्तलाई लाग्यो, त्यस रात पुलोमा कसैलाई पर्खेर बसेजस्ती थी। उसको त्यस रातको चेष्टामा आनन्दको कठोरता थियो। के त्यो चेष्टा व्यभिचार चेष्टा होइन ? हठात् सोमदत्तले अनुभव गर्‍यो, उसले धोद्रो स्वरमा चिच्च्यायो,– 'असती नारी।'

सोमदत्तलाई जीवनका प्रति ठूलो विरक्ति उत्पन्न भयो। उसले शिथिल भएको अनुभव गर्‍यो।

x x x

यदि ठूलो समाजमा उनीहरूको निवास भएको भए हुनसक्छ, अरू किसिमका घटना तथा अरूहरूका साहचर्यद्वारा उनीहरू आफूलाई स्थिर राख्न सफल हुँदाहुन्। सम्भवतः एक रातको त्यो घटनाले समाजमा भइरहने ठूलासाना घटनाहरूका बीच आफ्नो स्वाभाविक रूप लिंदो हो, र हुनसक्छ, शनैः शनैः त्यसमाथि कालको पर्दा वाक्लिँदै जाने थियो। तर, त्यो सम्भव थिएन यो आश्रममा। जतिजति दिन बित्दै गए, घटनाहरूको अभावमा त्यो एउटा घटनाले अतिशय महत्त्व धारण गर्दै गयो, रोपिएको सूक्ष्म वीजले विशाल वटवृक्ष खडा हुँदै गएजस्तो। यदाकदा उनीहरूलाई लाग्थ्यो, जीवनमा त्यो एक घटनाको अतिरिक्त अरू कुनै कुरा नै छैन। त्यो वटवृक्षले उनीहरूको भूमिलाई सम्पूर्ण रूपले ढकमक्क ढाकेर राखिदियो। उनीहरूको समाज पनि केवल दुई जनाको; एउटाले अर्कोलाई कहिले पनि विर्सिन नपाउने। त्यसो हुँदा कहिले भने उनीहरू अस्वाभाविक पतिपत्नीभक्तिमा ओतप्रोत हुन्थे र एउटाले अर्काको मर्म बुझेर सहानुभूतिमा मनमनै भन्थे,– 'विचरी पुलोमा, अज्ञानमा दुःख भोगिरहेकी छे। विचरा सोमदत्त ! छलिएर ठगिएका छन् मनवाट, कठै !' र कहिले भने अकारण वैमनस्यको तोडमा एउटाले अर्कोलाई मनमनै सराप्न थाल्थे। त्यसो हुँदा उनीहरूको साधारण सम्वन्ध कायम हुनै पाएन। र साथै एउटा अर्को विषय पनि थियो उनीहरूको त्यो अस्तव्यस्त जीवनमा– प्रत्येक अङ्गमा भाँच्चिएको सम्वन्धमा– र त्यो थियो, त्यस रातको एउटै घटनामा सहभोग गरेको अनुभवको आफ्नाफ्नो एकान्त-चिन्तन।

प्रेम !– सोमदत्तले कहिल्यै पनि प्रेम भन्ने भावनालाई आफ्नो हृदयमा प्रश्रय दिएन । हो, प्रारम्भमा– उसको किशोरावस्थामा उसलाई एक-दुईपटक शरीरको आग्रह भएको अनुभव भएको थियो जब सुम्निमाको शरीरको आकर्षणबाट व्यग्र भएर उसले चीत्कार गरेको थियो,– "यो पाप हो.......यो आकर्षण नर्क हो ।" मनुवादहमा पनि त्यस्तै उग्र असंयम आग्रह प्रकट भएको थियो उसको जर्जर शरीरमा–तपको यज्ञको खरानीले छोपेको मानव प्रकृतिको उग्र वान्छा एकाएक धप्प बलेर फुटेको थियो उसको संयमसाधित मर्यादालाई भङ्ग गर्दै उसको शरीरमा । तर के त्यस्तो कामवासना पाप होइन ?– आज सोमदत्त आफ्नो किशोरावस्थाको दृढविश्वासको स्वर झिक्न सक्दैन–पाप हो त्यो । सुम्निमाको नग्नशरीर नर्क हो । अनास्वादित सम्भोगको सुख कल्पनाको वस्तु भएकोले एउटा किशोरलाई, जसको समस्त जीवन र भविष्य आफ्ना सम्भावनाका साथ सम्मुख उपस्थित रहन्छ, त्यसको उपेक्षा सहज हुँदो हो; तर समाप्तप्रायः नीरस यौवनलाई त्यस सुखको स्वाद, एकपटक मात्र नै भए पनि, पाएपछि त्यसको आकर्षण आफ्नो साँगुरिँदै गएको जीवनको शून्यताले गर्दा झन् असहनीय र दुर्दमनीय शक्तिका साथ आलोडित गर्दछ ।

एकपटक फेरि सोमदत्तले आफ्नो मनलाई ढाढस दिँदै भन्यो,– 'स्वस्त्रीगमन पाप होइन – धर्मशास्त्रनिहित कार्य हो यो । यद्यपि एक प्रकारको विस्मृतिमा यो कार्य सम्पादित भयो, तर मूलमा पनि, क्षणिक मदोन्मादमा पनि मेरो पग सत्पथका तर्फ नै गएको रहेछ । धर्मशास्त्रले मलाई कतैबाट पनि पक्रिन पाउँदैन– कतैबाट पनि आरोपको अङ्गुली मतिर देखाउन पाउँदैन ।'

तर, तैपनि एउटा कुराको मानोबाधा उसलाई छँदै थियो,– उसको शिक्षानुसार स्त्रीपुरुषको सम्बन्ध सन्तानोत्पत्तिको कामवासनाशून्य हुनुपर्छ । पतिपत्नीको सम्बन्ध त सोद्देश्यले मात्र शास्त्रानुकूल बनाउँछ, वासनाले त्यो सोद्देश्यलाई कलुषित पार्छ । निष्काम कर्म हो पतिपत्नीसमागम– यही त थियो उसको आजसम्मको शिक्षा ।

तर फेरि यही ठाउँमा आएर ऊ आफ्नो तर्कबुद्धि, शिक्षादीक्षा र शास्त्राचारसँग आफ्नो आनन्दको तारतम्य जोर्न सक्दैनथ्यो; त्यसैले ऊ बराबर बेचैन हुन्थ्यो । र कहिले आफूलाई धिक्कार्थ्यो र कहिले अकारण पुलोमालाई । तर ऊ कहिल्यै मुक्तकण्ठले सुम्निमालाई धिक्कार्न सक्दैनथ्यो । ऊ भन्थ्यो,– 'सुम्निमाको के दोष ?'

'त्यसो भए पुलोमाको नि ? उसको के दोष नि ?' उसले गद्गद भएर भन्यो,– 'उसको पनि केही दोष छैन;– न मेरो नै दोष छ । पतिको सहज, स्वाभाविक सम्बन्ध पत्नीका साथ स्थापित गरेर मैले निश्चय नै कुनै दोष गरेको छैनँ । त्यो सम्बन्धजनित आनन्द त्यस सम्बन्धको अप्रतिहार्य प्राप्ति हो ।'

'प्रेम त्यसैलाई भन्छन्'– एउटा नयाँ ज्ञान प्राप्त भएजस्तो गरी उसले भन्यो,– 'यो आनन्दको– यो प्रेम पतिपत्नीका बीच उत्पन्न भएकोले निर्दोष छ ।'

आज पहिलो पटक प्रेमको नयाँ प्रकाशमा उसले पुलोमालाई देख्यो। त्यस प्रकाशमा विगतयौवना पुलोमा एउटा अद्‌भुत सुन्दरताले महिमामण्डित भई। सोमदत्त व्यग्र भएर पुलोमाको कोठामा पुग्यो।

उक्त बेला पुलोमा आफ्नो कोठाको एकान्तको विलासलाई भोगेर बसिरहेकी थी। उसको शरीरले आनन्द मानिरहेको थियो र बीचबीचमा भिल्लयुवकको सम्झनाले उसको शरीरलाई अद्‌भुत विलासको अनुभव गराइरहेको थियो, कुनै आनन्दमयी स्वप्नमा डुबेजस्तो। त्यस विलास क्षणमा हठात् सोमदत्त कोठामा प्रवेश गरेकोले पुलोमाको स्वप्न भङ्ग भयो। ऊ संयत भएर बसी र शरीरको विलासजन्य शिथिलता अररो भयो; भरखरैको आनन्दभोगले तत्क्षण उसलाई छाडिदियो। उसले विरक्तिको दृष्टिले सोमदत्तलाई हेरी। हठात् उसलाई लाग्यो,– कस्तो कुरूप व्यक्ति उसको पति रहेछ!

सोमदत्त साग्रह आएर पुलोमाको अत्यन्त नजिक बस्यो, टाँस्सिएर। उसको स्पर्शबाट जोगिँदै पुलोमा अलि पर सरी। सोमदत्तले आर्द्र स्वरमा भन्यो,– "सौम्ये! म प्रेमकातर छु आज।"

पुलोमाले चकित भएर सोमदत्तलाई हेरी,– एउटा चाउरिएको अनुहारले रालबोली झिकिरहेको थियो। कुमबाट झरेका दुइटा सुकेका हात रूखका ठुटा हाँगाजस्ता थिए।

पुलोमाले भनी,– "कस्ता अशोभनीय वाक्य छन् तिम्रा आज, ब्राह्मण!" मर्माहत भएर सोमदत्तले भन्यो,– "के पतिमा प्रेम प्रादुर्भाव हुनु अशोभनीय हो र?"

पुलोमाले कठोर हुँदै भनी,– "तिमी मेरा पति हौ; तर हाम्रो सम्बन्ध प्रेमको होइन।"

सोमदत्तले पनि कठोर शब्द झिक्दै भन्यो,– "केको सम्बन्ध हो त हाम्रो, यदि प्रेमको होइन भने?"

"केवल कर्तव्यको"– पुलोमा दृढ थी,– "तिम्रा प्रति मेरो पत्न्युचित कर्तव्य छ; जस्तो तिम्रो मेरा प्रति पत्युचित। प्रेमको स्थान त्यहाँ कहाँ छ र?"

"सम्भोग नि?"

"त्यो प्रेमको आग्रहजनित वस्तु होइन। हाम्रा बीच त्यो कर्तव्यसम्पादनमात्र हो।"

सोमदत्त एकदम परास्त भयो तर, त्यसैले उसको रोष झन् उग्र भयो। उसले भन्यो,– "त्यसैले त तिमीबाट, पुलोमा! पत्नीले गर्नुपर्ने कर्तव्यको दावी गर्न आएको हुँ। खोइ मेरो कमण्डलु?" उसले अकारण चिच्च्याउँदै फेरि भन्यो,– "किन त्यो बिहाने-बेलुकै दुवै प्रहर माझिँदैन? खोइ मेरो मृगचर्म? किन त्यो नित्य घाममा सुकाईदैन? किन आँगन यथासमय लिपिँदैन? किन?.....किन?"

पुलोमाले अवाक् भएर एकछिन सुनी। अनि अत्यन्त वितृष्णाको स्वरमा भनी,– "ब्राह्मण! आज तिमी विमूढ भएर चिच्च्याइरहेका छौ।"

सोमदत्तले पुलोमाको कुरा राम्ररी सुन्दा पनि सुनेन; केवल उसको अनुहारमा आएर अडेको वितृष्णाको भावनालाई मात्र उसले लक्ष्य गऱ्यो। उसले धोद्रो स्वरमा चिच्च्याउँदै

भन्यो,– "म तँबाट पत्नीको पतिका प्रतिको कर्तव्यको दावी गर्न आएको छु आज, बुझिस् अभिउत्तरदायिनी असंस्कृता नारी ! म दावी गर्छु आफ्नो सम्भोगाधिकारको क्षण अहिले यहीं ।" पुलोमा जुरुक्क उठी । तीव्र क्रोध र उग्र घृणाले उसको शरीर काँपिरहेको थियो । उसले कटिमा बाँधेको वस्त्रको ग्रन्थि फुकाइदिई । उसको शरीरलाई छोपिराखेको एकसरो वस्त्र भूइँमा झऱ्यो । ऊ सर्वाङ्गनग्न भएर सोमदत्तको अगाडि उभिई । जस्तोसुकै क्रोधमा सोमदत्त भए पनि र प्रेमको जस्तोसुकै तीव्र आग्रहमा आएर उसले प्रेमको दावी राख्न खोजेको भए पनि निर्वस्त्रा पत्नीको रूप देखेर ऊ हठात् शान्त भयो । उसलाई आफ्नो शरीरबाट सारा शक्ति लुप्त भएजस्तो लाग्यो । क्रोधलाई आफ्नो हृदयमा स्थापित राखिराख्ने शक्ति पनि उसमा रहेन । चिसो देह भयो उसको । त्यस नीरव क्षणमा– पतिपत्नीको सूक्ष्म भए पनि न्यानोपनको लोप भएको क्षणमा– घृणा र क्रोधप्रकम्पित पत्नीको जीर्ण शरीर आफ्नो तमाम नग्नतामा सोमदत्तको चिसो आँखाको अगाडि उभिरह्यो । सोमदत्तलाई लाग्यो,–'कस्तो असुन्दर, कस्तो रसहीन, कस्तो सुकेकी, यो शरीर सुकेको काठको मूढो ! त्यसैले कस्तो बीभत्स नग्नता यो !'

क्रोधले भस्मीभूत भएकी पुलोमाले उस्तै लाञ्छना र घृणाको स्वरमा भनी,– "ए अश्लील पुरुष ! सम्भोगकामी, असंयमी ब्राह्मण ! ल, आफ्नो अधिकारको प्रयोग गर ।"

सोमदत्त एकदम परास्त भयो । जान भनी ऊ जुरुक्क उठ्यो । जाँदाजाँदै उसले लाञ्छना र असीम घृणाको स्वरमा भन्यो,– "अभिनिर्लज्ज नारी ! असंस्कृता बर्बर स्त्री ! छोप् त्यो आफ्नो बीभत्स नग्नता ।"

यति भनेर द्रुतगतिले ऊ कोठामा आयो र आफ्नी पत्नीको कुरूप शरीरलाई सम्झेर एकपल्ट अत्यन्त वितृष्णाका साथ उसले मुख बङ्ग्यायो । तर फेरि तत्क्षण नै उसको चेतनामा यही क्षणका लागि पर्खेर बसिरहेजस्ती सुम्निमाको नग्नशरीर उद्भासित भयो, असङ्ख्य अवसर, असङ्ख्य भङ्गिमाका साथ उसले देखेको त्यो दीप्तियुक्त काञ्चनदेह । उसले मनमनै भन्यो,– 'के नग्नता पनि त्यस्तो विभिन्न प्रकृतिको हुन्छ ? हुँदो रहेछ,– एउटा बीभत्स र कुरूप र अर्को सौम्य र सुन्दर । के स्वप्न पनि त्यस्तो भिन्न प्रकृतिको हुन्छ– सुखमयी स्वप्न र क्लेशदायी दुःस्वप्न ?'

पुलोमा धेरैबेरसम्म त्यसै उभिरही– नाङ्गी भएर । क्रोध र घृणाको वेगले उसको शरीर काँपिरहेको थियो, मानौं शीतले अनियन्त्रित भएको शरीर थर्थराइरहेको छ । उसले सोची,– 'यो के भएको हो ?' उसले स्पष्ट अनुभव गरी, घृणा र आक्रोशको वेगले कम्पित भएको छ उसको शरीर । तर किन ऊ त्यो कम्पनलाई थाम्न सक्दिन ? किन उसको क्रोध त्यस्तो असंयमी रूप देखाइरहेको छ ? उसले अत्यन्त प्रयत्न गरेर आफ्नो मनलाई त नियन्त्रणमा ल्याई, तर उसको देहको कम्पन तैपनि थामिएन । उसलाई लाग्यो,– आज उसको देह आफ्नो सम्पूर्ण यौवनकालको वञ्चना र रिक्तताको भोकले असह्य क्रन्दन गरिरहेको छ, र त्यो वञ्चनाको स्थूल रूप आफ्नो पतिलाई भेट्टाएर सञ्चित क्रोधको सम्पूर्ण तिक्तता त्यसैमा पोख्न थालिरहेकी छे । एकक्षणका निम्ति

त्यस्तो पनि भयो पुलोमाको जीवनमा त्यस दिन– र त्यो घडी– कि उसले आफ्नै वात्सल्यले द्रवित भएर आफ्नो शरीरलाई सुमसुम्याई– तिघ्रा, कम्मर, पेट र स्तन। अनि एकछिनपछि मानौं आफ्नो शरीर थुमथुम्याउन थाली– असह्य दरिद्र आमाले भोको बालकलाई भोजनको अभावमा स्नेह दिएजस्तो गरेर। पुलोमालाई आफ्नो जीर्णशीर्ण शरीरका प्रति ठूलो ममता जाग्रत् भयो। उसले स्नेहको मुलायम हातले आफ्नो शरीरलाई सुमसुम्याइ– तिघ्रा, कम्मर, पेट र स्तन। अनि एकछिनपछि मानौं आफ्नो शरीरलाई सुमसुम्याई शरीरको सहानुभूतिमा तातातो आँसु झार्न थाली। पहिले त एक-दुई ठूल्ठूला थोपा पेटमा झरेर गुड्लिँदै भूईंमा झरे; पछिचाहिं ऊ भूईंमा फालिएको धोतीमा मुन्टो गाडेर धुँक्कधुँक्क गर्दै रुन थाली। उसलाई लाग्यो, आज उसको सारा शरीर आँसुमा पग्लिएर सिद्धिन्छ। शनैः शनैः झन्‌झन् तीव्र क्रन्दनका साथ रुन लागी– रुदनको विलासमा सम्पूर्ण शरीरलाई छाडिदिएर। अब उसको आँसु अगिको जस्तो तीतो र तातो थिएन, न्यानो धाराको रूपमा उसलाई विलासको आनन्द दिँदै, उसको शरीरलाई हलुको पार्दै, बगिरह्यो धेरैबेरसम्म।

आँसु थामिएपछि उसको शरीर अत्यन्त हलुको भयो– घाउबाट विष निस्केर सञ्चो भएजस्तो। अनि उसलाई सम्झना भयो त्यस रातको घटना; र यसको स्मृतिले नै ऊ एकपटक आनन्दले काँपी। केही क्षणपहिले वितृष्णा र क्रोधले रन्किएर उसको शरीर काँपेजस्तै अहिले पनि त्यसरी नै काँप्यो, तर ठीक त्यसको विपरीत भावनाले–क्रोधको स्थानमा ममता र वितृष्णाको स्थानमा भावाकर्षणले। उसको मनमा अकारण सारा विश्वका प्रति सद्भावना जाग्रत् भयो। उसले भनी,– 'सोमदत्तको के दोष ? यदि दोष छ भने ममा पो छ। उनी त नितान्त निर्दोष छन्, र आज हाम्रो जीवनमा पहिलो पटक उनी आग्रहका साथ मकहाँ आएका थिए। मैले नै उनलाई अकारण तिरस्कृत गरेर फर्काइदिएँ। हाम्रो नै जीवनमा प्रथमवार प्रेमको उदय हुन खोजेको थियो। त्यसको उषाकालमा मैले त्यसलाई बादलले ढाकिदिएँ। प्रेम ! यसैलाई त भन्छन्, प्रेम जसलाई नपाएर हाम्रो दाम्पत्यजीवन निरर्थक र शून्य हुँदै गएको छ।'

उसले उठेर धोती फेरी, मुख पुछी र जीवनमा पहिलो पटक केशप्रसाधनमा उसको ध्यान गयो। कपालमा तेल लाएर कोर्दै पुलोमाले आफैंलाई भनी,– 'प्रेम ! आज यो अनौठो भावना मेरो हृदयमा उम्रेको छ– प्रेम !' उसले प्राङ्गणछेउको रक्तकरवीरको बोटबाट एउटा फूल टिपी र कपालमा घुसारेर, ऊ स्फूर्तिका साथ सोमदत्तको कोठामा पसी।

सोमदत्त क्लान्त भएर कुशासनमा बसेको थियो। यद्यपि उसको क्रोध शान्त भइसकेको थियो, तर उसकी पत्नीको वीभत्सताको रूपले उसको तीतो भएको मुख अझै मीठो भएको थिएन। ऊ मनमनै बराबर भनिरहेको थियो,– 'किन नारीको शरीर कुनैचाहिं त्यस्तो कुरूप, वीभत्स र विरक्तिकर– र कुनै भने त्यस्तो सुन्दर, सुरुचिपूर्ण, कलात्मक र आकर्षण ?' सयौं पटक उसको आँखाअगाडि सुम्निमा आउँथी र ऊ भन्थ्यो,– 'सुम्निमा किन त्यस्ती अनिन्द्य ?'

त्यसै बेला पुलोमा आइपुगी किञ्चित् सङ्कोच र क्षमायाचनाको कलिलो सङ्कोचका साथ; र सोमदत्तसँग अप्ठ्यारो मान्दै टाँस्सिएर बसी। अनि सुस्तरी उसको हातलाई आफ्नो हातमा लिई। सोमदत्तले हात तानेजस्तो गऱ्यो र अलिकति पर सर्दै भन्यो,– "यो के ?"

पुलोमालाई अचानक विफलताको शूलले घोचेजस्तो भयो उसको हृदयमा। तर पनि उसले स्नेहका ठूल्ठूला आँखाले सोमदत्तलाई हेरी; लज्जाले कुञ्चित थिएनन् क्षमा-याचनाका ती नेत्र, बरु आग्रहले विस्फारित थिए।

उसले साग्रह स्वरमा भनी,– "प्राणनाथ ! क्षमा गर्नोस् मलाई।"

सोमदत्तले कठोर शुष्क स्वरमा भन्यो,– "यो के ?"

तयसम्म पुलोमा पराभूत भइसकेकी थी। सोमदत्तको त्यस्तो रूखो व्यवहारले उसको हृदयमा उम्रिँदै गएको लालसा सुक्दै गयो। ऊ केही बोलिन।

ओठलाई केही खुम्च्याएर व्यङ्ग्यपूर्ण स्वरमा सोमदत्तले भन्यो,– "आज यो कस्तो परिधान पुलोमा ? र यो कस्तो केशविन्यास ? – यो रातो फूल ! लाग्छ, कुनै सुकेको वृक्षमा कसैले एउटा रक्तकरवीरको फूल घुसारिदिएको छ।"

अपमानको लज्जाले पुलोमा– मानौं भूईंमा गड्न लागी। उसलाई त्यस समय सबभन्दा बढी लज्जा त त्यो फूलले भएको थियो, जसलाई उसले आफ्नो केशमा घुसारेकी थी। ऊ नतशिर भई।

सोमदत्तले आफ्नो आक्रमण यथावत् नै राख्दै भन्यो,– "तिमी मर्यादाशून्य भएकी छयौ ! पापभावना जाग्रत् भएको छ तिम्रो वृद्ध शरीरमा, पुलोमा ! पाप।" पुलोमाले हठात् लज्जालाई त्याग्दै किञ्चित् रोषपूर्ण स्वरमा भनी,– "प्रणय के पाप हो, पतिपत्नीका बीचमा ?"

सोमदत्तले मनुवादहबाट फर्केको रातको कुरा सम्झ्यो, र त्यसपछिको आफ्नी पत्नीको बदलिँदै गएको आचरणलाई पनि। उसले ईर्ष्याको वाणीमा भन्यो,– "प्रणय आज कहाँबाट आयो तिमीमा ? कहाँबाट आयो शरीरलाई सिंगार्ने लालसा ? यो फूल कपालमा सिउरिने लालसा के कारणले उत्पन्न भयो ? कुन गुप्त अवाञ्छनीय कामनाले प्रेरित भएको छ तिम्रो प्रणय आज ?"

पुलोमाले केवल यति मात्र भनी,– "हृदयहीन पुरुष ! तिमी मेरा पतिका रूपमा मेरा शत्रु रहेछौ.......... हाय !"

सोमदत्तले आघातका उपर बढी आघात गर्दै भन्यो,– "नारी ! तिम्रो अचेलको आचरणले तिमीमा पाशविक वृत्ति जाग्रत् भएको छ भन्ने स्पष्ट पार्दछ। संयम र धैर्य त्यागेर, कपालमा तेल लगाई रक्तकरवीर घुसार्दै तिमी उन्मादिनीजस्ती छटपटिरहेकी छयौ। यो प्रणय होइन तिम्रो– मेरा प्रतिको आग्रह यो होइन– यो सतीत्व होइन। तिमी अनार्य भिल्लिनीजस्ती बर्बर भएकी छयौ।"

ईर्ष्याको वशीभूत भएर सोमदत्त पत्नीको आग्रहलाई कुनै परपुरुष भिल्लका प्रतिको आग्रह भनेर ठुकराइरहेको थियो । यो कुरा ऊ स्पष्ट रूपबाट भन्न चाहँदैनथ्यो, त्यस कारण उसका कुरा त्यस समय हेतुहीन र अप्रासङ्गिक लाग्थे । उसले भन्यो,– "तिमी अनार्य भएकी छचौ आफ्नो वृतिमा, स्वभावमा, शरीरको चेष्टामा । सम्पूर्ण आर्यसंस्कृति, शास्त्रशिक्षा, धर्मादेश तिमीबाट लोप भएको छ । ईश्वरले तिमीलाई छाडिसकेका छन्, त्यागिसकेका छन्.....।"

पुलोमा अहिलेसम्म लज्जाले जर्जर भएर पुनः स्वाभाविक क्रोधमा आइसकेकी थी । उसले भनी,– "सोमदत्त ! यो कस्तो तात्पर्यहीन, कस्तो असंलग्न कुरा बकिरहेका छौ तिमी ? कहाँबाट आयो ईश्वरको तर्क ? यहाँ ईश्वरको प्रश्न उब्जियो नै कसरी ?"

सोमदत्तले भन्यो,– "हाम्रा आर्य ईश्वरले तिमीसँग विदा लिइसके......। त्यसैले तिमी उन्मादिनी, असंयमी, अनार्य भिल्लिनी भएकी छचौ ।"

पुलोमाले चह्केर भनी,– "ईश्वर के हो ?"

सोमदत्तले शास्त्रार्थमा विजित पण्डितको अन्तिम निर्णय सुनाएजस्तो गरी भन्यो,– "त्यही हो ! तिम्रो यो प्रश्न नै प्रमाणित गर्छ कि तिमी ईश्वरशून्य भइसकेकी छचौ । यतिका वर्षपछि, यत्रो अध्ययन र धर्मानुष्ठानको यत्रो लामो जीवनपछि अब मर्ने बेलामा के प्रमाण चाहियो र !"

पुलोमाले शास्त्रार्थको विचार गरेर होइन, केवल अनुभवको आधारमा झट्ट आफ्नो मनमा उब्जिएको कुरा अनायास नै भनी,– "ईश्वर के हो ? के त्यो हाम्रो मानव-सम्भावना वा भनौं हाम्रो क्षमताको कल्पित रूप मात्र होइन र ? हाम्रो सम्भाव्यता र हाम्रो विकासशीलताको एउटा रूपमात्र होइन र ईश्वर ? के हाम्रो सम्भाव्यताको विकास ईश्वर होइन र जसलाई हामी आफ्नो अज्ञानताले सीमाबन्धनमा पार्न खोज्छौं ?"

सोमदत्तले प्रश्न गऱ्यो,– "त्यसो भए के तिमी शास्त्रका विधि-विधानलाई सीमाबन्धन भन्दछचौ ? त्यसो भए के तिमी हाम्रो शास्त्रलक्षित ईश्वरलाई अमान्य गर्छचौ ?"

पुलोमाले उत्तेजित भएर भनी,– "अहँ ! म ईश्वरलाई अमान्य गर्दिनँ । म त बरु त्यसलाई मात्र आफ्नो शरीरमा स्थापित भएको पाउँछु । म आफ्नो अन्धकामनामा अनुमोदित भएको......"

पुलोमालाई लाग्यो, यो निरर्थकको विवाद भइरहेछ । भावनाशून्य एउटा सुकेको पुरुषरूपी मूढोको अगाडि उसका अनुभवसिक्त वाक्यहरू अर्थहीन छन् । ऊ जुरुक्क उठी । तर जाँदाजाँदै भनी,– "ईश्वर हाम्रा शत्रु होइनन् ।"

ऊ आफ्नो कोठामा आएर थ्याच्च बसी, र मस्तकमा बिलौनाको हात राखेर भनी,– 'ओहो ! कस्ती मूर्ख म; र मेरा पतिको कस्तो वञ्चना ! कस्तो धोका ! केवल सत्य र निष्कपटता रहेछ त्यो महिमामय रात्रिको क्षण– अस्थायी घडीको अशेष आनन्द ।'

यस प्रकार स्त्री र पुरुषको स्वाभाविक बलवती भावनाले प्रेरित भएर पतिपत्नी प्रेमको सन्धानमा एउटाले अर्कोलाई आग्रहसँग पछचाउँथे, तर कस्तो निष्ठुर कि एउटाको

प्रेमको घडी अर्कोको वितृष्णाको क्षण हुन जान्थ्यो। प्रेमको पारस्परिक क्षण उनीहरूले सँगसँगै कहिले पनि भेट्टाएनन्। त्यस्तो प्रत्येक निष्फल साक्षात्कारपछि उनीहरू आपसमा झन्झन् टाढा-टाढा हुँदै गए।

एक दिन दिउँसो निष्कामभावनाले कोठामा बसेको बेला पुलोमालाई नारीको सहज ज्ञानबाट लाग्यो कि ऊ गर्भवती भएकी छे। अकारण नै आनन्द मान्दै ऊ जुरुक्क उठी। सुखले पनि त्यस्तो बेचैन गराउन सक्छ भन्ने उसले जानेकै थिइन। निष्प्रयोजन कोठामा डुल्न थाली। मनमा कुनै विचार थिएन, मानौं मस्तिष्क शून्य थियो। त्यही विचारहीन आनन्दको महासागर टलपल गरिरहेको थियो। ऊ त्यसै फुरुङ्ग हुँदै कुटीबाहिरको प्राङ्गणमा आई। प्राङ्गण धेरै दिनदेखि लिपिएको थिएन। ठाउँठाउँमा दूबो र मोथे माटोको पाप्रो फोर्दै निस्किरहेका थिए। ऊ रमाइलो मान्दै गोगृहमा पुगी। आनन्दले खपिनसक्नु भएर उसले कपिलाको गर्दनमा अँगालो हाल्दै भनी,– "गोमाता! कपिला माता! अब त म पनि माता हुने भएँ।" गाईले आङ सिरिङ्गसिरिङ्ग गरी र गर्दन कन्याइदे भनेर अलिकति अगि सर्दै गर्दन उचाली। पुलोमाले एकछिनसम्म कपिलासँग टाँस्सिएर उसको गलकम्बल सुमसुम्याई। अनि उसले सोची,–'यो शुभसंवाद सोमदत्तलाई पनि सुनाउनुपर्छ।'

स्फूर्तिका साथ सोमदत्तको कोठातिर हिँडिरहेका उसका गोडा कोठासम्म पुग्दानपुग्दै लज्जाले शिथिल हुँदै गए। सङ्कोचले शिर निहुराएर ऊ ढोकामा उभिरही। उसलाई यतिविघ्न लज्जा कहिल्यै लागेको थिएन। मन भने हर्षले आन्दोलित थियो– नाचिरहेको थियो, तर मुखमा थियो लज्जाको रक्तिम आभा। उसले आशा गरेकी थी, सोमदत्त आउलान्, उसलाई समाउलान् र ऊचाहिं उनको स्पर्शले झनझन् गड्दै जानेछ। असहनीय लज्जाभाव थियो पुलोमामा। आनन्दको त्यत्रो उद्रेक नभएको भए शायद लज्जा पनि त्यस सीमामा पुग्ने थिएन।

तर खोइ, सोमदत्तले त कुनै उत्साह पनि देखाएन। एकछिनसम्म ठूलो आशा लिएर पुलोमा ढोकामा उभिरही। केहीबेरपछि सोमदत्तले अत्यन्त शुष्क वाणीमा प्रश्न गर्‍यो,– "किन त्यसरी उभिएकी? भित्र आउने मन भए आए हुन्छ, आऊ।"

पुलोमाको भरखरैको उत्साह हठात् लोप भयो। उसलाई लाग्यो,– लज्जा अस्वाभाविक र असामयिक रहेछ। लज्जा त प्रेमीका प्रति प्रदर्शित गर्ने तत्त्व पो हो त!

उसले युद्धघोषणा गरेजस्तो चुनौतीको स्वरमा भनी,– "म गर्भवती भएँ।"

सोमदत्तले उस्तै नीरस स्वरमा उत्तर दियो,– "बेस भयो। अब तिमी पुत्रको कामना गर, जसले हाम्रो कुललाई तार्नेछ।"

पुलोमाले भनी,– "के त्यत्ति नै हो तिमीले भन्ने आज?"

सोमदत्तले पनि दृढ भएर भन्यो,– "अरू के भन्ने त? जुन काम साधारण नारी सहजै गर्न सक्छन् त्यसलाई यतिका दिनसम्म पनि गर्न नसकेर यदि आज तिमी सफल नै भयौ भने पनि कुन ठूलो कुरो भयो र!"

पुलोमाले उत्तेजित भएर भनी,– "तिमीलाई पिण्ड दिने व्यक्ति चाहिएको थियो, त्यो मैले ढिलो-चाँडो जे भए पनि दिने भएँ। तिमी माताको दृष्टिबाट यस घटनालाई विचार्न सक्दैनौ भने पनि कमसेकम पिताको दृष्टि त राख्न सक्थ्यौ।"

उत्तरमा सोमदत्त कुन्नि के भन्दै थियो, त्यसलाई सुन्दैनसुनी पुलोमा फनफनिँदै आफ्नो कोठामा आई।

सोमदत्तले तीतो कुरा निलेजस्तो गऱ्यो एकपटक, र मनमनै फतफतायो,– 'पेटको सन्तानले निमित्तका लागि मात्र मेरो वीर्य ग्रहण गरेको छ, नत्र भने त्यो हो कुन्नि कुन भिल्लको मानस-सन्तान!'

पुलोमाले आफ्नो कोठामा आएर आहतको स्वरमा आफैँलाई भनी,– 'भिल्लको घरमा म भएकी भए कत्रो उत्सव रचिने थियो त्यहाँ– ढोलकवादन र नृत्यका साथ!'

धेरै दिनसम्म यस विषयलाई लिएर उनीहरूले मनमनै आपसमा घृणा गरिरहे। पुलोमाले आफ्नो मर्मस्थलमा जस्तो व्यथादायी आघात पाएकी थी, उसले त्यसलाई बिर्सिन सकिन। उसलाई लाग्यो,– आफ्नो आनन्दको विस्वलतामा सुद्धि हराएर आफ्नो मर्म सोमदत्तको अगाडि उघारेकी थी उसले– गर्भवती नारीले सुखसंवाद सुनाउन भनेर पतिको द्वारमा लाजले गाडिँदै उभिएर। त्यो उघारिएको मर्मस्थलमा सोमदत्तले निर्दयतापूर्वक कोर्राको प्रहार गऱ्यो। के पतिको त्यस्तो हृदयहीनता कुनै नारीले बिर्सिन सक्छे र? आफ्नो नारीत्वको अहंको त्यत्रो असम्मान के पुलोमा बिर्सिन सक्थी र? उता सोमदत्त पनि पुलोमाको त्यस दिनको आचरणलाई के बिर्सिन सक्थ्यो र? त्यस दिन आनन्दमग्न भएर किन पुलोमा उसको ढोकामा उभिएकी थी? यो भन्नलाई कि तिम्रा लागि मैले पेट बोकिदिएकी छु! नारीमा व्यभिचारजनित त्यत्रो निर्लज्जता र त्यत्रो आनन्द सोमदत्तका लागि नितान्त अक्षम्य थियो।

यदाकदा उनीहरूमा अस्पष्ट र परोक्ष रूपबाट घोचपेच हुने गर्थ्यो। एक दिन उनीहरूको वादविवादले मर्यादाको सीमा उल्लङ्घन गऱ्यो। तृतीय प्रहरको अवकाशकाल थियो। सोमदत्त आफ्नो कोठामा एक्लै बसेर सोचिरहेको थियो–आजकाल प्रायः ऊ यसरी नै सोचमा मग्न रहने गर्थ्यो। उसको मन बराबर घाउलाई छुन पुग्ने औंलाजस्तो पुलोमाको गर्भधारण गरेको कुरातिर पुग्थ्यो। ईर्ष्याको अग्निको कस्तो प्राणान्त आकर्षण कि सोमदत्त पुतलीजस्तो बराबर त्यो अग्निशिखामा बल्न पुग्थ्यो। उसले सोच्यो,– 'यतिका वर्षसम्म म पिता हुन असफल भएँ। मेरो अथक परिश्रम र प्रयासले पनि पुलोमा बन्ध्याको बन्ध्या नै रही। ममा कुन त्यस्तो अनाकर्षण थियो कि पुलोमाको गर्भ मेरा प्रति रुद्धको रुद्ध नै रह्यो। कुन त्यस्तो तत्त्व त्यस रात प्रकट हुन गयो उसको अन्तर्हृदयमा कि निर्बन्ध भएर ऊ उद्घाटित भएकी थी र तत्क्षण आफ्नो गर्भमा वीर्यधारण गर्न समर्थ भई? कसरी तत्क्षण नै पुलोमा उर्वर हुन गई?' क्रोध र ईर्ष्याले शिथिल भएर उसले स्वीकार गऱ्यो,– 'म थिइनँ उसका लागि त्यस रात; ऊ रमण गरिरहेकी थी अरू कसैसँग त्यस बेला!' एउटा सिहरनका साथ उसले सम्झ्यो त्यस

रातकी पुलोमाको दुर्दान्त चेष्टा। त्यस्तो उग्र, प्रचण्ड रूप त उसले कहिले पनि देखाएकी थिइन पहिले। मर्माहत भएर ऊ फेरि करायो,– 'म थिइनँ उसका लागि त्यस रात। आजसम्म पनि छैनँ उसको गर्भको पिता।'

ईर्ष्याको दाहले छटपटाउँदै ऊ कोठाबाट बाहिर निस्क्यो। त्यसै बेला उसको दृष्टि एउटा वृक्षको आडमा बसेकी पुलोमामा पऱ्यो; ऊ एकाग्रचित्तले आफ्नो उक्सिएको पेटलाई हेरिरहेकी थी। धोतीलाई कटिभन्दा मुनि सारेर। एकान्त खोजेर ऊ त्यहाँ पुगेकी थी। हृदयमा उमङ्ग लिएर ऊ बिस्तार-बिस्तार आफ्नो पेटलाई हातले मुसार्थी। मातृत्वको एकान्त चिन्तनबाट उत्पन्न भएको सुखसागरमा डुबेर उसले त्यस क्षण सम्पूर्ण संसारलाई बिर्सेकी थी। उसको सन्तोषले दीप्त अनुहारलाई देखेर सोमदत्त क्रोधले दग्ध भयो। ईर्ष्याको पराकाष्ठामा पुगेर उभिएको सोमदत्तले त्यहींबाट करायो,– "नारी ! तिमी कुन कुरामा यस्तो आनन्दविभोर छयौ ? म थिएँ त्यस रात, बुझ्यौ तिमीसँग।"

ईर्ष्यामा भन्छन्, मानिसको हत्यावृत्ति उत्पन्न हुन्छ। त्यही वृत्ति जाग्रत् भएको थियो सोमदत्तमा;– 'आफू दग्ध हुन्छु भने पुलोमाको सुखलाई पनि भस्मीभूत पार्छु।'

पुलोमा आतिएर उठी– तल सरेको धोतीलाई हत्तपत्त पेटमा टाँस्दै। सोमदत्तले फालेको वाणीप्रहारले आहत भएर ऊ चिच्च्याई,– "कुन रात ? कुन रात ?"

सोमदत्तले उस्तै गरी चिच्च्याएर नै उत्तर दियो क्रोधमा,– "त्यही रात, जुन रात तिमीलाई आफू व्यभिचाररत छु भन्ने लागेको थियो। मै हुँ भिल्ल त्यस रातको, दुर्मते !"

पुलोमाको मातृहृदय पनि दानवी भयो। उसलाई लाग्यो,– सोमदत्त उसको आजीवनको शत्रु हो जो उसको मातृत्वको हत्याका लागि उद्यत भएर आएको छ। उसको पनि क्रोधको सीमा रहेन। उसले पनि कड्केर भनी,– "ब्राह्मण ! बुझें, बुझें मैले,– हो, तिमीले देखेछौ आफ्नै आँखाले कि तिम्री ब्राह्मणी कति पतिव्रता रहिछ। तर निर्दयी ! आज तिमी मेरो त्यो सुखलाई पनि हर्न खोज्दछौ आफू त्यस रातको भिल्ल भएँ भनेर। व्यभिचारको सुखको पनि ईर्ष्या गर्ने अधम पुरुष !" यत्रो बाझाबाझपछि उनीहरूको सम्बन्धमा अरू बाँकी नै के रह्यो र जब प्रकट वैरीको रूपमा उनीहरू त्यस दिन देखापरिसकेपछि ? त्यस दिनदेखि पतिपत्नीको सम्बन्धको सानो सामाजिक तन्तु पनि चुँडियो। उनीहरू एकदम एक्लै भए। पुलोमा पेटमा आफ्नो सन्तानलाई बढाउँदै र दिनभरि मनमा भिल्लको सम्झनाले कहिले आनन्दित र कहिले उदास हुँदै बस्न थाली। उसका सन्ध्यादि धार्मिक कार्य सबै समाप्त भए। सोमदत्त पनि एक्लै कोठामा बसिरहन्थ्यो, र कहिले-कहिले उत्तरतिरको ओसारामा गएर माथिको पहाडलाई टोल्लाएर हेरिरहन्थ्यो। त्यहाँ माथि कहिलेकाहीं धूवाँ आएको देख्यो भने ऊ मनमनै सोच्थ्यो,– 'सुम्निमाको गाउँ हो त्यो।'

समय पुगेपछि पुलोमाले छोरो जन्माई। प्रारम्भमा सोमदत्तले छोराप्रति पटक्क चाख लिएन। तर पछिपछि जब ऊ बामे सर्दै पुलोमाको कोठाबाट उसको कोठामा आउँथ्यो, उसलाई आफ्नो छोराप्रति माया उब्जिँदै गयो। बामे सरेको बालकलाई ऊ जुरुक्क बोक्थ्यो र भन्थ्यो,– "अन्ततः यो मेरै वीर्यको रचना हो। पुलोमा त मेरो वीर्य धारण गर्ने क्षेत्र मात्रै थी। क्षेत्रपति त म हुँ।"

अनि ऊ बालकलाई छातीमा टाँस्थ्यो। तर ठीक त्यसै बेला– जबजब ऊ छोरालाई माया गरेर बोक्दथ्यो तबतब उसलाई सुम्निमाको सम्झना हुन्थ्यो र अनि ऊ भन्थ्यो,– "यो मेरो पुत्र, सुम्निमाको मानस–गर्भमा उम्रिएको हो।"

तर कहिले भने यस्तो विचारमा लीन रहन्थ्यो कि छोरो नजिकै आएको ऊ देखिसहन्नथ्यो। क्रोधले ऊ चिच्च्याउँदै भन्थ्यो,– "भाग् यहाँबाट।"

चर्को डाँको सुनेर बालक अत्यासिन्थ्यो र रुन थाल्थ्यो। पुलोमा आफ्नो कोठाबाट दुगुर्दै आउँथी र छोरालाई टिपेर हत्तपत्त आफ्नो कोठामा लैजान्थी। अनि बालकलाई आफ्नो स्तन दिएर थपथपाउँदै भन्थी,– "किन गएको उता ? नजाने गर त्यता, मेरो राजकुमार !"

मातृस्नेहबाट आर्द्र भएर उसको स्तनबाट दूधको धारा बग्न थाल्थ्यो। ऊ एकोहोरो मायाले छोरालाई घेरैबेर म्वाई खान्थी।

सोमदत्त आफ्नो कोठामा एक्लै फतफताउँथ्यो,– "मेरो वीर्य नै भएर के भयो त ? माताका लागि त यो पुत्र व्यभिचार-वासनाको परिणाम हो। भिल्ल हो यसको मानस-पिता !"

पुलोमा आफ्नो चुम्बनले छोराको सम्पूर्ण मुख भिजाएर भन्थी,– "पितृविहीन अभागी बालक !"

यस्तो क्षुब्ध घरमा बालक हुर्कंदै गयो। उसको शिक्षादीक्षाको केही व्यवस्था भएन। उसलाई आफ्ना बाबुआमाको स्नेहको निश्चित आधार पनि थिएन। आमा अधिकांश अस्वाभाविक वात्सल्यको आधिक्यले उसलाई आफ्नो मायामा निस्सासिने जस्तो पारिदिन्थी; तर फेरि कहिलेचाहिं ऊ पनि अकारण नै क्रोधले उसलाई पिट्न थाल्थी,– "भाग्यमानी भएको भए मकहाँ जन्मिन आउने थिइनस्।"

छोरालाई पुलोमाले निर्दयतापूर्वक पिटेको देख्दा सोमदत्त कोठैदेखि कराउँदै आउँथ्यो र भन्थ्यो,– "राक्षसी नारी ! पतिको त तैंले सत्यानाश गरिस्, गरिस्, के अब पुत्रको पनि भक्षण गर्ने भइस् ?"

छोरालाई आफ्नो कोठामा लगेर सोमदत्त उसको कपाल स्नेहपूर्वक मुसार्दथ्यो, र भन्थ्यो,– "नजाऊ तिमी आमाको कोठामा; मेरै कोठामा बस्ने गर। र अब त अक्षरज्ञान पनि गर्नुपर्छ तिमीले।"

अन्योलमा परेको छोरो टुलुटुलु हेरिरहन्थ्यो।

छोरो अलि ठूलो भएपछि ऊ गाई लिएर कोशीतटमा जान लाग्यो। ऊ दिनभरि त्यहीं गाई चराएर डुलिरहन्थ्यो। थाक्यो भने ऊ शमीवृक्षको छायामा केहीबेर विश्राम गर्थ्यो, आफ्नो लट्ठी रूखको फेदमा अड्याएर।

एक दिन त्यहाँ एउटी बालिका आई, र उसले भनी,– "म सुम्निमाकी छोरी, तिमी नि ?"

उसले भन्यो,– "म सोमदत्तको छोरो।"

त्यही एक दिनको परिचयले उनीहरू आपसमा आकर्षित हुँदै गए। सोमदत्तको छोराको लागि दिनभरिको सबभन्दा रमाइलो वेला त्यही नै हुन्थ्यो जब ऊ गाई चराउनका निम्ति नदीतट पुग्दथ्यो। त्यहीं आइपुग्थी सुम्निमाकी छोरी पनि। दुवै संगसंगै खेल्थे, कुद्थे र रमाइलो गर्थे।

सुम्निमाकी छोरीको शरीरमा कुनै वस्त्र थिएन, ऊ सर्वाङ्गनग्न रहन्थी। र सोमदत्तको छोराले एउटा पातलो ठाडो लँगौटी मात्र लगाएको हुन्थ्यो।

एक दिन सुम्निमाकी छोरीले भनी,– "तिमी मेरो याबा।"

सोमदत्तको छोरो पक्क पऱ्यो, र यो देखेर उसले भनी,– "बुझेनौ ? याबा भनेको साथी।"

सुनेर केटो रमायो। उसले खुशी मानेर भन्यो,– "त्यसो भए तिमी पनि मेरो याबा।"

वालुवामा बसेर अर्थहीन बाललहडमा एउटाले अर्काको छातीमा औंलाले छुँदै उनीहरूले रटिरहे,– "तिमी मेरो याबा ! तिमी पनि मेरो याबा !!"

आफ्नो क्रीडाको नयाँ आविष्कारमा उनीहरू खूब रमाइरहेका थिए, हाँसिरहेका थिए। एकछिनपछि सुम्निमाकी छोरीले भनी,– "जाऔं याबा ! अब कोशीमा नुहाउन।"

उसको पछिपछि लाग्दै सोमदत्तको छोरो नदीमा पस्यो। उसले भनी,– "त्यो तिमीले लाएको टालो भिज्छ याबा ! त्यसलाई फुकालेर पाखामा राख, र अनि मात्रै पानीभित्र पस।"

घुँडासम्म पानीमा उभिएर सोमदत्तको छोराले भन्यो,– "बाआमाले देख्नुभयो भने रिसाउनुहुन्छ।"

सुम्निमाकी छोरीले चारैतिर हेरेर भनी,– "यहाँ कसले देख्छ र !"

सोमदत्तको छोराले एक झट्कामा कन्दनीबाट ठाडो कौपीन फुकाल्यो र तटको वालुवामा फाल्यो। उनीहरू धेरैबेरसम्म नुहाइरहे। साँझपख रातारात आँखा पार्दै सोमदत्तको छोरो आश्रम फर्क्यो। त्यस दिन ऊ थाकेर लखतरान परेको थियो।

## उपसंहार

आश्रम एक प्रकारले उजाडिँदै गइरहेको थियो। अब त्यहाँ यज्ञादि कार्य सम्पन्न हुन छाडिसकेको थियो। कुटीहरूका छाना धेरै कालदेखि मरम्मत नभएकाले ठाउँ-ठाउँमा चुहिन्थे। आँगनमा झार उम्रिएर जङ्गल भएको थियो। आश्रमको अगाडि र वरिपरि बस्न भनेर बनाएका चौताराहरूका ढुङ्गा एक-एक गरी खस्दै थिए। छोरो पाएपछि केही दिन त पुलोमा उत्साहित भएकी थी, तर उसको मन भने सन्तान उत्पन्न गर्ने प्रक्रियामा बिग्रियो। सुत्केरीमा उसको राम्रो स्याहार भएन। ऊ रोगीजस्तो हुँदै गई। उमेर छिप्पिएपछि गर्भधारण गरेकीले उसलाई आफ्नो जीवनको यावत् रस दिएर छोरालाई पेटमा हुर्काउनुपरेको थियो। शरीरबाट रित्तिएको पोषणको पूर्ति पछि हुन सकेन। छोरालाई जन्माउनासाथ ऊ बूढीजस्ती भई, र नानाथरी रोगव्याधिले उसलाई छोप्न थाल्यो। ऊ धेरैजसो कोठामा बसेर व्यथाले कराइरहन्थी। उसमा कुनै शारीरिक शक्ति बाँकी बचेन। दिन-प्रतिदिन ऊ सुक्दै गई............।

र उता सोमदत्त पनि बूढो हुँदै गयो। उसमा पनि अब जाँगर थिएन, मानौं अब ऊ जीवनको अन्तिम घडीको प्रतीक्षामा थियो। ऊ आफ्नो कोठाबाट विरलै निस्किन्थ्यो। अलिअलि गर्दै ऊ कोशीतटसम्म पनि जान छाड्यो।

एक दिन सोमदत्तको छोराले सुम्निमाकी छोरीलाई भन्यो,– "आमा बिरामी हुनुहुन्छ।"

उसले यो वाक्य भावशून्य भएर भनेको थियो, मानौं कुनै परचक्रीको बिरामीको संवाद सुनाइरहेको छ आफ्नी याबालाई। स्वरमा लेशमात्र पनि चिन्ताको भाव थिएन, मानौं आफ्नी आमाको रुग्णावस्थासँग उसको कुनै सम्बन्ध नै छैन; मानौं उसकी आमा हुनु र नहुनुमा उसका लागि कुनै भिन्नता छैन। आफ्ना पिता र माताको विषाक्त सम्बन्धका बीच हुर्किएको बालकले भरपूर वात्सल्य पाउन सकेन कुनैबाट पनि। दुवैको झगडाको आआफ्नो तर्कको पुष्टिका निम्ति चाहिने प्रमाणको रूपमा मात्र प्रयोग हुने गरिन्थ्यो ऊ, माताबाट पनि र पिताबाट पनि। त्यस कारण पुलोमाको निम्ति पनि आफ्नो छोरो परचक्रीजस्तो थियो– को-को नौलो केटोजस्तो त्यो आश्रममा।

भोलिपल्ट गाई चराउन ऊ तटमा आएन। सुम्निमाकी छोरी केही बेरसम्म शमीको छायामुनि उसलाई पर्खेर बसी, अनि बिस्तारो-बिस्तारो गोडा चलाउँदै डराई-डराई ऊ आश्रमतिर लागी। आश्रमको ढोकामा आएर उसले सुस्तरी बोलाई,– "याबा।"

सोमदत्तको छोराले सुन्यो। उसले बाहिर आएर भन्यो,– "बाबा ! मेरी आमा मर्नुभयो।"

यो संवाद सुन्नासाथ सुम्निमाकी छोरी कुद्दै आफ्नो गाउँ आई र आमाबालाई आश्रममा पुलोमाको मृत्यु भएको खबर सुनाई। उनीहरूले मरमद्दतका लागि गाउँबाट तल आश्रममा केही मानिसहरू पठाए।

सोमदत्तको छोराले केही दिनसम्म शून्य मान्यो। सोमदत्त स्वयं बिरामी थियो, त्यस कारण छोरो क-कसो गर्छ हेर्न पाएन। पुलोमाको मृत्युपछि त झन् ऊ थला नै पऱ्यो; ओछ्यानबाट उठ्नै नसक्ने भयो। छोरो दिनभरि गाई चराउन जान्थ्यो, बेलुका फर्केर पिताको सेवा-शुश्रूषा गर्थ्यो र दूध तताएर उसलाई खुवाउँथ्यो। कहिलेकाहीं सुम्निमाकी छोरी खानेकुरा लिएर आउँथी र भन्थी,– "आमाले पठाएको तिमीलाई।"

सोमदत्तको छोरो भन्थ्यो,– "तिमीलाई खोइ नि ?"

ऊ भन्थी,– "मेरो त पोलेको मासु छ, अर्कै पातमा ल्याएकी छु। आमाले भनेको, तिमीले खान हुन्न रे मासु। तिमी बाहुन हामी किराती..............त्यसैले।"

एक दिन भेट हुनेबित्तिकै सुम्निमाकी छोरीले सोमदत्तको छोरालाई सोधी,– "तिम्रो बालाई कस्तो छ ? आमाले सोधिपठा'को.......।"

सोमदत्तको छोराले उत्तर दियो,– "असाध्य बिरामी हुनुहुन्छ।"

साँच्चै भन्ने हो भने सोमदत्तलाई बाँच्ने आकाङ्क्षा थिएन। उसलाई लाग्थ्यो कि उसको सम्पूर्ण जीवन नै विफल भयो; ऊ त केवल मृगमरीचिकाका पछि पो जीवनभरि धाएछ। उसले जीवनभरि गरेको जप, पाठ, पूजा, तपस्या र मोक्षप्राप्तिको प्रयत्न सित्तै हुन गएछ। पुत्रप्राप्ति पनि बेकार भयो। पुत्रसँग कुनै ममता र निकटताको सम्बन्ध नै रहन सकेन। ओछ्यानमा लडेर मृत्युको घडी गनिरहेको सोमदत्त सोच्दथ्यो,– 'सारा उपलब्धि खोइ, उपलब्धि ?' र सोच्दा-सोच्दै हरेस खाएजस्तो गरी ऊ लामो सास फेर्थ्यो।

भोलिपल्ट सुम्निमा आश्रममा आई। उसकी छोरी पनि सँगै आएकी थी। सोमदत्तको अवस्था देखेर सुम्निमाले असाध्य दुःख मान्दै भनी,– "मलाई किन खबर गरेनौ सोमदत्त ?"

परिचित स्वर सुनेर सोमदत्तले आँखा उघाऱ्यो। सोमदत्तको शिरनजिक निहुरिएर उभिएकी थी सुम्निमा। ऊ अब युवती थिइन। ढल्न लागेको उमेर थियो उसको। उसकी छोरी आमासँगै टाँसिएर उभिएकी थी। केटीलाई देख्नेबित्तिकै सोमदत्तलाई कोशीतटमा सुम्निमालाई पहिलो पटक भेटेको सम्झना भयो। अहिलेकी यो छोरी ठीक पहिलेकी सुम्निमाजस्तै थी,– र त्यस्तै काँटकी। धमिलिँदै गएको चेतनामा सोमदत्त अतीतका अस्पष्ट सम्झनामा सुस्तरी डुब्दै गयो। अतीतका कुनै-कुनै क्षण धप्प बल्थे उसको स्मृतिमा र उसले आँखा चिम्ल्यो। उसलाई कुनै गहिरो स्थानमा प्रवेश गरेजस्तो हुँदै गयो। गहिरो-गहिरो र झन् गहिरो रिक्ततामा डुब्देछ, डुब्देछ। अतीतको स्मृतिले

गहिरो रिक्तताको त्यो प्रवेशलाई उसको मानसपटमा रमाइलो बनाइदिएको थियो। उसलाई लाग्यो,– ऊ भासिंदैछ अतीतको अस्पष्ट लोकमा। उसले फुसफुसे स्वरमा आँखा चिम्लिएको चिम्लेकै बोल्न खोज्यो,– "सुम्निमा !"

सुम्निमाले उसको ओठ काँपेको देखेर शिर झुकाई सोमदत्तको मुखनजिकै आफ्नो मुख लग्दै केही उच्च स्वरमा सोधी,– "के भनेको सोमदत्त ?"

सोमदत्तको शरीरमा एउटा सानो हलचल आयो, मानौं उसले सुम्निमाको स्वर सुन्यो चेतनाको अन्तरतम तलमा। तर तत्काले उसको शरीर निश्चल भयो।

सुम्निमाकी छोरीले सोधी,– "के भा' आमा ! उनलाई ? किन उनी नबोलेका ?"

आफ्नी छोरीको हात समाउँदै सुम्निमा कोठाबाहिर आई, अनि छोरीबाट आफ्नो आँखा जोगाएर उसले आँसु पुछी। तर तैपनि, उसका आँखाबाट दुई थोपा आँसु भूइँमा खस्यो।

यसरी सोमदत्तले आफ्नो दैनिक लीला समाप्त गऱ्यो।

बाहिर आएर सुम्निमा थचक्क पिँढीमा बसी र छोरीलाई अह्राई– "जा, छोरी ! गाउँबाट मान्छेहरू बोलाएर ल्याऊ।"

अनि उसले सोमदत्तको छोरालाई आफूसँग टाँस्दै भनी,– "अब तिमी मकहाँ, जाने; जान्छौ ?"

उसले भन्यो,– "म बाबासँग बस्छु।"

सुम्निमाले सोधी,– "को हो तिम्रो बाबा ?"

औंलाको सङ्केतले गाउँतिर कुद्दै गइरहेकी केटीलाई देखाएर भन्यो,– "उः त्यो हो मेरी बाबा।"

उत्तरमा सुम्निमाले सोमदत्तको छोरालाई आफ्नो छातीमा टाँसी र स्नेहले उसको म्वाईं खाई।

सोमदत्तको दाहसंस्कार समाप्त गरेपछि सुम्निमाले सोमदत्तको छोरालाई आफैंसँग गाउँ लिएर गई। आश्रमका भाँडाकुँडा, लुगाफाटा सबै बोकाएर उसले आफ्नो घरमा ल्याई र आश्रमको गाई पनि आफ्नो गोठमा हुली।

आश्रमबाट ल्याएका सबै चीज, वस्तुलाई एकएक गरी केलाएर हेरी सुम्निमाले– लँगौटी, धोती, कमण्डलु, मूजको डोरी, पिरा, कुशासन। अनि भनी,– "यी सब चीज-बीजको गाउँमा के काम ?"

तर उसले सोमदत्तको छोरालाई सोधी,– "तिमी राख्छौ बाबुको चिना– यी सबै सामान ?"

छोरालाई बाबुका प्रति कुनै प्रकारको स्नेहभावना थिएन। त्यसो हुँदा उसले बाबुको सम्झनाका लागि कुनै वस्तु राख्ने आवश्यकता देखेन। मृत पिताका ती सबै वस्तुहरू उसका लागि नितान्त अनावश्यक थिए। उसले भन्यो,– "नाइँ, राख्तिनँ !"

बाबुआमाको सम्झौटोस्वरूप कुनै एक वस्तु राखिहाल्छ कि भनी फेरि सुम्निमाले केटालाई सोध्दा उसले किञ्चित् घबराएको स्वरमा भन्यो,– "मलाई डर लाग्छ यी यहाँ ।" र ऊ सुम्निमाकी छोरीनजिक टाँस्सियो ।

यसरी आश्रम बिरानो भयो ।

किराती गाउँमा आएपछि केही दिनसम्म त सोमदत्तको छोरो आत्तिएर सुम्निमाकी छोरीलाई एकछिन पनि छोड्दैनथ्यो । पछिपछि ऊ सुम्निमासँग पनि लर्हासिंदै गयो र उसकी छोरीले भनेको सिको गरी सुम्निमालाई 'आमा' भन्न लाग्यो ।

ती दुवै केटाकेटी हुर्किंदै गए । नौलो ठाउँमा सोमदत्तको छोरो एकछिन पनि सुम्निमाकी छोरीलाई नछाडेर झन्-झन् पछ्याउन थाल्यो र झन्-झन् टाँस्सिँदै गयो । सुम्निमाकी छोरी पनि उसलाई पाएर दङ्ग पर्दै गाउँका पर-परका नयाँ-नयाँ ठाउँमा घुमाउँदै लान्थी । गाउँका केटाकेटीसँग उसको परिचय गराउँदा ऊ अभिमानले मख्ख पर्थी र भन्थी,– "बुझ्यौ, यो मेरो यावा हो । तलको आश्रमको बाहुनको छोरो ।"

सोमदत्तको छोरो लाज मानेर उभिरहन्थ्यो, अनि, सुम्निमाकी छोरी उसको हात समाएर भन्थी,– "ल, जाऔं वनमा फूल टिप्न ।"

कहिलेकाहीं सोमदत्तको छोरो भन्थ्यो,– "तल कोशीकिनारमा नजाने, यावा ?"

उसको आग्रहले सुम्निमाकी छोरी ऊसँगै तटमा आउँथी । त्यहाँ कहिले बालुवामा लडीबुडी गरेर खेल्थे, कहिले पानीमा पौडिएर र पानी छ्यापाछ्याप गरेर दिनभरि रमाइलो गर्थे । कहिले-कहिले भने सोमदत्तको छोरो शमीको रूखको फेदमा पिठ्यूँ अडाई त्यसै टोलाएर बसिरहन्थ्यो । सुम्निमाकी छोरी ऊनजिकै आउँथी, उसलाई टोलाएर बसेको देखेर सोध्थी,– "के भो यावा ? किन यसरी बसेको ?"

सोमदत्तको छोरो झस्किएर उठ्थ्यो र भन्थ्यो,– "हिंड त यावा ! एकचोटि आश्रम हेर्न जाऔं !"

सुम्निमाकी छोरी भन्थी,– "अब त्यहाँ के छ र जाने ?"

तैपनि केटो ढिपी गर्थ्यो र उनीहरू आश्रम जान्थे ।

एक दिन आश्रम पुगेपछि सोमदत्तको छोराले भन्यो,– "गोठ-घर त लडेछ, हेर !"

सुम्निमाकी छोरीले भनी,– "मलाई डर लाग्छ सुन्ने घरमा ।"

आश्रमका ढल्न लागेका कुटीबाट कहिलेकाहीं स्याल निस्कन्थे । सुम्निमाकी छोरी डराउँदै भाग्थी । सोमदत्तको छोरो पनि डराएर केटीपछिपछि दगुर्थ्यो । कुद्दै कोशीतटमा आएर उनीहरू थामिन्थे । बेस्तोडसँग दगुरिरहेका हुँदा उनीहरूको दमफुल्थ्यो, र सुम्निमाकी छोरी स्वाँस्वाँ गर्दै भन्थी,– "किन तिमीलाई आश्रम गइरहन मन लाग्छ ?"

सोमदत्तको छोरो उत्तर दिन्थ्यो,– "मलाई पनि त्यहाँ जान डर लाग्छ यावा !"

तर फेरि पनि उसैको जिद्दीले उनीहरू गाउँबाट तल झर्थे र कोशीको किनारमा दिनभरि रमाइलो गरेपछि डराई-डराई आश्रम जाने गर्थे। कहिलेचाहिं तर्सेर आश्रमको ढोकाबाटै फर्किन्थे गाउँतिर।

एक दिन छोरीले सुम्निमालाई भनी,– "हेर न आमा ! मेरो यावा कहिलेकाहीं त्यसै टोलाएर बस्छ। मसँग खेल्दा पनि खेल्दैन।"

सुम्निमाले छोरीलाई सम्झाई,– "तेरो यावा बाहुनको छोरो हो। उसका बा ठूला तपस्वी बाहुन थिए। त्यसो हुनाले उसको मनमा नानावली कुरा खेलिरहँदो हो; त्यसैले टोलाउँदो हो।"

छोरीले भनी,– "त्यसो भए मेरो यावा मलाई माया गर्दैन त ?"

छोरीको निन्याउरो मुख देखेर सुम्निमाले भनी,– "किन त्यसो भन्छेस्, छोरी ! ऊ तँलाई माया गर्दैन र ?"

"माया गर्ने भएको भए ऊ किन आश्रम गइरहन्छ त ? मलाईचाहिं डर लाग्छ त्यहाँ।"

सुम्निमाले भनी,– "बाबुआमा नभएको छोरालाई कहिलेकाहीं बाबुआमाको सम्झना पनि त हुँदो हो नि !"

सुम्निमाकी छोरी उठेर बाहिर आई र सोमदत्तको छोरालाई खोज्दै हिंडी। ऊ एउटा ठूलो ढुङ्गामा बसेर आकाशतिर हेरिरहेको थियो। सुम्निमाकी छोरी उसको जीउसँग टाँस्सिएर त्यही ढुङ्गामा बसी, र सोमदत्तको छोराले मायालु स्वरमा भन्यो,– "यावा ! हेर, कति रमाइलो छ !"

सुम्निमाकी छोरीले भनी,– "के रमाइलो छ, यावा ?"

सोमदत्तको छोराले भन्यो,– "हावा।"

सुम्निमाकी छोरी खित्का छोडेर हाँसी। उसले भनी,– "हावा पनि रमाइलो हुन्छ र कहीं, यावा ? मलाई त तिमी रमाइला छौ। हावा छुन सकिन्न, तिमीलाई त हेर, म छुन पनि सक्छु।"

सोमदत्तको छोरासँग झन् नजिक टाँस्सिएर सुम्निमाकी छोरीले उसको कम्मरलाई आफ्नो हातले बेरी। सोमदत्तको छोराले पनि सुम्निमाकी छोरीको काँधलाई आफ्नो हातले बेर्‍यो। तर दुवैले केही पनि बोलेनन्,– केही बोल्न सकेनन्।

एकछिनपछि सुम्निमाकी छोरीले सोधी,– "यावा ! तिमीलाई आफ्नो आमाबाबुको सम्झना हुन्छ, हगि ? त्यसैले तिमी दुःख मान्दछौ ? त्यसैले तिमीलाई यहाँ रमाइलो लाग्दैन, होइन ?"

ऊ केही बोलेन। सुम्निमाकी छोरीको गला भरिएजस्तो भयो। उसले रूलाजस्तो गरेर भनी,– "यहाँ सबै जना तिमीलाई माया गर्छन्। यो घर तिम्रो हो। मेरी आमा तिम्री पनि त आमा ! हो नि, म पनि त तिम्री नै हुँ नि !"

कहिलेकाहीं सुम्निमालाई पनि चिन्ता हुन्थ्यो। उसकी छोरी र सोमदत्तको छोरो अब केटाकेटी थिएनन्। केही दिनमा अब पूर्ण युवावस्थामा पुग्छन् उनीहरू। अब उनीहरूको के हुने हो भन्ने दुश्चिन्ता हुन्थ्यो सुम्निमालाई। उनीहरू दुवै आपसमा माया गर्छन् भन्ने सुम्निमालाई थाहा थियो, र त्यस कारण उसले आफ्नो मनमा यी दुवैलाई पतिपत्नीको रूपमा देख्न थालिसकेकी थी। तर कहिलेकाहीं उसलाई दुश्चिन्ता हुन्थ्यो,– बाहुनको छोरो र किराती केटीको सम्बन्धको परिणाम कस्तो पो हुने हो कुन्नि ! उनीहरू अर्कै खालका मानिस हुन्, हामी अर्कै खालका। सोमदत्तको छोरो किराती समाजमा हुर्केकै भए पनि के भो र, उसको रगत त आर्य ब्राह्मणको नै छ !'

कहिलेकाहीं सुम्निमाकी छोरी पनि उसको व्यवहार देखेर आमाकहाँ आएर घबडाउँदै भन्थी,– "हेर न आमा ! कहिलेकाहीं ऊ मसँग बोल्दा पनि बोल्दैन। मनमा कुन्नि के के कुरा गुनिरहन्छ। सोध्यो भने भन्छ,– 'त्यसै बसिरा'को, यावा ! उः तल हेर त; आश्रमको शिमलको रूख ढलेछ, देख्दिनौ ? त्यै हेरेर बसिरा'को।' हेर न आमा ! यस्तै कुरा गर्छ कहिलेकाहीं ऊ। रूख ढल्यो भनेर सुन्नेतिर किन टोलाएको होला ?"

सुम्निमा पनि धेरै पटक सोमदत्तलाई सम्झिरहन्थी र उसको सम्झनामा धेरैबेर-सम्म ऊ बसिरहन्थी। 'अब त ऊ आफू पनि बूढी हुँदै गएकी छे। कति बाँच्ने हो र अब ? यी केटाकेटीको पो के हुने हो ? छोरीले सुख-दुःख के पाउने हो बाहुनको छोराका साथ जीवनमा ?'

सोमदत्तको छोरो र सुम्निमाकी छोरीका बीच एउटाले अर्काको कुरा नबुभ्ने घडी बराबर आइरहे तापनि दुवैको आपसमा अत्यन्त प्रेम थियो। उनीहरू सुस्तरी युवावस्थामा पदार्पण गर्दै गए। उमेरका साथसाथ जतिजति प्रेम बढ्दै गयो उतिउति उनीहरूको व्यवहारमा असजिलोपन पनि थपिँदै गयो। उनीहरूको कोठा छुट्टियो। गाउँभन्दा बाहिर घुम्न गएका बखत जतिसुकै स्वच्छन्द भएर हिँड्ने गरे तापनि गाउँ पुग्नासाथ उनीहरूले आपसमा समाएको हात फुस्काएर अलग-अलग ठाउँ पस्थे। एउटाले अर्कोलाई बोलाउँदा पनि मधुरो स्वरमा भन्थे,– "यावा !" उनीहरूले आफूलाई दुलहा-दुलही भनेर रोजिसकेका छन् भन्ने गाउँलेका मनमा समेत परिसकेको थियो।

एक दिन उनीहरू सधैंको जस्तो गाउँभन्दा बाहिर जङ्गलतिर आएका थिए। डुल्दाडुल्दै लहडमा उनीहरू तल कोशीतटनिर झरे। तर तल आएर उनीहरूले पहिलेको जस्तो रमाइलो गरेनन्। न बालुवामा लडीबुडी गरे; न पौडी खेल्न कोशी नदीभित्र नै पसे। पहिलेको जस्तो लहडमा आएर गीत पनि गाएनन्। केही नबोलेर, केही नगरेर उनीहरू चुपचाप शमीको वृक्षमुनि धेरैबेरसम्म त्यसै बसिरहे। प्रेमले पारेको असाध्य भारी घडी थियो त्यो। सोमदत्तको छोराले धोद्रो स्वरमा भन्यो, सुकेको घाँटीलाई थुक निलेर भिजाउँदै,– "यावा ! म तिमीलाई प्रेम गर्छु।"

सुम्निमाकी छोरी बोल्नै सकिन। यत्रो एकान्तमा पनि उसलाई लाग्यो ऊ एउटा नयाँ लज्जाले किचिन लागेकी छे। उसले सोमदत्तको छोराको अनुहारलाई पनि हेर्न

सकिन। सोमदत्तको छोराले आफ्नो काँपिरहेको हातले उसको निहुरिएको मुखलाई उठायो। उसले आँखा चिम्लिदिई। सोमदत्तको छोराले उसलाई आलिङ्गनमा बेरेर उसको मुखबाट चुम्बन लियो। अनि मात्रै सुम्निमाकी छोरी बिउँझिएकी जस्ती भई। उसले पनि बलपूर्वक सोमदत्तको छोरालाई समाती। कोशीको कलकल ध्वनिको मधुरो स्वरमा प्रेममा एउटै डल्लो भएको उनीहरूको शरीरलाई शमीको घना छायाले छोपेर राखिदियो। उनीहरूलाई भने त्यस घडीको पट्टक्कै सम्झना भएन।

बेलुका घर फर्केर आउँदा उनीहरू आनन्दले रमाइरहेका थिए, तर, तैपनि बोल्ने कुरा केही नभएकोले निःशब्द थिए। हातेमालो गरेर उनीहरू घरसम्म आए। सोमदत्तको छोराले सुम्निमाकी छोरीको हातबाट आफ्नो हात छुटाएर ऊ घरको आँगनमा ठिङ्ग उभियो। सुम्निमाकी छोरीले मसिनो प्रेम-गद्‌गद स्वरमा भनी,– "बाबा !"

अनि पिँढीमा उक्लेर आफ्नी आमाको कोठाको ढोकाछेउमा गएर उभिई। ऊ लाजले भुतुक्क भएकी थी। उसको मुखबाट केवल 'आमा' भन्ने एउटा छोटो शब्द निस्क्यो शीत्कार गरेजस्तो स्वर, त्योभन्दा बढ्ता ऊ केही बोल्न सकिन। त्यसपछि उसले एउटा गोडालाई अर्कोले टेकेर शिर निहुराई र औंलो टोक्दै त्यहीं उभिरही। छोरीको यो लज्जाकातर अवस्था देखेर सुम्निमाले सबै कुरा बुझी; प्रत्येक युवतीको त्यस्तो एउटा घडी आउँछ जीवनमा। बुझेर पनि आमाले सोधी,– "के, छोरी ?"

छोरीले उत्तर दिइन। सुम्निमाले फेरि सोधी,– "ऊ कहाँ छ नि ?"

सुम्निमाकी छोरीले त्यही लज्जायुक्त अवस्थामा तल आँगनमा उभिएको सोमदत्तको छोरालाई आँखाको सङ्केत गरेर देखाई। ऊ पनि लाज मान्दै ढोकामा आई उभियो। सुम्निमा कोठाबाट बाहिर आई, र दुवैको शिरमा हात राखेर भनी,– "तिमीहरू सुखी भए !"

अनि छोरीलाई सम्बोधन गरेर भनी,– "छोरी ! आज तैंले जसलाई दुलहा मानेर रोजेकी छेस्, त्यो बाहुनको छोरो हो। उसको रगत अर्कै छ। कुन्नि के-केमा उसको मन लाग्छ। उनीहरू हावाका प्राणी हुन्,– हावामा धाइरहन खोज्ने। उनीहरूलाई यो जीवनको पूर्णताले सन्तोष हुँदैन। त्यसको शून्यताले उनीहरू आकर्षित हुन्छन्। त्यसो हुनाले उनीहरू शून्यतालाई खोज्दै नानावली तपस्या गरिहिँड्छन्। भोगविलास र आफ्नो शरीरसम्मलाई समेत त्याग्न उनीहरू बेर मान्दैनन्।......र तेरो रगतचाहिं अर्कै छ। तँ किरातीकी छोरी होस्। हामी किराती माटोका प्राणी हौं; माटोसँग हाम्रो प्रेम छ। जीवनमा रमाइलो र त्यसलाई भोग गर्नमा नै हामी निमग्न रहन्छौं, यसको अभावलाई हामी देख्दैनौं। हाम्रा लागि हाम्रो शरीर नै सबभन्दा प्यारो वस्तु छ। हामीहरूलाई बाहुनहरू धागो चुँडिएको चङ्गाजस्तो लाग्छ र उनीहरूलाई चाहिँ हामी माटाका गँड्यौलाजस्ता लाग्दा हौं।"

अनि फेरि सोमदत्तको छोरातिर फर्केर सुम्निमाले भनी,– "छोरा ! तिम्रा बा ठूला तपस्वी पुरुष थिए। भन्थे,– 'आत्माको चिन्तन नै सबभन्दा ठूलो कुरा हो।' तिमी

उनैका सन्तान हौ । आज तिमीले एउटी किराती छोरीलाई आफ्नी पत्नी बनायौ । उसको किराती स्वभाव चञ्चल छ । ऊ आफ्नो शरीरबाहेक अरू केही कुरो पनि चिन्दिन । तिम्रो उडाइमा कुन्नि कति टाढासम्म ऊ जान सक्ली । तर, यदि उसको जाति-परम्परालाई बुझ्यौ र उसले हिँडिरहेको बाटोलाई पनि देख्यौ भने मेरी छोरीलाई तिमी राम्ररी बुझ्न सक्नेछौ । छोरीले पनि तिम्रो कुरा बुझेर आफ्नो बाटोलाई केही छाड्न तयार हुनुपर्छ । त्यस्तै तिमीले पनि सम्झौता गर्ने प्रयत्न गर्नुपर्छ, आफ्नो बाटोलाई केही छाड्न तयार भएर । तिमीहरूको भलो होस् ! तिमीहरूका सन्तान सम्झौताको बाटो झिक्न सक्ने होऊन् !"

यति भनेर सुम्निमा कोठाभित्र पसी । सोमदत्तको छोराले आफ्नी वधूलाई सन्ध्याको अन्धकारमा हात समाउँदै आफ्नो कोठाभित्र लिएर आयो ।

त्यसको केही समयपछि सुम्निमा मरी । मर्नुभन्दा पहिले उसले आफ्नो नातिलाई हेर्न पाई । तल आश्रमका कुटीहरू एकएक गर्दै लडे । त्यहाँ फेरि जङ्गल उम्रिन लाग्यो । सोमदत्तको छोरो र उसकी पत्नी पनि छिप्पिँदै गए । उनीहरूका धेरै सन्तान भए । बूढो होउन्जेलसम्म पनि गाउँको दक्षिणतिर ठूलो ढुङ्गामा बसेर सोमदत्तको छोरो तलको जङ्गललाई हेरिरहन्थ्यो, र आफ्ना छोराछोरीहरूलाई भन्थ्यो,– "उः त्यहाँ तिमीहरूका जिबाको आश्रम थियो ।"

उनीहरू सोध्थे,– "कहाँनेर बा ?"

दक्षिणको जङ्गलतिर औंलो देखाएर ऊ भन्थ्यो,– "उः, उः त्यहाँ ।"

सोमदत्तको छोरो र सुम्निमाकी छोरीको मृत्यु भएपछि उनीहरूका सन्तानले आश्रमको थलोलाई चटक्कै बिर्सिंदै गए । आश्रमको स्थललाई पनि जङ्गलले ढकमक्क ढाक्यो । त्यहाँ कुनै कालमा आश्रम थियो भन्ने चिह्नसम्म पनि रहेन । भिल्लहरू शिकारका लागि त्यता आउँदा कहिलेकाहीं कुनै एउटा ढुङ्गालाई देखाएर भन्ने गर्थे,– 'प्राचीनकालको एउटा आश्रमको अवशेष हो यो; जो किरातीहरूमा जनश्रुति मात्र बाँकी रह्यो कि उनीहरूको जातिको एउटा शाखा, पछि रावा खोलातर्फ लाग्यो, -को एउटा पुर्खा आश्रमवासी बाहुन थियो रे ।'

प्रकृतिलाई कोतरेर आफ्नो स्थान बनाउन खोज्ने एउटा ब्राह्मणको थलोलाई प्रकृतिले फेरि आफ्नो पारेर लियो । भन्छन्, त्यही ठाउँमा त्रेतायुगमा विश्वामित्रको पनि त्यस्तै अवस्था भएको थियो रे ! किरातीहरूको जातीय रक्तधारामा एउटा ब्राह्मणले आफ्नो रक्त पनि मिसाएको थियो । त्यस जातीय रक्तको महासमुद्रमा एउटा थोपाको कुनै अस्तित्व रहेन । कोशीको अबाध गति प्रकृतिको विराट् शान्तिलाई चिर्दै बगिरह्यो सदाको जस्तो । वन र आकाशको नीरवतामा लोप भयो सोमदत्तको आश्रम ।

सुन्दरीजल, बन्दीगृह

१ ९६४ जुन,– २१, २२, २३, २४, २५, २६, २७, २८ ।

# बी. पी. कोइरालाका साहित्यिक कृतिहरू

**उपन्यास**

*(१) तीन घुम्ती*

*(२) सुम्निमा*

*(३) नरेन्द्रदाइ*

*(४) मोदिआइन*

*(५) हिटलर र यहूदी*

*(६) बाबु, आमा र छोरा*

**कथा**

*(१) दोषी चश्मा*

*(२) श्वेतभैरवी*

**जीवनी**

*आफ्नो कथा*

मूल्य : रु. ७५.००





मुद्रक : साझा प्रकाशनको छापाखाना, पुल्चोक, ललितपुर, फोन ५५२१०२३